मानवका लागि मानवअधिकार
मानवअधिकारका लागि उपयुक्त संस्कृति

# प्राची

पूर्णाङ्क ५३, पुस ०६१

संचेतना द्वैमासिक

- प्रेसका चार सिद्धान्त
- अभिव्यक्ति स्वतन्त्रता र कानुन
- द्वन्द्वको मार र स्वतन्त्रताको कलम युद्ध
- अभिव्यक्ति स्वतन्त्रताको हननले उब्जाएको प्रश्न



# संकटको घेरामा अभिव्यक्ति स्वतन्त्रता

# राष्ट्रिय दादुरा खोप अभियान २०६१/६२

## १ महीनादेखि १५ वर्ष मुनिका
## सबै बाल-बालिकाहरूलाई दादुरा खोप लगाऔं



**दादुरा खोप पहिले लगाएकाहरूले पनि लगाऔं**
**नलगाएकाहरूले त झनै नछुटाऔं**




unicef

मानवका लागि मानवअधिकार
मानवअधिकार लागि
उपयुक्त संस्कृति

# प्राची

संचेतना द्वैमासिक

वर्ष १३, पूर्णाङ्क ५३, पुस २०६१

**संस्थापक**
सुशील-प्रकाश

**सल्लाहकार**
सुबोधराज प्याकुरेल
कुन्दन अर्याल

**सम्पादक**
प्रकाश ज्ञवाली

**आवरण ले-आउट**
गोविन्द प्र. त्रिपाठी

**फोटो**
विमलचन्द्र शर्मा, इन्सेक
शालिकराम तिवारी
नेपाल पत्रकार महासंघ

**व्यवस्थापन**
शैलेश शर्मा




**अनौपचारिक क्षेत्र सेवा केन्द्र (इन्सेक)**
द्वारा प्रकाशित

पत्र मञ्जुषा : २७२६ काठमाण्डौ
टेलिफोन : ४२७८७७०
फ्याक्स : ४२७०५५१
इमेल : insec@insec.org.np
वेबसाइट : www.insec.org.np
www.inseconline.org

**मुद्रक**
जगदम्बा प्रेस प्रा.लि.
हात्तिवन, धापाखेल-१, ललितपुर




## संकटको घेरामा अभिव्यक्ति स्वतन्त्रता





### नियमित स्तम्भहरु



माओवादीका कारण हामीले निरन्तर अनिश्चितताको सामना गर्नुपरिरहेको छ। सरकारले वार्ताका लागि गरेको आव्हानवाट सृजित अवसरको सदुपयोग गर्न माओवादीमाथिको सामूहिक दवाव सहायक सिद्ध हुन सक्नेछ। राष्ट्रिय मानव अधिकार आयोगको अनुगमन तथा क्षमतामा सुधारका लागि संयक्त राष्ट्रसंघीय मानवअधिकारसम्वन्धी उच्चायुक्तसँग प्राविधिक सहायतामा हस्ताक्षर भएको छ। सरकार वेपत्ता पार्नेसम्वन्धी कार्य घटाउनेतर्फ गम्भीर छ।

– **प्रधानमन्त्री शेरबहादुर देउवा**, ०६१ पुस ५ गते काठमाडौंस्थित कुटनीतिक नियोगका प्रमुखहरुसँगको वैठकमा मन्तव्य व्यक्त गर्दै (अन्नपूर्ण पोष्ट दैनिक, ०६१ पुस ६)

---

अन्तर्राष्ट्रिय मानवअधिकारको स्थापित मान्यता, जेनेभा सन्धिका वालअधिकारसम्वन्धी कुरा र नागरिक सुरक्षाको विषयमा युद्धरत पक्षले वेवास्ता गरेको पाइनु दुःख लाग्दो कुरा हो। वालवालिका र नागरिकलाई युद्धबाट टाढा राखिनुपर्छ।

– **अन्नपूर्ण पोष्ट दैनिक**, ०६१ पुस ७

---

वाह्रवर्षे प्रजातन्त्रमा वोल्ने, लेख्ने, संगठित हुने अधिकारको यथेष्ट उपयोग गरिसकेको सचेत, सक्रिय र सार्वभौम जनमत प्रजातन्त्रको पक्षमा छ। तिनलाई भुक्याउन खोज्नु प्रत्युत्पादक रणनीति सावित हुनेछ। शिक्षा र चेतना उच्चतम वन्दै गएको वर्तमान अवस्थामा जनमतविपरीत ०१७ सालको पुनरावृत्ति गर्ने दुस्साहस कतैबाट गरिनु हुँदैन।

– **कान्तिपुर दैनिक**, ०६१ पुस १

---



हामीले राजासँग मात्र वार्ता गर्ने भनेको होइन, केवल पुरानो सत्ता र शाही सेनामाथि वास्तविक नियन्त्रण राख्नेसँगको वार्ताले मात्र राजनीतिक निकास सम्भव तुल्याउन सक्छ भनिएको हो। हाम्रो भनाइको गलत अर्थ लगाइदिनु भएन। देशका प्रमुख राजनीतिक दल, नागरिक समाज र वौद्धिक समुदायसँग त प्रत्यक्ष वा अप्रत्यक्षरुपमा हामीले वार्ता गरिनै रहेका छौं।

– **माओवादी अध्यक्ष प्रचण्ड** (नेपाल समाचारपत्र दैनिक, ०६१ पुस ५)

## कार्टून

नागरिकका अधिकारहरु यसरी कुण्ठित गरिएका छन् ।




**कान्तिपुर दैनिक, २२ कार्तिक ०६१ मा छापिएको कार्टून**

संयुक्त राष्ट्रसंघका महासचिव कोफी अन्नानले नेपालमा बढ्दो हिंसा र मानवअधिकार हननबाट आफूलाई गहिरो चिन्ता लागेको बताउँदै मानवअधिकार रक्षकहरूको अधिकार सुनिश्चित गर्नुपर्ने कुरामा जोड दिनुभएको छ। अन्नानका प्रवक्ताद्वारा २३ डिसेम्बरमा जारी विज्ञप्तिमा भनिएको छ, 'द्वन्द्वले प्रजातन्त्र, मानवअधिकार र विकासको गति गम्भीररूपमा अवरूद्ध गरेको छ।' मानवअधिकार रक्षकहरूले गम्भीर चुनौतिको सामना गर्नुपरेको र उनीहरूको सुरक्षा खतरामा परेकोमा महासचिव अन्नानले दुःख व्यक्त गर्नुभयो।

एमनेष्टी इन्टरनेशनल, ह्युमन राइट्स वाच र इन्टरनेशनल कमिसन अफ जुरिस्टले नेपालका मानवअधिकार रक्षकहरू गम्भीर जोखिममा परेको ठहऱ्याए। सशस्त्र द्वन्द्वका कारण बढ्दै गएको मानवअधिकार हननविरूद्ध आवाज उठाइरहेका मानवअधिकार रक्षकहरूकै अधिकारमाथि द्वन्द्वरत पक्षहरूले धावा बोलिरहेको तथ्य अब राष्ट्रिय सरोकारको विषयमात्रै रहेन। हुन त यसअघि पनि अन्तर्राष्ट्रिय मानवअधिकार संस्थाहरूले पटक-पटक यस्ता विश्लेषण सार्वजनिक गर्दै आएका हुन्। तापनि, अहिले खतरा बढ्दै आएको उनीहरूको ठहर छ। जो अर्काको मानवअधिकारका लागि आन्दोलनरत छ, उसैको अधिकार कुण्ठित पार्ने चेष्टालाई जति निन्दा गरे पनि नपुग्ला।

यस्तो स्थितिको सोझो सम्बन्ध छ, अभिव्यक्ति स्वतन्त्रताको आधारभूत हकसँग। विचार तथा अभिव्यक्ति स्वतन्त्रताको वकालत गर्ने र समग्र मानवअधिकारका लागि क्रियाशील मानवअधिकार रक्षकहरूकै अधिकारमाथि धावा बोल्ने द्वन्द्वरत पक्षहरूको व्यवहारले देशको मानवअधिकार अवस्थालाई झनै कष्टकर बनाएको छ। यस्तो अवस्थामा आम नागरिकको अभिव्यक्ति स्वतन्त्रता झनै खतरामा परेको छ। सर्वसाधारणले आफूलाई लागेको विचार व्यक्त गर्न र त्यस्तो स्वतन्त्रताको निर्वाध उपभोग गर्न नपाएको तथ्य छिपेको छैन। हतियारका सामू विचारलाई पछाडि पार्ने कोसिसहरू पटक-पटक भएका छन्। सन्नाटा छाएको छ, देशका अधिकांश भागमा।

बन्दुकले विचार मार्ने दुष्प्रयत्न भइरहेका बेला सन्नाटा चिर्ने अभियानमा क्रियाशील मानवअधिकार रक्षकहरूलाई आक्रमणको निशाना बनाउने षडयन्त्रका तानाबाना कदापि सफल हुन सक्दैनन् भन्ने सत्य बुझ्नु जरूरी छ। अहिले मानवअधिकार आन्दोलनलाई कसैले कमजोर आँक्छ र आक्रमणको निशाना बनाउन अग्रसर हुन्छ भने त्यो आत्मघाती बाटो हुनेछ भन्ने हेक्का राख्नु पर्छ, षडयन्त्रकारीहरूले।

## उल्लेख्य



देशमा शान्ति स्थापनाका लागि, द्वन्द्वरत दुवै पक्षलाई दवाव दिने उद्देश्यले ०६१ पुस १२ गते काठमाडौंमा मानवअधिकार तथा नागरिक समाजका विभिन्न संस्थाहरुद्वारा र्‍यालीको आयोजना।

विश्व मानवअधिकार दिवसका अवसरमा ०६१ मंसिर २५ गते मानवअधिकार संस्थाहरुद्वारा अधिराज्यका विभिन्न ठाउँमा विविध कार्यक्रमको आयोजना।



महिला, बालबालिका वेचविखनविरुद्ध सहकर्मी समूह (एट्वीन) र महिला सुरक्षा दवाव समूहको आयोजनामा ०६१ पुस ६, ७ र ८ गते ललितपुरमा "महिला अदालत" सार्वजनिक सुनुवाई कार्यक्रम सम्पन्न। पीडित महिलाहरुद्वारा आफ्ना भोगाईहरु व्यक्त। महिलाविरुद्ध विभेदपूर्ण कानुनहरु खारेज गरी न्यायपूर्ण कानुनहरु वनाउनुपर्नेमा कार्यक्रमका सहभागीहरुको जोड।

## पाठक-पत्र

### दण्डहीनताले बलात्कार बढायो

सामाजिक न्याय र मानवअधिकारका क्षेत्रमा क्रियाशील अग्रणी संस्था इन्सेकद्वारा प्रकाशित प्राचीको ५२ औं अंक विशेष लाग्यो। प्राचीको आवरणबाटै बलात्कारको घटना झल्काउने तस्वीरले मनमा ज्यादै चोट पुर्‍याएको छ। बलात्कारजस्तो घृणित, निन्दनीय र अमानवीय क्रियाकलापमा संलग्न हुने गिरोहहरु आजभोली धेरै बढिरहेका छन्। द्वन्द्वसँगै बलात्कारका घटना पनि बढ्दै आएका छन्। गस्तिको क्रममा सुरक्षाकर्मीबाट बालिका तथा महिलालाई बलात्कार गरी मानसिक यातना दिएका खबरहरु पढ्नमा आएका छन्। बलात्कारबाट पीडित व्यक्ति सुरक्षा प्रदान गर्ने प्रहरीको शरणमा पुग्दा प्रहरीबाटै पुन: बलात्कार हुनु परिरहेका घटनाक्रम दोहोरिएका छन्। रक्षक नै भक्षक रहँदा पनि सरकारको कानुन बोलिरहेको छैन। सायद कानुन लागू गराउने निकाय भएर होला, प्रहरीले दण्ड सजाय नपाएको। वलात्कारका घटना पहाड र हिमाली क्षेत्रमा भन्दा पनि तराई क्षेत्रमा बढी मात्रामा भइरहेका छन्। खुल्ला सीमाना भएका कारण भारतीय डाँकाहरुले नेपाली आमाका सन्तानमाथि बलात्कार गर्न सफल भएका छन्। नेपालका कतिपय व्यक्तिहरु बलात्कारका घटनामा सक्रिय भइरहेका छन्। घटना गराउने व्यक्ति भेटाए पनि सरकारले पीडकलाई कारवाही र पीडितलाई राहत तथा क्षतिपूर्ति प्रदान गर्न सकिरहेको छैन। यो सबैको पछाडि नेपाली समाजमा बढ्दै गएको दण्डहीनताले प्रमुख भूमिका खेलेको छ। अझै पनि बलात्कार गर्ने समूहले कानुनलाई छल्न सफल भइरहेका छन्। सरकारको दण्डहीनताका कारण बलात्कारको पीडा भोग्न वाध्य र बलात्कारपछिका दिनमा कष्टकर जीवन बिताएका चेलीको लागि राहत र पुनर्स्थापनासम्बन्धी काम गैरसरकारी संस्थाहरुले पनि गर्नुपर्‍यो। दबाब अझै चाहिन्छ।

– **भुमराज तिवारी**, अध्यक्ष, रिलेक जिल्ला शाखा, नुवाकोट

### डाँकाहरुले भाका हाले

प्राचीको पूर्णांक ५२ हेरियो। दंग परियो। खुशीले होइन, पीडाले पो। यो मसीको अलिकति मोल छ। नत्र प्रजातन्त्र "पर जा" मा पुग्नै लाग्यो। सुबोधराज प्याकुरेलको "जनतालाई राज्य चलाउन दिनुस्" भन्ने मागमा द्वन्द्वरत पक्षहरु पग्लनै पर्छ। युद्ध कसका लागि ? जनता न त पहिले युद्ध चाहन्थे न अब चाहन्छन्। सत्य यही हो।

बलात्कारको विषयमा प्राची फेरि दह्रोसँग उभियो। यौन पिपाशुहरुको यौनलिप्सालाई कानुनले चिथोर्न नभ्याएको पो हो कि ? द्वन्द्वले डाँकाहरुलाई पो भाका हाल्न दियो। यसले तल्ला वर्गका चल्लाहरुलाई साह्रै निर्मम तरिकाले निमोठ्यो। जताबाट पनि पीडितहरु उनै हुन्। पीडकहरुलाई पाता फर्काउन यी द्वन्द्वरत पक्षहरुलाई बेलैमा बुद्धि फिरोस्।

मानवअधिकारको आन्दोलनमा प्राचीले खेलेको भूमिकालाई जनताले कदर गरेका छन्। जसले जे भने पनि जनता नै देश हो। विना जनताको देश पनि हुन्छ र ? यो प्रश्न जनतालाई बिझेको छ। देश नरहे जनता रहँदैनन् भन्नुभन्दा जनता नरहे देशै रहँदैन भन्नुपर्ने हो। देशलाई हाँक्न खोज्नेहरुले जनतालाई तर्साएर होइन, पर्साएर काम फत्ते गर्ने हिम्मत गर्नुपर्छ। मानवअधिकारको पालना गर्नैपर्छ।

– **दिनेश केसी "रवि"**
अध्यक्ष, साङ्वाली अनुराग मा.अ. शिक्षा रेडियो श्रोता क्लब
खोपाचागु-८, दोलखा



# मानवअधिकार दिवस उज्यालो आकांक्षा

सुबोधराज प्याकुरेल

जब हामी हामीसँग असहमत हुनेहरुको अधिकारको वकालत गर्छौं, त्यो वास्तविक मानवअधिकार हो। सहमति हुनेहरुको कुरालाई ऐक्यबद्धता वा सहकार्य भन्नु ज्यादा वेस होला।

हाम्रो देशको आजको परिस्थितिमा सहिष्णुता हराएर समस्या परेको छ। तपाईंको उद्देश्य राम्रो छ भने जो कोहीसँग पनि कुरा गर्न सक्नुहुन्छ। व्यवहार चलाउन सक्नुहुन्छ। जसमा आत्मविश्वास छैन, उसले अरु कसैलाई पनि विश्वास गर्न सक्दैन। अरुलाई सुन्ने, बुझ्ने र सम्मान गर्ने चरित्र नभएकाहरु सधै शंकालु र डरपोक हुन्छन्। यही डरले सहिष्णुतालाई समाप्त पारिदिन्छ। सहिष्णुता समाप्त नभई मानिस हिंसालु हुँदैन। हामीकहाँ बढेको हिंसाले सावित गर्छ कि हाम्रो देशमा सहिष्णुता हराएको छ। तर, हिंसा मच्चाउनेहरुमा सहिष्णुता सकिएको हो। आम नागरिक त सँगै छ। सामाजिक जीवनमा छ। राज्य र माओवादीमा चाहिँ सहिष्णुता नभएकै हो।

राज्य जनताको संरक्षणका लागि जनताले बनाएको संरचना हो। माओवादीले दाबी गरेको नयाँ सत्ता र सरकार दुवैले नागरिकको संरक्षणलाई आफ्नो एजेण्डा बनाएका छैनन्। एक-अर्कालाई समाप्त पार्ने रणनीतिमा दुवै संलग्न छन्। कुनै दिन, ढिलो वा चाँडो जनताको अनुमोदन लिनु अनिवार्य छ भन्ने कुरा उनीहरुले बिर्सेका छन्। राज्य र माओवादी दुवैको व्यवहार देख्दा कहिलेकाहिँ त यस्तो लाग्छ, मानौं उनीहरुले आफूहरुलाई नै मानिसको कोटीमा राख्न चाहँदैनन्। यातनाका तरिका, कानुनको अपहेलना र आफ्नै बचनबद्धताको बेवास्ताजस्ता व्यवहारका कारण दुवै पक्षको इज्जत घटेको छ।

संसद विघटन गरियो तर नयाँ चुनाव हुनसक्ने अवस्था छैन। संसारमा थुप्रै देशहरुमा यस्तो समस्या परेको थियो, प्रथम र द्वितीय विश्वयुद्धताका र त्यसपछि पनि। डेनमार्क, नर्वे, बेलायतजस्ता मुलुकमा पनि पुरानै संसदलाई निरन्तरता दिनुपरेको थियो। यस्तै घटनाले यथास्थितिको सिद्धान्तको जन्म भयो। निर्णायक निकायको प्रकृया अवरुद्ध हुञ्जेल पुरानोलाई निरन्तरता दिने चलन बस्यो। अदालत, संवैधानिक, कानुनी निकाय सबैलाई यथास्थितिमा राखियो। संसद भनेको साझा घर हो। आपसमा जतिसुकै झगडा गरे पनि सँगै बस्नुपर्ने थलो हो। साह्रै अप्ठेरो परेको बेलामा न्यायालय वा राजनीतिक निर्णयद्वारा गाँठो फुकाइन्छ।

जनतालाई सार्वभौमसत्ता सम्पन्न भनिसकेपछि अन्यत्र जहाँ, जेसुकै लेखे पनि सबैभन्दा ठूलो कुरा त्यही भयो। अरु सबै कुरा त्यसैको मातहत परिसक्यो। अर्थात् सांसदहरु जनताका वारेस भए।

**अरुलाई सुन्ने, बुझ्ने र सम्मान गर्ने चरित्र नभएकाहरू सधै शंकालु र डरपोक हुन्छन्। यही डरले सहिष्णुतालाई समाप्त पारिदिन्छ। सहिष्णुता समाप्त नभई मानिस हिंसालु हुँदैन। हामीकहाँ बढेको हिंसाले सावित गर्छ कि हाम्रो देशमा सहिष्णुता हराएको छ। तर, हिंसा मच्चाउनेहरूमा सहिष्णुता सकिएको हो। आम नागरिक त सँगै छ। सामाजिक जीवनमा छ। राज्य र माओवादीमा चाहिँ सहिष्णुता नभएकै हो।**

वारेसले धनीको आदेशभित्रको काम मात्र गर्न पाउँछ। वारेसले सीमाभित्र बस्नुपर्छ। तर, धनीले निर्णय गर्न, निर्णय फेर्न जे पनि गर्न पाउँछ, गर्न सक्छ। धनी जनता हुन्। वारेस सांसद हुन्। कारिन्दा सरकार हो। जनतालाई निर्णय गर्न दिनु पर्‍यो। उनीहरु के चाहन्छन् ? उनीहरुको फैसला सुन्न जनमत संग्रह गरे हुन्छ। जनमत संग्रहले फैसला गर्नेछ, संविधानसभा चाहिन्छ कि चाहिँदैन। मानवअधिकारको रक्षा र विकासका लागि जनताले नागरिक तथा राजनीतिक अधिकारको निर्वाध प्रयोग गर्न पाउनुपर्छ। छलफल र विवाद सिक्ने, सिकाउने प्रणाली हो। असहमत हुन सहमत हुनु प्रजातन्त्रको पहिलो शर्त हो। तर, युद्धरत पक्षहरुले यो बुझेनन्। राष्ट्रको भविष्य सपार्ने जिम्मा लिएकाले पनि बुझेनन् अथवा बुझ पचाए। शान्तिपूर्ण, प्रजातान्त्रिक, कानुनी एवम् पारदर्शी विकल्प पस्किनुपर्ने दायित्व बोकेको सरकार नै अनेक अर्थ लाग्ने कुरा गरिरहन्छ।

यो देशको भविष्य बर्बाद गर्ने सबै हिस्सेदारहरुले बुझिराखे हुन्छ- कुनै दिन उनीहरु सबै थाक्नेछन्, सबै हार्नेछन्। उनीहरुको हतियारले, तागतले काम नदिने क्षण आउनेछ। त्यतिबेला अन्तिम शरण लिन जनताकहाँ पुग्नुपर्नेछ। तर, जनताले माफ गर्ने छैनन्। किनकी जनताले अन्यायमा पारिएका, अनाहकमा मारिएका, विभत्स यातना दिइएका आफन्तहरुप्रति जिम्मेवार भएर निर्णय गर्नुपर्नेछ। जनताले शान्तिपूर्ण तरिकाले यो निर्णय गर्नेछन्। जनताउपर अत्याचार गर्नेहरु आफ्नो अस्तित्व र मर्यादा गुमाएका शरीर लिएर बाँच्न वाध्य हुनेछन्। जुन मुलुकमा ४५ प्रतिशतभन्दा बढी मानिस १८ वर्षमुनिका छन्, त्यो देशको स्वतन्त्रता र संचेतनाको प्रहरलाई आत्मसात नगरी धरै छैन। ●



अवतरण

# द्वन्द्वको मार र स्वतन्त्रताको कलम युद्ध

कुन्दन अर्याल

०५८ साल मंसिर ११ गतेदेखि नेपाली प्रेसलाई पुन: भय र बन्देजको पुरानो युगमा फर्काउने प्रयास हुँदै आएको छ। यसबीच एकातिर नेपाल अधिराज्यको संविधान २०४७ मर्नु र जीवित रहनुको दोसाँधमा पुगेको छ। यस्तो अवस्थामा हाम्रो प्रेसले भाग्नु परेको धरातलीय यथार्थ यस्तो छ :

- सूचनाको स्वतन्त्रतापूर्वक संकलनमा अवरोध
- सामग्री चयनका निम्ति दवाव
- छापिएका सामग्रीका कारण मानसिक वा शारीरिक यन्त्रणा, ज्यानसमेत गुमाउनु पर्ने अवस्था

यस्ता कारणहरुको संयुक्त परिणामका रुपमा नेपाली प्रेसमा भय र असुरक्षा व्याप्त पार्न खोजिएको छ।

०५२ सालपछि शुरु भएको हिंसात्मक द्वन्द्वले आक्रामक रुप धारण गर्न थालेपछि नेपाली प्रेसमा शुरु भएको संकट छ वर्षको अवधिमै चरम विन्दुमा पुगेको छ। आज मानवअधिकारको परिभाषाले समेटेको र विश्वव्यापी घोषणापत्र एवम् नागरिक तथा राजनीतिक अधिकारहरु सम्बन्धी प्रतिज्ञापत्रमा समाहित हाम्रो प्यारो "धारा १९" अर्थात् अभिव्यक्ति स्वतन्त्रताको अधिकार नै संकटमा परेको छ। तर यही विपम परिस्थितिले नेपाली प्रेससंग आफ्नो र आम जनताको अधिकारका निम्ति वैचारिक लडाईं लड्नु पर्ने ऐतिहासिक भूमिकाको माग गरेको छ।

नेपाली प्रेसले मानवअधिकार रक्षकका रुपमा निर्वाह गर्दै आएको भूमिकाका कारण हिंसात्मक द्वन्द्वको यो अवस्थामा पनि पीडितहरुले न्याय पाएका छन्। पीडकहरुका बारेमा आम मानिसले थाहा पाएका छन्। अनि कतिपय अवस्थामा पीडकहरुउपर कारवाही पनि भएका उदाहरणहरु छन्।

जनप्रतिनिधिविहीन आजको अवस्थामा प्रेस पनि नभएको भए नेपाल र नेपालीको अवस्था कस्तो हुन्थ्यो होला ? हाम्रो कल्पना मात्र पनि अत्यन्त भयाभह हुन्छ। त्रासको यस्तो वातावरणमा पत्रकारहरुले अग्रपंक्तिमा रहेर मानवअधिकारको रक्षा गर्नुपर्ने आफ्नो दायित्व निर्वाह गर्नु परेको छ।

नेपाली प्रेसले मानवअधिकार रक्षकका रुपमा निर्वाह गर्दै आएको भूमिकाका कारण हिंसात्मक द्वन्द्वको यो अवस्थामा पनि पीडितहरूले न्याय पाएका छन्। पीडकहरूका बारेमा आम मानिसले थाहा पाएका छन्। अनि कतिपय अवस्थामा पीडकहरूउपर कारवाही पनि भएका उदाहरणहरू छन्।

पत्रकारहरुले नै युद्धरत् पक्षहरु युद्धमा असंलग्न वर्गको सम्मान नपाएको अवस्थामा उल्लेखित काम सजिलो छैन। तर युद्धरत पक्षहरुलाई जवाफदेही बनाउने समग्र समाजको अभियानमा एकाकार भएर प्रेसले यो अभियानलाई अघि बढाउन सक्दछ।

छयालीस सालको परिवर्तन पछि नेपाली प्रेसमा वस्तुनिष्ठता बढेको छ। तर वस्तुनिष्ठताको परिभाषालाई पनि युद्धरत् पक्षहरुले आ आफ्नै ढंगले अपव्याख्या गर्न थालेपछि पानी घाँटीमाथि पुग्न खोज्दैछ। बितेका वर्षहरुमा नेपाली प्रेसले द्वन्द्वरत् समयमा चल्ने नयाँ किसिमको बानी विकसित गरेको छ। तर अहिलेको अवस्थामा त नेपाली प्रेसलाई आफ्नो स्रोतको स्वतन्त्र प्रयोगवाट समेत वञ्चित गर्न खोजिएको छ।

वर्तमान राज्य नीतिगतरुपमा अभिव्यक्ति स्वतन्त्रताको सम्मानको पक्षमा रहेको छ। शान्ति सुरक्षा बहाल गराउने निकाय भने राज्यको सैद्धान्तिक अवधारणा र प्रतिबद्धता विरुद्ध ओर्लिएको देखिन्छ। त्यसैले राज्यको प्रतिबद्धता र व्यवहारमा अन्तर देखिएको छ।

आफूलाई राजनीतिक शक्तिका रुपमा उभ्याउने माओवादीले अभिव्यक्ति स्वतन्त्रताका सम्बन्धमा आफ्नो धारणा प्रष्ट शब्दमा सार्वजनिक गरेको छैन। नेपाली प्रेसले माओवादीका विचारलाई ठाउँ दिएर उनीहरुको अभिव्यक्ति स्वतन्त्रताको सम्मान गरेको छ। नेपालका पत्रपत्रिकामा माओवादीसम्बन्धी घटनाप्रधान समाचारलाई जस्ताको त्यस्तै प्रस्तुत गरिएको छ। तर माओवादीहरुले उनीहरुका सम्बन्धमा असहमत विचारहरुउपर प्रतिबन्ध लगाउन खोजेका छन्। जतिसुकै सत्य तथ्य होउन्, उनीहरुलाई प्रतिकूल लाग्ने समाचारहरु नछापिउन् भन्ने उनीहरुको मनसाय रहेको कुरा व्यवहारमा देखिएको छ।

माओवादी र सुरक्षाफौजको नियन्त्रण गर्ने प्रयास वा पत्रकारहरुसँगको व्यवहारले प्रेसको स्वतन्त्रतामा गंभीर असर परेको छ। सुरक्षाफौजका सम्बन्धमा उजुरी गर्नसम्म सकिन्छ। तर माओवादीहरुले आफ्ना ज्यादतिका सम्बन्धमा अत्यन्त गैरजिम्मेवार जवाफ प्रवाहित गर्ने गरेका छन्।

यस्तो परिस्थितिमा पत्रकारहरुले मानवअधिकार रक्षकका रुपमा मानवअधिकार उल्लंघनहरुको सजग निगरानी गर्नु परेको छ। गोला बारुदको अन्यौलबीच विवेक, समझदारी वा सहिष्णुताका सन्देशयुक्त सम्वादको बेवास्ता गर्ने शक्तिहरु चलमलाई रहेका छन्। तिनीहरुको हालीमुहाली चलेको अवस्थामा वामे सर्दै गरेको व्यावसायिक प्रेसको भविष्य पनि सुनिश्चित हुने छैन। प्रजातन्त्र र अभिव्यक्ति स्वतन्त्रताको सुनिश्चितताका लागि त्यस्ता शक्तिहरुलाई परास्त गर्न सक्नुपर्छ। चेतनाको वाहक नेपाली प्रेससँग त्यस अभियानको अगुवाई गरेर हिंसा, प्रतिहिंसा र प्रतिशोधको श्रृंखलालाई समाप्त पार्ने सामर्थ्य पनि छ।

### अभिव्यक्ति स्वतन्त्रता र प्रजातन्त्र

अभिव्यक्ति स्वतन्त्रतालाई सामान्यतया आम नागरिकले भय र त्रासविहीन वातावरणमा बोल्न र लेख्न पाउने अधिकारको रुपमा मात्र हेरिए पनि, यो वास्तवमा प्रजातान्त्रिक संस्कृति निर्माणमा अत्यावश्यक तत्व मानिन्छ। अभिव्यक्ति स्वतन्त्रताको सम्मान वा यसको संरक्षण तथा सम्बर्द्धनको अभावमा विश्वका कुनै पनि राज्य व्यवस्थामा प्रजातान्त्रिक पद्धतिको दिगो विकास हुन सकेको छैन। त्यस्ता व्यवस्थामा आम नागरिकले आधारभूत स्वतन्त्रताहरुको प्रत्याभूति भएको महसुस गर्न सकिरहेका छैनन्।

**नेपाल अधिराज्यको संविधान २०४७ द्वारा प्रत्याभूत मौलिक हक तथा आधारभूत मानवअधिकारको सम्मान गर्ने र उक्त अधिकारलाई कार्यान्वयन गर्ने नीतिगत प्रतिबद्धता सार्वजनिक गरिए पनि व्यवहारमा मानवअधिकार उल्लंघनमा कुनै कमी आएको छैन। प्रेस तथा अभिव्यक्ति स्वतन्त्रतालाई नियन्त्रण गर्ने कार्यमा व्यापक बृद्धि भइरहेको छ।**

अभिव्यक्ति स्वतन्त्रतालाई प्रजातन्त्र र मानवअधिकारको मेरुदण्ड पनि मानिन्छ। चाहे प्रजातान्त्रिक व्यवस्था भएका विकसित देश होउन् वा नवप्रजातान्त्रिक विकासोन्मुख देश वा भर्खरै स्वतन्त्र भएका देश, प्रत्येक राज्य व्यवस्थामा आम नागरिकका मौलिक स्वतन्त्रता, हक एवम् अधिकारको संरक्षणका लागि प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताका न्यूनतम मूल्य र मान्यताको संरक्षण हुनु जरुरी हुन्छ। जबसम्म नागरिकका मौलिक हक, आधारभूत स्वतन्त्रता र अभिव्यक्ति स्वतन्त्रतालाई सम्मान गरिने पद्धतिको विकास गर्न सकिँदैन, तबसम्म आम नागरिकले सही अर्थमा प्रजातन्त्रको महसुस गर्न सक्तैनन्। त्यस्तो अवस्थामा प्रजातन्त्रको संस्थागत विकास पनि हुन सक्तैन। अन्ततः यस्तो क्रियाकलापले आम नागरिकका सबै खाले स्वतन्त्रतालाई पूर्णरुपमा सम्मान र संरक्षण गर्नुको साटो निरंकुशतालाई अभिप्रेरित गर्दछ र अधिनायकवादी प्रवृत्तिको जगेर्नामा मद्दत पुऱ्याउँछ।

प्रजातन्त्र र अभिव्यक्ति स्वतन्त्रतालाई एउटा सिक्काका दुई पाटाको रुपमा लिइए पनि स्वतन्त्रताविनाको प्रजातन्त्रको परिकल्पना गर्नु व्यर्थ हुन्छ। प्रजातान्त्रिक संस्कृतिको विकास र प्रवर्द्धन गर्न अभिव्यक्ति स्वतन्त्रताका अपरिहार्य प्रावधानहरु निर्बाध अभ्यस्त हुने वातावरण तयार गरेर मात्र आम नागरिकको पूर्ण सहभागिता हुनसक्ने प्रजातान्त्रिक समाजको सृजना गर्न सकिन्छ। नेपालको सन्दर्भमा प्रजातन्त्रको संस्थागत विकासका निम्ति प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताको पूर्ण प्रत्याभूति नितान्त जरुरी छ। तसर्थ, आधारभूत मानवअधिकारको सम्मान, मानवअधिकारकर्मी तथा सञ्चारकर्मीलाई मानवअधिकार र प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताको स्वतन्त्ररुपमा अनुगमन गर्न र त्यसको प्रतिवेदन प्रकाशनका लागि अनुकूल हुने वातावरण तयार गर्नु राज्यको दायित्व हो। गैरराज्य पक्षबाट त्यस्ता अपरिहार्य स्वतन्त्रताको सम्मान गरिनुपर्दछ।

मानवअधिकारका सिद्धान्तहरुलाई व्यवहारमा परावर्तित गर्न पनि प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताका विश्वव्यापी मान्यताहरुलाई कार्यान्वयनमा ल्याउनु जरुरी हुन्छ। ती सिद्धान्तहरुमा आम नागरिक एवम् मानवअधिकार र प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताका क्षेत्रमा कार्यरत मानवअधिकारकर्मी, सञ्चारकर्मी र समाचार सम्प्रेषण तथा प्रकाशनका लागि सो क्षेत्रमा संलग्न व्यक्तिहरुले निर्भयपूर्वक, विनाहस्तक्षेप र भय एवम् त्रासरहित वातावरणमा कार्य सम्पादन गर्नुलाई लिइने गरिन्छ। त्यसैले राजनीतिक अन्यौलको वर्तमान अवस्थामा प्रजातान्त्रिक पद्धतिलाई पुनर्जीवन प्रदान गर्न पनि अभिव्यक्ति स्वतन्त्रता आवश्यक छ, जुन मानवअधिकारको प्रवर्द्धन र प्रजातन्त्रको दिगो विकाससँग प्रत्यक्ष जोडिएको हुन्छ। सशस्त्र द्वन्द्वका कारण प्रजातन्त्रका न्यूनतम मान्यताहरु संकटमा परी मानवअधिकार उल्लंघन चरम सीमामा पुग्नुले अन्तोगत्वा प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताका न्यूनम सिद्धान्तहरु निरन्तर चपेटामा परेको निश्चिन्त उल्लेख गर्न सकिन्छ।

प्रजातान्त्रिक शासन पद्धतिमा प्रेस तथा अभिव्यक्ति स्वतन्त्रता एक-अर्काका पूरक मानिन्छन् र यथार्थमा प्रजातान्त्रिक शासन व्यवस्थाका मूलभूत अंगहरुमध्ये प्रमुख मानिन्छन्। परिणामस्वरुप नेपालमा सिद्धान्ततः प्रेसलाई राज्यको चौथो अंगका रुपमा स्वीकार गरिए पनि व्यवहारमा सही कार्यान्वयन हुन नसकेको यथार्थता सबैका सामू छर्लंग छ। मानवअधिकारको विश्वव्यापी घोषणापत्रको धारा १ अनुसार सबै मानिसहरु जन्मजात स्वतन्त्र र समान हुने सुनिश्चतता गरिएकाले विश्वका सबै मानिसले निर्बाधरुपमा राष्ट्रिय तथा अन्तर्राष्ट्रिय कानुनद्वारा प्रत्याभूत नागरिक स्वतन्त्रतासम्बन्धी अधिकारको अधिकतम उपभोग गर्न पाउनु पर्दछ।

तर बिडम्बना, नेपालमा अभिव्यक्ति स्वतन्त्रतालाई प्रेस स्वतन्त्रता तथा पत्रकारले स्वतन्त्ररुपमा कुनै पनि प्रकारको हस्तक्षेप वा सेन्सरसीपविना गर्न पाउने समाचार सम्प्रेषण र पत्रपत्रिकाको प्रकाशन गर्न पाउने हकको रुपमा हेरिएको छ। वास्तवमा अभिव्यक्ति स्वतन्त्रताको दायरा फराकिलो छ। यसको सम्मान एवम्

प्रवर्द्धन गरेर मात्र आम नागरिकका सम्पूर्ण मौलिक हक एवम् आधारभूत मानवअधिकारको प्रत्याभूति गर्न सकिन्छ। अर्को अर्थमा, अभिव्यक्ति स्वतन्त्रताविना प्रजातन्त्रको कल्पना गर्न सकिदैन। त्यसैगरी मानवअधिकारमय संस्कृतिको विकासको परिकल्पना गर्नु पनि असंभव छ।

**नेपालमा अभिव्यक्ति स्वतन्त्रता**

नेपालको प्रजातान्त्रिक आन्दोलनका इतिहासमा कहिल्यै पनि अभिव्यक्ति स्वतन्त्रता संघर्षको मुख्य विषय बन्न सकेन। नामै मात्रको भए पनि करिब ६० वर्ष लामो प्रजातान्त्रिक कालखण्डमा राज्यले सैद्धान्तिकरुपमा आम नागरिकका स्वतन्त्रताको सम्मान गर्ने बचनबद्धता जाहेर गरे पनि व्यवहारमा ती स्वतन्त्रता नियन्त्रण गर्ने कानूनहरु बनाइरह्यो। १०४ वर्ष जहानिया राणा शासन होस् वा ३० वर्षे पञ्चायती व्यवस्था वा प्रजातन्त्र पुनर्स्थापनापछिको १४ वर्ष अवधिका सरकारहरुले भय र त्रासविहीन वातावरणमा नागरिकलाई आफ्ना विचारहरु लेख्ने, मन्तव्य, कला वा शान्तिपूर्वक भेलाको माध्यमबाट सार्वजनिक गर्ने वातावरण तयार गर्न सकेका छैनन्। प्रत्येक शासन व्यवस्थामा सरकारको आलोचना वा व्यवस्थाका कमजोरी सार्वजनिक गर्दा राज्य व्यवस्थाको विरुद्ध षड्यन्त्रमा संलग्न भएको आरोप लगाउनु प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताका न्यूनतम मान्यता विरुद्ध हुने गर्दछ। प्रजातन्त्रको पुनर्स्थापनापश्चात् नेपाल अधिराज्यको संविधान २०४७ द्वारा प्रत्याभूत मौलिक हक तथा आधारभूत मानवअधिकारको सम्मान गर्ने र उक्त अधिकारलाई कार्यान्वयन गर्ने नीतिगत प्रतिबद्धता सार्वजनिक गरिए पनि व्यवहारमा मानवअधिकार उल्लंघनमा कुनै कमी आएको छैन। प्रेस तथा अभिव्यक्ति स्वतन्त्रतालाई नियन्त्रण गर्ने कार्यमा व्यापक वृद्धि भइरहेको छ।

हाम्रो देशमा प्रेस तथा अभिव्यक्ति स्वतन्त्रतालाई मानवअधिकारको अभिन्न अंगको रुपमा स्वीकार गर्न नसक्नु आजको प्रमुख समस्या हो। देशमा विभिन्न समयमा संचालित प्रजातान्त्रिक आन्दोलनहरुमा प्रजातन्त्र र मानवअधिकारलाई आन्दोलनको विषय बनाइए पनि प्रेस तथा अभिव्यक्ति स्वतन्त्रतालाई खासै महत्व दिएको देखिँदैन। नीतिगत तहमा प्रजातन्त्र र मानवअधिकारका उद्देश्यहरु समान भए पनि प्रजातन्त्रलाई राजनीतिक आन्दोलनको दायराभित्र राखिन्छ भने मानवअधिकार वा अभिव्यक्ति स्वतन्त्रतालाई आम नागरिकको सचेतना अभिबृद्धि गर्न र यससम्बन्धी मान्यताहरुको जगेर्ना गर्ने कार्यमा परिचालित गरिनु पर्दछ। दुर्भाग्यवश मानवअधिकार र प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताको आन्दोलन सदैव पीडित वा विपक्षी राजनीतिक समूह वा नागरिक समाजमा कार्यरत गैरसरकारी समूहको मात्र एजेण्डा बन्न पुगेको छ, जुन सत्तापक्ष, सरकार र राज्यका अन्य निकायहरुको प्राथमिकताको विषय हुन सक्नुपर्थ्यो। तसर्थ, मानवअधिकारको मेरुदण्डको रुपमा रहेको प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताका मान्यताहरु व्यवहारमा कार्यान्वयन हुनुको साटो दोहोरो वा तेहोरो चपेटामा परेका छन्, जसका कारण मानवअधिकारका अविभाज्य सिद्धान्तहरुको कार्यान्वयनमा व्यापक अवरोध खडा हुँदै आएको छ।

मानवअधिकारको सुनिश्चितता एवम् प्रजातान्त्रिक संस्कृतिको निर्माणका क्रममा नेपालमा अहिलेसम्म सरकारी, अर्धसरकारी र गैरसरकारी क्षेत्रबाट अभिव्यक्ति स्वतन्त्रताका अपरिहार्य र अविभाज्य सिद्धान्तहरुलाई व्यवहारमा उतार्ने प्रतिबद्धता जाहेर गरिए पनि कार्यान्वयनमा संकुचन देखिन्छ। यसलाई पूर्णता दिने आवश्यक कदमहरु चाल्ने सोचको अभाव देखिन्छ। राज्य व्यवस्था र नागरिक समाजमा प्रेस तथा अभिव्यक्ति स्वतन्त्रतालाई पत्रकारिता, लेखन र मानवअधिकारको क्षेत्रमा कार्यरत व्यक्तिहरुका अधिकार संरक्षण गर्ने वा सो अधिकार प्राप्तिका लागि सहयोगी हुने अन्तर्राष्ट्रिय व्यवस्थाको रुपमा मात्र बुझिनुले मानवअधिकार वा अभिव्यक्ति स्वतन्त्रताको आन्दोलनमा थप चुनौती सृजना भएको छ।

मानवअधिकारका सर्वव्यापी मान्यताहरुको कार्यान्वयन गर्ने सवालमा राज्यले केही हदसम्म नीतिगत कदम चालेको भए पनि प्रजातन्त्रका आधारभूत सिद्धान्त एवम् नागरिकका स्वतन्त्रताको प्रत्याभूति गर्ने सवालमा कमजोर साबित भइसकेको छ। मानवअधिकार भन्नासाथ आम नागरिकको राजनीतिक स्वतन्त्रता भन्ने बुझिए पनि उक्त अधिकारको प्रत्याभूतिका लागि प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताको न्यूनतम मापदण्डहरुको पालना हुनु आवश्यक छ। यसले प्रजातान्त्रिक संस्कृतिको निर्माण र मानवअधिकारका अन्तर्राष्ट्रिय संयन्त्रहरुले सुनिश्चित गरेका अधिकारहरुको कार्यान्वयनमा विशेष मद्दत पुर्‍याउदछ। किनकी अभिव्यक्ति स्वतन्त्रताले पत्रकार तथा मानवअधिकारकर्मीको अधिकार मात्र

> **पछिल्लो समयमा आएर राज्य तथा विद्रोही पक्षद्वारा पत्रकारहरुको हत्या गर्ने, बेपत्ता पार्ने र अपहरण गर्ने घटनाहरु पनि सामान्य हुन थालेका छन्। त्यसैले मानवअधिकारमयी कानुनको निर्माण गर्ने मात्र नभई तिनको अन्तर्राष्ट्रिय मापदण्डहरुका आधारमा अनुगमनका संयन्त्रहरु विकास गर्नुपर्ने आवश्यकता खट्किएको छ।**



# संकटकालमा जस्तो दबाब छैन

राजेन्द्र दाहाल
सम्पादक, हिमाल पाक्षिक

जिल्लाका पत्रकारहरु दोहोरो दबावको मारमा परेका छन्। समाचार कथामा झल्कन्छ। द्वन्द्वरत पक्षहरुको समाचार बनाउँदा उनीहरुलाई जोगाएर बनाउनुपर्ने अवस्था छ। द्वन्द्वरत क्षेत्रमा स्थायी बसोबास गरी समाचार पठाउँदा निश्चित कुराहरु मात्र पठाउनुपर्ने बाध्यता छ। द्वन्द्वरत पक्षको फोटो नपाइएको होइन, तर छाप्दा समस्या पर्ने भएकाले दबाउनुपर्ने र अर्को समयावधिमा समाचार छाप्नुपर्ने बाध्यता छ। संकटकाल समाप्त भएपछिको समयमा केही समाचार छाप्न सजिलो भएको छ। तुलनात्मक हिसाबले केन्द्रीयस्तरमा समाचार लेख्न सकिने अवस्था छ। संकटकालमा जस्तो दबाब छैन। वर्तमान अवस्थामा गम्भीर भएर सवाल उठाए पनि सुनुवाई हुने ठाउँ छैन। द्वन्द्वरत पक्षसँग कुरा गर्दा लाचारीपन देखाउने गर्दछन्। द्वन्द्वरत पक्षको समाचार लेखेमा दुवै पक्षका व्यक्तिहरु लाचार हुँदै त्यस्ता सवालहरु किन हाइलाइट गर्ने भन्ने कुरा उठाउँछन्। उनीहरुको भनाईअनुसारको मात्र समाचार लेख्यो भने त्यस्तो समाचार विश्वसनीय हुँदैन। सत्य समाचार नलेख्नु पत्रकारिता पेशाका लागि चिन्ताको कुरा हो। वर्तमान अवस्थामा समाचार लेख्ने र छाप्नेको समस्यालाई व्यक्तिगतरुपमा केही गर्न सकिँदैन। गाउँमा बस्ने पत्रकारहरुलाई सुरक्षा दिने र हौसला बढाउने काम गर्नु र केन्द्रीयस्तरमा सत्य समाचार लेख्न राज्यपक्ष र माओवादी पक्षसँग सामुहिक सामना गर्दै जानु आवश्यक छ। द्वन्द्वरत पक्षहरुका गलत कार्यको आलोचना गर्न सबै पत्रकारहरुले आ-आफ्नो स्थानबाट संगठित भएर काम गर्नु जरुरी छ।

संरक्षण गर्ने नभई भय र त्रासरहित वातावरणमा समस्त आम नागरिकले सबै प्रकारका स्वतन्त्रताको निर्विघ्न अभ्यास गर्न पाउने अवसर तयार गर्न सहयोगी भूमिका खेल्ने गर्दछ।

नेपालमा प्रेस तथा अभिव्यक्ति स्वतन्त्रता कानुनत: प्रजातन्त्र पुनर्स्थापनापछिको २०४७ को संविधानलगायत् प्रेस तथा प्रकाशन ऐन २०४८ र त्यसको नियमावली २०४९ मार्फत् प्रत्याभूत गरिएको भए पनि कानुनमा उल्लेखित अधिकारलाई व्यवहारमा उतार्न यथेष्ट अवरोध खडा गरिएका छन्। एकातिर अभिव्यक्ति स्वतन्त्रताको दायरालाई व्यवहारमा उतार्नसक्ने दिग्गजहरुको कमी भएको महसुस भइरहेको समयमा सरकार स्वयम् आफैंले निर्माण गरेका कानुनका दायरा नाघी पत्रकार तथा अभिव्यक्ति स्वतन्त्रताकर्मीलाई गिरफ्तार गर्ने, धम्की दिने, दुर्व्यवहार गर्ने र मानसिक तथा शारीरिक यातना दिनेजस्ता व्यवहारमार्फत् हतोत्साहित गर्ने कार्यमा संलग्न भएको पाइएको छ। पछिल्लो समयमा आएर राज्य तथा विद्रोही पक्षद्वारा पत्रकारहरुको हत्या गर्ने, बेपत्ता पार्ने र अपहरण गर्ने घटनाहरु पनि सामान्य हुन थालेका छन्। त्यसैले मानवअधिकारमयी कानुनको निर्माण गर्ने मात्र नभई तिनको अन्तर्राष्ट्रिय मापदण्डहरुका आधारमा अनुगमनका संयन्त्रहरु विकास गर्नुपर्ने आवश्यकता खट्किएको छ। यसका अलावा नेपालको कानुनी संरचनामा प्रेस तथा अभिव्यक्ति स्वतन्त्रतालाई स्पष्टरुपमा परिभाषित गर्नु पर्दछ। यससम्बन्धी अलग्गै कानुनको निर्माण गर्नु अपरिहार्य भइसकेको छ।

नेपालको संविधान निर्माणको इतिहासलाई नियाल्दा, नेपाल सरकारको वैधानिक कानुन २००४ मा अभिव्यक्ति स्वतन्त्रतासम्बन्धी स्पष्ट प्रावधान समावेश गरिएको थिएन भने ०१५ सालमा जारी भएको नेपालको प्रथम प्रजातान्त्रिक संविधानले केही स्वतन्त्रतासम्बन्धी अवधारणा अगाडि सारे पनि अभिव्यक्ति स्वतन्त्रतालाई स्पष्टरुपमा समावेश गरेको थिएन। यसको ठिक विपरीत ०१९ सालमा राजा महेन्द्रबाट जारी गरिएको पञ्चायती संविधानले प्रेस तथा अभिव्यक्ति स्वतन्त्रतामा पूर्ण बन्देज लगाई देशमा निरंकुश शासन व्यवस्थाको प्रारम्भ गरेको थियो। तर, नेपाल अधिराज्यको संविधान २०४७ ले आम नागरिकका मौलिक हक र आधारभूत मानवअधिकारको स्पष्ट व्यवस्था गर्नुका साथै विचार तथा अभिव्यक्ति स्वतन्त्रतालाई अत्यन्त महत्वका साथ उल्लेख गरेको पाइन्छ। उक्त संविधानले नागरिकका अन्य स्वतन्त्रताका अलावा प्रेस तथा प्रकाशन स्वतन्त्रता, सूचनाको हक र गोपनियताको हकसम्बन्धी प्रावधानहरु समावेश गरेको छ। यस्ता प्रावधानहरु सैद्धान्तिक तहमा अत्यन्त उदार देखिन्छन् तर कार्यान्वयनको समस्या भने यथावत् छ।

प्रेस तथा अभिव्यक्ति स्वतन्त्रता पत्रकार, सञ्चारकर्मी, सञ्चार माध्यम र मानवअधिकार समुदायको मात्र सरोकारको विषय नभई समस्त नागरिकका लागि अत्यावश्यक अधिकार हो। राज्यले सुनिश्चित गरेका आधारभूत अधिकारमाथि चुनौति आउने क्रम निरन्तर बृद्धि हुँदै गएकाले यिनको संरक्षण तथा सम्बर्द्धनका कदमहरु तत्काल चाल्न नागरिक समाज अग्रसर हुनुपर्ने अवस्था सृजना भएको छ। जसका लागि प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताकर्मीहरु सक्रिय हुनु जरुरी छ किनकी राज्य स्वयम् प्रेस तथा अभिव्यक्ति

# मनोवैज्ञानिक दबाब छ



**तीर्थ कोइराला**
**समाचार प्रमुख, कान्तिपुर टेलिभिजन**

**केही वर्षयता पत्रकारहरुले प्रत्यक्षरुपमा गाली, धम्की, घुर्कीजस्ता घटना भोग्दै आएका छन्। अपहरण, हत्यासमेत भएका कारण मनोवैज्ञानिक दबाबले काम गर्न वाध्य छन्। जिल्ला र केन्द्र दुवै तहमा यस्तो अवस्था विद्यमान छ। यस्ता घटनाहरू मूलतः जिल्लामा बढी भएका छन्। पत्रकारिताको लागि सूचना सम्प्रेषण गर्न पाउने हकका बारेमा द्वन्द्वरत पक्षहरुले बुझ्नुपर्छ। जसले प्रजातन्त्र र मानवअधिकारको दुहाई दिन्छन्, उनीहरुले अभिव्यक्ति स्वतन्त्रताको रक्षाको सवाललाई व्यवहारमा देखाउनु जरूरी छ। पत्रकारहरू पनि संयमित हुनुपर्छ र सधैं सबै विषयका उस्तैगरी समाचार जान्छन् भन्ने धारणा राख्नु हुँदैन। अहिले हामी विशेष परिस्थितिमा छौं। यस्तो परिस्थितिमा हाम्रो कार्य पनि विशेष तरिकाले सम्पन्न गर्नुपर्छ। द्वन्द्वरत पक्षहरुले प्रजातन्त्र, मानवअधिकारका घोषणापत्रहरू र नेपाल अधिराज्यको संविधानका धारालाई ख्याल गर्नु आवश्यक छ। संविधान मान्दैनौं भन्ने पक्षले पनि सभ्य र मानवीय व्यवहार गर्न सिक्नु जरूरी छ।**

*प्रस्तुतिः अक्रुर न्यौपाने*

स्वतन्त्रताकर्मीलाई गैरराज्य पक्षसँग साँठगाँठ गरेको वा उनीहरुका गतिविधिमा सहयोग पुऱ्याएको वहानामा उनीहरुका गतिविधिमा अवरोध खडा गर्ने संस्कारको विकास भएकाले नागरिक समाज उक्त स्वतन्त्रताको संरक्षणका लागि सक्रिय हुनुपर्ने भएको छ।

सरकार प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताको संरक्षणका सवालमा प्रतिबद्धता जाहेर गर्न अत्यन्त अगाडि देखिए पनि व्यवहारमा लागू गर्ने कार्यको अभाव यथावत् छ। प्रतिबद्धता एक हदसम्म महत्वपूर्ण मानिए पनि त्यसको कार्यान्वयन पक्ष दीर्घकालीन महत्वको हुन्छ। राज्य कमजोर भएको खण्डमा वा देशमा "विधिको शासन" को मान्यता ओझेलमा पर्न गएमा गैरराज्य पक्षहरु खासगरी सशस्त्र समूहहरुलाई नागरिकका अभिव्यक्ति स्वतन्त्रतामाथि अंकुश लगाउन वा त्यसतर्फ सक्रिय हुन प्रोत्साहन मिल्दछ। परिणामस्वरुप, नीतिगतरुपमा प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताको सम्मान गर्ने यथेष्ठ प्रतिबद्धता भए पनि व्यवहारमा उल्लंघन हुने क्रम नरोकिएकाले राजनीतिक स्वार्थ पूरा गर्ने उद्देश्यले आफूलाई सहयोग वा समर्थन नगरेको आरोपमा प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताका आधारभूत मान्यताहरुमाथि बारम्बार हस्तक्षेप हुने गरेको छ र प्रेस सेन्सरसीपको अभ्यासलाई संस्थागत गर्ने प्रयास भइरहेको छ। प्रजातान्त्रिक परिपाटीमा विचारलाई प्रतिबन्धित होइन, निर्वाधरुपमा अभिव्यक्त गर्न पाउने वातावरण सृजना गरिनुपर्नेमा नेपालको सरकार दमन गर्नमा अगाडि देखिएको छ। यसले प्रजातन्त्रको संस्थागत विकास गर्नुको साटो यसलाई जटिलतातर्फ धकेल्ने र संकटतर्फ उन्मुख गराउने निश्चित छ।

### अन्तर्राष्ट्रिय प्रतिबद्धता

नेपालमा प्रजातन्त्रको पुनर्स्थापना पश्चात् विदेश नीतिको एउटा आधार मानवअधिकार भएको सार्वजनिक गर्दै अन्तर्राष्ट्रिय मञ्चहरुमा मानवअधिकारका नीतिगत दस्तावेजहरुमा प्रतिबद्धता जनाउन क्रियाशिलता बढेको थियो। मानवअधिकारका अन्तर्राष्ट्रिय सन्धि-सम्झौताहरुमा सम्मिलन, हस्ताक्षर र अनुमोदन गर्ने सवालमा नेपाल कतिपय विकसित देशहरुभन्दा अत्यन्त प्रगतिशील देखिन्छ भने दक्षिण एशियामा त सबैभन्दा अग्रस्थानमा रहेको छ। यतिमात्र नभई, कुनै पनि सन्धि-सम्झौतामा विना आरक्षण हस्ताक्षर गर्ने सरकारको हिम्मत सराहनीय मान्नुपर्दछ। तर, मानवअधिकार वा अभिव्यक्ति स्वतन्त्रताको संरक्षण तथा प्रबर्द्धन अन्तर्राष्ट्रिय संयन्त्रहरुमा हस्ताक्षर गरेर नभई इमान्दारिताका साथ यसको कार्यान्वयन गरेर मात्र हुने गर्दछ।

अहिलेसम्म नेपाल संयुक्त राष्ट्रसंघबाट पारित करिब डेढ दर्जन मानवअधिकारसम्बन्धी अन्तर्राष्ट्रिय अभिसन्धि वा महासन्धिको अनुमोदनमार्फत् पक्षराष्ट्र भएको छ भने अन्तर्राष्ट्रिय श्रम संगठनबाट पारित महत्वपूर्ण सन्धिहरुमा पनि हस्ताक्षर गरेको छ। अभिव्यक्ति स्वतन्त्रता मानवका हरेक स्वतन्त्रतासँग जोडिएको छ र यसलाई सुनिश्चित गर्नका लागि मानवअधिकारको विश्वव्यापी घोषणापत्रको धारा १९ ले प्रत्येक व्यक्तिको विचार तथा अभिव्यक्ति अधिकारलाई संरक्षकत्व प्रदान गरेको छ, जसले प्रत्येक व्यक्तिलाई विना कुनै हस्तक्षेप र रोकटोक विना कुनै पनि माध्यमद्वारा विचार प्राप्त गर्ने, खोज्ने र प्रसार गर्ने अधिकार प्रदान

# पीडित पत्रकारले

सय दिनसम्म नजरबन्दमा राखिएका पत्रकार प्रेम बाँस्तालाले क्षतिपूर्ति पाउँ भनी अदालतमा उजुरी दिए तर क्षतिपूर्ति पाएनन्। एक सय ३० दिनसम्म नजरबन्दमा राखिएका पत्रकार पीबी दियालीको उजुरी त अदालतले लिन नै अस्वीकार गऱ्यो। उता अठार दिनसम्म नजरबन्दमा राखिएका पत्रकार सोमनाथ बाँस्तोलाले उजुरी दिने म्याद गुज्रेको पत्तै पाएनन्। पत्रकार अम्बिका भण्डारीले पनि १६ महिनासम्म नजरबन्दमा बस्नुपऱ्यो।

यी चारैजना सरकारले संकटकाल लगाएको समयका द्वन्द्वपीडित (राज्यपीडित) पत्रकारहरु हुन्। ०५८ पुस ६ गतेको कुरा हो। त्यो बेला पीबी सुनसरीको इटहरी क्षेत्रबाट ब्लाष्ट टाइम्स पत्रिकामा काम गर्दै थिए। उनलाई इलाका प्रहरी कार्यालय, इटहरीको प्रहरी टोलीले कार्यालयबाटै आफ्नो नियन्त्रणमा लियो। नियन्त्रण गरेकै दिन जिल्ला प्रहरी कार्यालय, इनरुवा पुऱ्यायो। के कारण पक्राउ गरिएको हो, सुरक्षाकर्मीले प्रष्ट पार्न सकेनन्। पीबीले पक्राउको कारणबारे सोधखोज गर्दा "प्रमुख जिल्ला अधिकारी रामप्रसाद खतिवडाको आदेश" भन्थे।

प्रहरी हिरासतमा राखिएका उनलाई अरु बन्दीसरह दिसापिसाब गर्न जाँदा टुक्रुक्क बसेर हिंड्न लगाइयो तर प्रतिकार गर्दै भने- "मैले कुनै अपराध गरेको छैन। यदि अपराध नै गरेको भए पनि कानुनबमोजिमको सजाय भोग्न तयार छु तर यो अमानवीय कार्य गर्न वाध्य छैन।" उनको त्यो प्रतिकारबाट प्रहरी थाक्यो र अरु थुनुवाहरुले पनि टुक्रुक्क बसेर हिंड्नु नपर्ने भयो।

हिरासतमा राति जँड्याहा र मानसिक सन्तुलन ठीक नभएका व्यक्तिहरु ल्याएर राखिन्थ्यो। एक दिन एकजना जँड्याहालाई सुरक्षाकर्मीले ल्याए र सुतिरहेका बन्दीहरुका ढाड र छातिमा फालिदिए। पीबीले त्यसको प्रतिवाद गरे। जँड्याहा ठूल्ठूलो स्वरले करायो। माथिल्लो तलामा सुतेकी महिला प्रहरीको सातो गएछ। उनी एकछिनपछि चिच्याउन थालिन्। उनलाई तत्काल अस्पताल लगियो। कुरा के रहेछ भने- जँड्याहालाई अरु बन्दीले हप्काउँदा ऊ आत्तिएर ती बन्दीहरुलाई "माओवादीले माऱ्यो, गोली ठोक" भन्दोरहेछ। त्यो आवाज सुनेपछि प्रहरीहरु भागाभाग गर्दै खतराको संकेत दिन थाले। तर त्यहाँ केही भएको थिएन। पीबीले अनुभव सुनाए।

पीबीलाई थुन्नुपर्ने प्रमुख कारणचाहिं उनले जिल्ला प्रशासन कार्यालयको घुस र भ्रष्टाचारसम्बन्धी समाचार प्रकाशित गरेका रहेछन्। त्यहि समाचारमा पूर्वाग्रही भएर तत्कालीन सहायक प्रमुख जिल्ला अधिकारी फविन्द्र पोखेलको निर्देशनमा, माओवादीसँग विशेष उठवस गरेको र माओवादीलाई बढावा दिने समाचार तथा तस्वीर छापेको आरोप लगाइएको थियो।

"सायद म ब्राम्हण-क्षेत्री अर्थात् उच्च जातको व्यक्ति भएको भए पक्राउ पर्ने थिइनहोला, किनकी म कथित दलित जातिको भएको हुनाले माओवादीसँग यसको राम्रो सम्बन्ध छ भन्ने भ्रम प्रहरी प्रशासनलाई रहेछ", उनी भन्छन्- "हिरासतमा पनि जातीय छुवाछूत प्रथा कायम रहेछ। सुरक्षाकर्मीले उच्च जात भनिने व्यक्ति पक्राउ परे हिरासत बाहिर राख्थे, गालीगलौज पनि उतिसाह्रो गर्दैनथे। तर कथित दलित वर्गका व्यक्तिहरुलाई कुटपिट गर्ने, गालीगलौज गर्ने गरिन्थ्यो। नजरबन्दमा रहँदा पत्रपत्रिका पढ्न, रेडियो सुन्न, चाहेको बेला नुहाउन, लुगा धुन नदिने नियम बनाइएको रहेछ। म त्यहाँ गएपछि ती सबै कुरामा प्रतिवाद गरेपछि हटाइयो," पीबी भन्छन्।

पीबीलाई जिल्ला प्रशासन कार्यालय, सुनसरीले आतंककारी तथा विध्वंसात्मक कार्य (नियन्त्रण तथा सजाय) अध्यादेश २०५८ को दफा ९ अर्न्तगत निवारक नजरबन्दमा राख्ने पहिलो पुर्जी ०५८ पुस ९ गते थमायो। तीन महिनापछि ०५८ चैत ११ गते पुन: त्यही व्यहोराको अर्को पुर्जी थमाइयो। उक्त अध्यादेश संसदले पारित गरेर ऐन बनेपछि ०५८ चैत २९ गते तेस्रो पुर्जी थमाइयो।

पीबीले हिरासत मुक्त भएपछि ०५९ मंसिर १३ गते यातनाको क्षतिपुर्ति ऐन २०५३ का आधारमा जिल्ला अदालत, सुनसरीमा निवेदन दिए। अदालतले फैसला गर्दा म्याद गुज्रेकाले निवेदन दर्ता खारेज गर्ने आदेश दियो। ०५९ जेठ १० गते नजरबन्द मुक्त गरिएको तीन महिनाभित्र अर्थात् ०५९ भदौ १० गते क्षतिपुर्तिको निवेदन दिनुपर्ने भन्ने अदालतको जिकिर रह्यो। पीबीले ०५९ मंसिर १३ गते सुनसरी जिल्ला अदालतमा निवेदन पेश गरेका थिए।

पीबीको उजुरी मानवअधिकार तथा प्रजातान्त्रिक मञ्चको तर्फबाट अधिवक्ता भरत थापाले हालेका थिए भने न्यायाधीश एकराज नेपालले फैसला गरेका थिए। हिरासतमा रहँदा शारीरिक यातना नदिए पनि मानसिक यातना दिइएको पीबी बताउँछन्। उनले ९० हजार रुपैयाँ क्षतिपूर्तिको दाबी गर्दै उजुरी दिएका थिए। पीबीको स्थायी घर खोटाङको चिसापानी गाविसमा पर्दछ। उनले ०५३ सालदेखि पत्रकारिता शुरु गरेका हुन्। उनी इटहरी नपा-४ मा डेरा गरी बस्थे। उनको खास नाम प्रेमबहादुर हो। उनी अहिले मर्निङ टाइम्समा काम गर्दछन्।

०५९ वैशाख २३ गते राति मोरङको हरैचा गाविस-५ का प्रेम बाँस्तोलालाई इलाका प्रहरी कार्यालय, हरैंचाले घरैबाट गिरफ्तार गऱ्यो। दश दिनसम्म जिल्ला प्रहरी कार्यालयको हिरासतमा राखियो। नब्बे दिनसम्म आतंककारी तथा विध्वंसात्मक कार्य (नियन्त्रण तथा सजाय) ऐन २०५८ अर्न्तगत मोरङ कारागारमा राखियो।

हिरासतमा रहँदा आफूलाई शारीरिक तथा मानसिक दुवैखाले यातना दिइएको बाँस्तोला बताउँछन्। उनका अनुसार, प्रहरीले टायरले बनेका पञ्जाको प्रयोग गरी शरीरका विभिन्न भागमा कुटपिट गरे। "समाचारको स्रोत को हो ? को-को माओवादीसँग भेट गरिस् ? कहिलेदेखि माओवादीमा लागिस् जस्ता प्रश्नहरु गर्दै कुटपिट गर्दथे" उनी भन्छन्। एक दिन विहान १० बजेदेखि ४ बजेसम्म उभ्याएर खान पनि नदिई प्रहरीले बयान लिएको पीडित प्रेमले दु:खेसो पोखे। घरबाट गिरफ्तार गर्दा र हिरासतमा १० दिनसम्म राख्दा पनि थुनुवा पुर्जी दिइएन। पुर्जीको कुरा उठाउंदा प्रहरी निरीक्षक ईश्वर कार्कीले कुटपिट गरे। "फेरी पनि सेना र प्रहरीका विरुद्ध समाचार लेखिस् भने तेरो जीवन समाप्त हुन्छ। नेपाली कांग्रेस मोरङका उपसभापति दिलीप सापकोटाको घरमा बम हान्ने तैं होइनस् ? घर भत्किएको फोटो किन खिचिस् ?" जस्ता प्रश्न गरेर मानसिक यातना दिने काम भएको उनी बताउँछन्। कारागार जाने बेलासम्म पनि उनलाई पुर्जी थमाइएन। बयान लिने सई याम अधिकारीले प्रश्न सोधेरै मानसिक तनाव दिएका थिए। तिनै सईले गोप्य भनेर अर्का प्रहरीलाई एउटा पत्र दिए। मोरङ कारागार पुग्दा पो थाहा भयो, त्यो त नजरबन्दमा राख्ने जिल्ला प्रशासन कार्यालय, मोरङको थुनुवा पुर्जी रहेछ।

पत्रकार बाँस्तोलाले पाँचवटा सरकारी निकायलाई विपक्षी बनाई ९० हजार रुपैयाँको माग दाबी गरी यातना क्षतिपुर्तीसम्बन्धी उजुरी मोरङ जिल्ला अदालतमा हदम्याद कायम रहेको अवस्थामा दिएका थिए। अदालतका न्यायाधीश ठाकुरप्रसाद शर्माले "निवेदकको माग दाबी नपुग्ने ठहर गर्दछ" भन्दै ०६० असार ११ गते फैसला गरेका थिए। पीडितले जिल्ला अदालतको उक्त फैसलाका विरुद्ध पुनरावेदन अदालत,

# राहत पाएनन्

विराटनगरमा पुन: यातनाको क्षतिपुर्तीका लागि उजुरी दिए। तर सो अदालतले पनि जिल्ला अदालतको फैसलालाई सदर गर्ने फैसला गर्‍यो।

पत्रकार बास्तोला सुरक्षा निकायले गिरफतार गर्नुअघि मोरङको बेलबारीबाट पत्रकारिता गर्दथे। थुनामुक्त भएपछि सुनसरीको इटहरीबाट ब्लाष्ट टाइम्स शाखाको इन्चार्ज भई काम गर्दैछन्। उनी भन्छन्- "अझै पनि सैनिक र प्रहरीले गरेका गलत कार्यबारे समाचार लेख्न डर लाग्छ। खुलेर लेख्न सक्दिन। शारीरिक यातनाभन्दा मानसिक यातना चर्को हुँदो रहेछ।"

त्यसबेला जनआस्था साप्ताहिकमा समाचार लेखेवापत् मोरङको हरैचा गाविस-५ का सोमनाथ बास्तोलालाई पनि सुरक्षा निकायले ०५९ बैशाख २७ गते गिरफतार गर्‍यो र १८ गते दिनसम्म हिरासतमा राखी चर्को यातना दिएर छाडिदियो। विनापुर्जी पक्राउ गरिएका बास्तोलालाई पक्राउ गर्दा र छाड्दा पनि कुनै पुर्जी दिइएन। "त्यसबेला यातनाविरुद्ध क्षतिपुर्ती मुद्दा हाल्नुपर्छ भन्न पनि थाहा थिएन। म्याद सकिएपछि मात्र उजुरी हाल्ने कुरा थाहा पाएँ", बास्तोला भन्छन्।

उनलाई पनि जिल्ला प्रहरी कार्यालय, मोरङको हिरासतमा राख्दा टायरका पन्जा र मुक्काले शरीरका विभिन्न भागमा कुटपिट गरिएको थियो। सो कार्यालयका प्रहरी निरीक्षक ईश्वर कार्कीले शारीरिक यातना दिएको र ज्यानमार्ने धम्की दिएको बास्तोला बताउँछन्। प्रहरी यातनाकै कारण शारीरिकरुपमा कमजोर बनेका बास्तोलालाई थुनामुक्त हुनासाथ ज्वरो आयो, टाइफाइड भयो। एक महिना ओछ्यान परे। यातनाका कारण उनका आँखा पनि कमजोर भएका छन्। "कहिलेकाहीं जीउ पनि झम्झमाउने गर्दछ", उनी भन्छन् "पक्राउ गरेको पहिलो दिन त लगातार तीन घण्टासम्म कुटपिट गरियो। आत्मसमर्पण गर भन्दै एउटा कागजमा हस्ताक्षर गराउन खोजे, मैले मानिन। नमानेकै बदलामा कुटपिट गरियो।"

पत्रकार अम्बिका भण्डारीको घर धनकुटाको कुरुलेतेनुपा गाविस-३ मा छ। उनी धनकुटाबाट जनआस्थाका लागि समाचार पठाउँथे। जनआस्था साप्ताहिकमा माओवादी गतिविधी सम्बन्धी समाचार सम्प्रेषण गरेको आरोपमा ०५८ पुस १ गते धनकुटामै कार्यरत रहंदा प्रहरीले पक्राउ गरेको थियो। ०५८ पुस ३ गते प्रमुख जिल्ला अधिकारी शम्भु कोइरालाले आतंककारी तथा विध्वंसात्मक कार्य (नियन्त्रण तथा सजाय) अध्यादेश २०५८ को दफा ९ अर्न्तगत ९० दिनसम्म जिल्ला प्रहरी कार्यालय धनकुटामा नजरबन्दमा राख्न आदेश दिएका थिए।

०५८ चैत २ गते प्रमुख जिल्ला अधिकारी कोइरालाले पुन : थप अवधिका लागि भनी तीन महिना नजरबन्दमा राख्ने आदेश जारी गरे। उनै प्रजिअले ०५८ चैत २७ गते नजरबन्दबाट मुक्त गरिएको पत्र जारी गरे। तर पत्रकार भण्डारी कानूनीरुपमा मात्र छाडिए, व्यवहारिक रुपमा छाडिएन। कारागार मुक्त भए पनि कारागार बाहिर नरहेको अनुभव भएको विचार व्यक्त गर्दछन्, भण्डारी।

०५९ बैशाख २ गते तिनै प्रमुख जिल्ला अधिकारीले "माओवादी आतंककारी माओवादी समूहसग आवद्ध भएको प्रमाण जानिने पर्याप्त आधारहरु भेटिएको" जनाउँदै पुन: ९० दिन जिल्ला प्रहरी कार्यालयमा राख्न आदेश दिए। त्यस्तै ०५९ साउन ५ गते पुन: आतंककारी ऐन ०५८ अनुसार नब्बे दिन नजरबन्दमा राख्ने आदेश दिए। सो आदेशपत्रमा नेपाल अधिराज्यको सार्वभौमसत्ता, अखण्डता वा सार्वजनिक शान्ति र व्यवस्थामा तत्काल खलल पर्न सक्ने र जनताको जीउज्यानप्रति खतरा उत्पन्न हुने कारण दिइएको थियो। उनलाई केही महिना मात्र कारागारमा राखिएको थियो।

भण्डारी १६ महिना ५ दिन नजरबन्दमा रही ०६० बैशाखमा मात्र रिहा भए। नजरबन्दमा हुंदा चरम यातनाका कारण अझै पनि औषधी गरिरहेका छन्, उनी।

नजरबन्दबाट निस्किएपछि उनले धनकुटा जिल्ला अदालतमा यातना क्षतिपुर्ति ऐन, २०५३ अन्तर्गत मुद्दा हालेका छन्। तर मुद्दा प्रक्रियामा नै अल्झिरहेको छ।

भण्डारीलाई बढी समयसम्म थुनामा राख्नुमा उनका एकजना दाजु माओवादीको धनकुटा जिल्लाका जिम्मेवार कार्यकर्ता भएर पनि हो। स्नातक पढ्दै गरेका उनको पढाई पक्राउपछि अवरुद्ध भयो। स्थगित पढाई पुन: संचालन गर्ने तरखरमा छन् उनी।

नजरबन्दमा रहेको अवस्थामा कारागारभित्र भएको शोषण, अन्याय-अत्याचारका बारेमा पत्रिकामा समाचार पठाएको आरोपमा प्रहरीले परीक्षा दिनबाट पनि वञ्चित गरेको उनी बताउँछन्। आफूलाई प्रहरीले पक्राउ गर्दा त्यहाँको पत्रकार महासंघले कुनै पहल नगरेको उनको गुनासो छ। रिहा भएपछि भने महासंघले चासो राखेको बताउँछन्।

कारागार मुक्त भएपछि धनकुटाबाट विस्थापित भएर विराटनगरमा बस्दै र जनआस्था साप्ताहिकमा रिपोर्टिङ गर्दै आएका छन्। संकटकालमा पक्राउ पर्दा यातना दिने प्रहरी निरीक्षक रमेश कार्की हाल बेलबारी इलाका प्रहरी कार्यालयमा छन्। निरीक्षक कार्कीले अहिले पनि धम्क्याउने गरेको उनी बताउँछन्। अहिले पनि ढुक्क भएर समाचार लेख्न नसकेको र कारागार मुक्तपछि पनि सुरक्षाकर्मीबाट धेरैपटक गिरफ्तार गर्ने र ज्यानमार्ने धम्की आउने गरेको उनले जानकारी गराए।

मोरङ होस् वा सुनसरी या झापा होस् वा धनकुटा, संकटकाल र त्यसपछि धेरै सञ्चारकर्मीहरु सरकार र माओवादीको हिंसात्मक द्वन्द्वबाट पीडित भएका छन्। ०५९ मंसिर २५ गते मोरङको पथरी गाविस-३ का जनादेश साप्ताहिकमा कार्यरत पत्रकार अम्बिका तिम्सिनालाई माओवादीले गोली हानी हत्या गरे। ०६१ भदौ १३ गते सुरक्षाकर्मीले मोरङको बरडंगा गाविसको कल्याणपुरमा जनादेश साप्ताहिकका मेची-कोशी सम्वाददाता बद्री खड्का र सोही ठाउमा ०६१ भदौ ३० गते सोही पत्रिकाका सम्वाददाता नन्दकुमार थापाको हत्या गरे। खड्का संखुवासभा जिल्ला जलजला गाविसका हुन् भने थापा पाचथर जिल्ला भाग्पा गाविस-९ का। यी दुवै पत्रकारलाई रंगेलीका सुरक्षाकर्मीले नियन्त्रणमा लिएर हत्या गरेको स्थानीयवासीको दावी छ।

विराटनगरमा कार्यरत पत्रकार शंकर लुइँटेल, महेन्द्र विष्ट, सत्यनारायण शर्मा, सूर्यनारायण यादव संकटकालमा सुरक्षा निकायबाट सताइएका थिए। यीमध्ये पत्रकार शर्मा एक दिन प्रहरी हिरासतमा बस्न र सूर्यनारायण भारततर्फ भाग्न वाध्य भए। विष्ट र लुइँटेललाई समाचार लेखेकै आधारमा धम्कीपूर्ण व्यवहार गरिएको थियो।

माथि उल्लेखित द्वन्द्वपीडित पत्रकारहरुले हालसम्म कसैबाट सहयोग पाउन सकेका छैनन्। प्रेम बास्तोला र पीवी दियालीको एउटै स्वर छ- "द्वन्द्वपीडित पत्रकारका नाममा विभिन्न सहयोग आउछन् तर ती सबै काठमाडौंबाट पहुंचवालाहरुलाई बाँडिन्छ। मोफसल, यसमा पनि सुदूरपूर्वलाई उपेक्षा गरिएको छ। कसैले सोधीखोजी गरेका पनि छैनन्। मोफसलमा पनि पूर्वाञ्चल बढी उपेक्षित छ।"

● *दीपेन नेउपाने*

गरेको छ। तथापि यो घोषणापत्र मात्र भएकाले यसको कार्यान्वयनका लागि राज्यमाथि नैतिक दायित्व मात्र रहन्छ। सोही कुरा महसुस गरेर सन् १९६६ मा पारित नागरिक तथा राजनीतिक अधिकारसम्बन्धी अनुबन्धमार्फत् कानुनी दायित्वभित्र ल्याइएको छ। नेपाल उक्त अनुबन्धको पक्षराष्ट्र भएकाले त्यसको कार्यान्वयन गर्नुपर्ने बाध्यात्मक दायित्व छ।

अन्तर्राष्ट्रिय संयन्त्रका प्रावधानहरुलाई व्यवहारमा उतार्न नेपालमा सन्धि ऐन २०४७ कार्यान्वयनमा ल्याइएको छ। जसको धारा ९ अनुसार नेपाल पक्ष भएका सम्पूर्ण सन्धि, महासन्धी र घोषणापत्रहरु नेपाल कानुनसरह लागू हुने व्यवस्था गरिएको छ। यदि देशका आन्तरिक कानुन अन्तर्राष्ट्रिय कानुनसँग बाझिएको खण्डमा अन्तर्राष्ट्रिय कानुनमा भएको व्यवस्था अनुसार राष्ट्रिय कानुनको संशोधन वा पुनर्लेखन गरी व्यवहारमा उतार्न नेपाल बाध्य छ। तसर्थ, सैद्धान्तिक तहमा मात्र नभई उक्त प्रावधानहरुलाई व्यवहारमा उतार्नु नैतिक दायित्व मात्र नभएर कानुनी दायित्व पनि हुन आएको छ।

सन्धि ऐनको धारा ९ मा "संसदबाट अनुमोदन, सम्मिलन, स्वीकृति वा समर्थन भई नेपाल अधिराज्यका वा श्री ५ को सरकार पक्ष भएको कुनै सन्धिको कुरा प्रचलित कानुनसँग बाझिएमा सो सन्धिको प्रयोजनको लागि बाझिएको हदसम्म प्रचलित कानुन अमान्य हुनेछ र तत्सम्बन्धमा सन्धिको व्यवस्था नेपाल कानुनसरह लागू हुनेछ" भनिएको छ।

सरकार, सुरक्षाकर्मी तथा सशस्त्र माओवादी पक्ष स्वतन्त्र तथा निष्पक्ष समाचार सम्प्रेषणको वातावरण सृजना नगरी अवरोध खडा गर्ने कार्यमा सक्रिय भएको पाइन्छ। साथै, द्वन्द्व प्रभावित क्षेत्रमा कार्यरत मानवअधिकारकर्मी, सञ्चारकर्मी र अभिव्यक्ति स्वतन्त्रताकर्मीका गतिविधिहरू निस्क्रिय तुल्याउने वा उनीहरूको प्रत्यक्ष उपस्थितिमा कमी ल्याउने उद्देश्यले दुरुत्साहित गर्ने कार्यमा देशका सुरक्षा निकायहरू (शाही नेपाली सेना, नेपाल प्रहरी र सशस्त्र प्रहरी) तथा प्रशासन र नेकपा (माओवादी) सक्रिय हुँदै आएका छन्।

**सशस्त्र द्वन्द्व र अभिव्यक्ति स्वतन्त्रता**

०५२ फागुनमा नेकपा (माओवादी) ले विद्यमान राजनीतिक व्यवस्थालाई परिवर्तन गरी गणतन्त्रात्मक राज्य व्यवस्था स्थापना गर्ने उद्देश्यले संचालन गरेको "जनयुद्ध" पश्चात् आम नागरिकका मानवअधिकारलगायत् प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताका अधिकारहरु दिनानुदिन संकटमा पर्दै आएका छन्। दीर्घकालीन जनयुद्धमार्फत् राज्य संयन्त्रको सुरक्षा निकायलाई पराजित गरी आफ्नो नियन्त्रणमा लिने र राज्यका सुरक्षा निकायले सशस्त्र विद्रोही माओवादीलाई दमनमार्फत् निर्मूलन गर्ने अभियानका क्रममा सामान्य नागरिक दोहोरो चपेटामा पर्ने क्रममा बृद्धि हुँदै आएको छ।

एकातिर आम नागरिकहरु द्वन्द्वका कारण दोहोरो मारमा परेका छन् भने अर्कोतिर उनीहरुको हक एवम् अधिकार उल्लंघन भएका समाचारहरु सरकारी, गैरसरकारी र अन्तर्सरकारी निकायको जानकारीमा आउन सकिरहेका छैनन्। यसको मतलब सरकार, सुरक्षाकर्मी तथा सशस्त्र माओवादी पक्ष स्वतन्त्र तथा निष्पक्ष समाचार सम्प्रेषणको वातावरण सृजना नगरी अवरोध खडा गर्ने कार्यमा सक्रिय भएको पाइन्छ। साथै, द्वन्द्व प्रभावित क्षेत्रमा कार्यरत मानवअधिकारकर्मी, सञ्चारकर्मी र अभिव्यक्ति स्वतन्त्रताकर्मीका गतिविधिहरु निस्क्रिय तुल्याउने वा उनीहरुको प्रत्यक्ष उपस्थितिमा कमी ल्याउने उद्देश्यले दुरुत्साहित गर्ने कार्यमा देशका सुरक्षा निकायहरु (शाही नेपाली सेना, नेपाल प्रहरी र सशस्त्र प्रहरी) तथा प्रशासन र नेकपा (माओवादी) सक्रिय हुँदै आएका छन्।

वर्तमान परिवेशमा नेपालमा प्रेस तथा अभिव्यक्ति स्वतन्त्रतालाई प्रत्यक्षरुपमा प्रबर्द्धन गर्ने मानवअधिकार समुदाय र सञ्चार जगत भए पनि सरकार, सुरक्षा निकाय र माओवादीबाट बारम्बार सृजना गरिने अवरोधका कारण उनीहरु स्वतन्त्र तथा निर्भयपूर्वक समाचार प्रकाशन वा प्रवाह गर्नबाट वञ्चित हुनुका साथै जीवनसमेत जोखिममा पर्न थालेको छ। सरकार तथा माओवादीको नेतृत्व तहबाट पत्रकार तथा मानवअधिकारकर्मीको आवागमन र समाचार संकलन तथा प्रकाशन वा प्रवाह गर्नमा कुनै पनि प्रकारका अवरोध खडा नगर्ने प्रतिवद्धता जाहेर भए पनि कार्यकर्ता वा तल्लो निकायका सुरक्षा पदाधिकारीबाट त्यसको पालना भएको कमै पाइएको छ। द्वन्द्वले जटिल स्वरुप लिँदै जाँदा स्वतन्त्ररुपमा समाचार सम्प्रेषण र प्रकाशन गर्नसक्ने वातावरणको सुनिश्चितता परै जाओस्, उनीहरुका गतिविधिहरुको समर्थन नगरे वा आलोचना गरेका कारण पत्रकार तथा अभिव्यक्ति स्वतन्त्रताकर्मीले गम्भीर प्रताडना खप्नु परिरहेको छ। परिणामस्वरुप सुरक्षा निकाय र माओवादी पक्षबाट पत्रकारहरुको नृशंस हत्या गरिएका, बेपत्ता वा अपहरण गर्ने क्रममा वृद्धि भएको छ भने धम्कीका अलावा शारीरिक तथा मानसिक यातनाको शिकार हुनु परेका प्रशस्त उदाहरणहरु पाउन सकिन्छ। उदाहरणका लागि गिरफ्तारीपश्चात् सुरक्षाकर्मीको निर्मम यातनापश्चात् मारिएका माओवादी समर्थित पत्रकार कृष्ण सेन र एक स्थानीय कार्यक्रमबाट जवर्जस्ती पशुझैं डोहोऱ्याएर रुखमा बाँधी नृशंसरुपमा माओवादीद्वारा हत्या गरिएका पत्रकार ज्ञानेन्द्र खड्कालाई लिन सकिन्छ।

सामन्यतया राजधानी तथा मोफसलमा कार्यरत पत्रकार तथा अभिव्यक्ति स्वतन्त्राकर्मीका समस्याहरुमा

व्यापक भिन्नता हुनु स्वभाविक हो। कन्तिमा राजधानीमा कार्यरत पत्रकारहरुको ज्यान विभिन्न दवावमूलक संस्थाहरुको सक्रियताका कारण जोखिममा पर्ने संभावना कम देखिन्छ भने ग्रामीण तथा माओवादी प्रभावित दुर्गम क्षेत्रमा कार्यरत पत्रकारको स्थिति घटना भइसकेपछि मात्र सार्वजनिक हुने भएकाले जीवन सुरक्षा गर्न मुस्किल हुने गर्दछ। दुवै क्षेत्रमा कार्यरत प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताकर्मीहरुका समस्या समान प्रकारका हुने गरेका छन्, जुन सरकार, सुरक्षा निकाय वा माओवादीका सशस्त्र कारवाही वा उनीहरुवाट हुने ज्यादतीको अलोचना गर्नु नै भएको पाइएको छ। दुर्भाग्यको कुरा, सुरक्षा निकाय र माओवादी छापामारमा आलोचना सहन नसक्ने प्रवृत्तिको विकास भएको छ। त्यसैगरी धम्की वा त्रासको आडमा आफ्नो पक्षमा समाचार सम्प्रेषण गराउनैपर्ने संस्कारको विकास भएको छ। राजधानीमा पत्रकारको ज्यान खतरामा नभएको अवस्थामा पनि प्रकाशन संस्थाहरु वा पत्रकारमाथि प्रत्यक्ष वा अप्रत्यक्ष आउने दवावका कारण उनीहरु मानसिक यातनाको शिकार हुनु परेको छ। कतिपय अवस्थामा पत्रकारलाई राजधानीवाट गिरफ्तार गरी आँखामा पट्टी वाँधेर अज्ञात स्थलमा हिरासतमा राख्ने, शारीरिक वा मानसिक यातना दिने र वेपत्ता बनाउने कार्यमा सुरक्षा निकाय संलग्न भएकाले कोही कहीं सुरक्षित नभएको स्पष्ट हुन्छ। यसका अलावा सुरक्षा निकाय तथा सरकारबाट समय-समयमा जारी गरिने निर्देशनवाट प्रेस सेन्सरसीप लाद्न खोजेको अनुभव गरिएको छ। फलतः पत्रिका संचालकहरु लगानी सुरक्षित गर्नकै लागि कुनै पनि प्रकारको जोखिम उठाउन हिच्किचाउछन्, जसले अन्ततोगत्वा आम नागरिकका कहालीलाग्दा जीवनकथाहरु र हतियारको आडमा दुवै पक्षवाट भएका मानवअधिकार उल्लंघन वा ज्यादतीका घटनाहरु सार्वजनिक हुन सक्तैनन्।

समष्टिमा अहिले सशस्त्र द्वन्द्वले व्यापक रुप लिदै गएपछि आम पत्रकार तथा अभिव्यक्ति स्वतन्त्रताकर्मीहरु (मानवअधिकारकर्मी, शिक्षक, कानुन व्यवसायी आदि) त्रासपूर्ण जीवन वाँच्नु परिरहेको छ। उनीहरु स्वतन्त्ररुपमा मानवअधिकार उल्लंघन तथा ज्यादतीहरुको अनुगमन गर्न र त्यससम्बन्धी समाचार सम्प्रेषण वा प्रकाशन तथा प्रवाह गर्न सकिरहेका छैनन्। उनीहरुले विनाअवरोध सूचना संकलन र स्रोतमा पहुँच पाउन सकिरहेका छैनन्। द्वन्द्व प्रभावित क्षेत्रमा स्वतन्त्ररुपमा अवागमन गर्नवाट पनि वञ्चित हुन पुगेका छन्। एकातिर पत्रकार तथा मानवअधिकारकर्मीलाई सुरक्षा निकायबाट प्रभावित क्षेत्रमा भ्रमण अवरोध खडा गरिन्छ भने अर्कातर्फ भ्रमणपश्चात् माओवादीसँग साँठगाँठ गरेको भन्दै मानसिक यातना दिने गरिन्छ। त्यसैगरी माओवादीवाट प्रवेश अनुमतिको माग गरिन्छ र भ्रमणको अनुमति पाएमा उनीहरुका गतिविधिमा निगरानी राखिन्छ। कतिपय अवस्थामा उनीहरुका कमजोरीहरु सार्वजनिक गर्दा विभिन्नखालको धम्की र अवरोधहरु भोग्नु परेका घटनाबाट पनि प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताकर्मीहरु पीडित भएका छन्।

हिंसात्मक द्वन्द्व आफैमा कहालीलाग्दो त छदैछ, यसका स्वरुपहरु पनि दिनानुदिन जटिल हुँदै गएका छन्। समस्या समाधानका संभावनाहरु न्यून देखिदै आएका छन्। सरकार र माओवादी समस्या समाधानका लागि आवश्यक विश्वसनीय वातावरण तयार गर्नुको सट्टा सैनिक शक्ति सुदृढीकरणमा व्यस्त भएको आभास पाइन्छ। जनता दोहोरो सैनिक शक्तिको चपेटामा परेका छन् र द्वन्द्वमा संलग्न पक्षहरुका ज्यादतिको शिकार भइरहेका छन्। सरकार र माओवादी दुवै पक्षले आम नागरिकका मानवअधिकारको सम्मान गर्नु त परै जाओस्, प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताकर्मी वा मानवअधिकारकर्मीसमेतलाई हतोत्साहित बनाउने कार्य गरिरहेका छन्। फलतः प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताकर्मीहरुले आफ्नो महत्वपूर्ण समय स्वतन्त्र र निष्पक्ष समाचार प्रकाशमा ल्याउनुभन्दा पनि आफ्नो ज्यान कसरी सुरक्षित राख्ने भन्ने कुरामा बिताउनु परेको छ।

**वर्तमान चुनौतिहरु**

देश अहिले आन्तरिक सशस्त्र द्वन्द्वमा छ। एकातिर माओवादी समूह संविधानसभामार्फत् नयाँ संविधान निर्माण गरी गणतन्त्रात्मक राज्य पद्धतिको सृजना गर्न दीर्घकालीन जनयुद्धमा होमिएको छ भने अर्कोतिर राजा ज्ञानेन्द्रको ०५८ असोजको "असंवैधानिक र अप्रजातान्त्रिक" कदमका विरुद्ध विभिन्न राजनीतिक दलहरुले करिव दुई वर्षदेखि सडकमा विरोध कार्यक्रम संचालन गरिरहेका छन्। त्यस्तै चार दल संयुक्त सरकारमा छन्। शाही कदमको वर्तमान अवस्थाका विषयमा राजनीतिक दलहरुका वेग्लावेग्लै धारणा सार्वजनिक भएका छन्। समस्याको समाधान शान्तिपूर्ण वार्ता भए पनि राजनीतिक स्वार्थ र वार्ता प्रक्रियाको संवेदनशीलताको अभावका कारण वार्ता प्रारम्भ हुन सकिरहेको छैन। सरकारले पुस मसान्तसम्म तोकेको सीमा माओवादी पक्षले अप्रत्यक्षरुपमा अस्विकार गरिसकेको छ। माओवादीले तटस्थ तेस्रो पक्षको मध्यस्थतामा शान्ति वार्ता प्रारम्भ गर्नुपर्ने माग दोहोऱ्याइरहेको छ। समाधानका लागि माग र तर्कहरु जेसुकै प्रस्तुत गरिएको अवस्था भए पनि न्यूनतमरुपमा मानवअधिकारको स्थितिमा सुधार वा प्रेस तथा अभिव्यक्ति स्वतन्त्रता हननका घटनाहरुमा कमी ल्याउन वर्तमान हिंसात्मक द्वन्द्वको शान्तिपूर्ण समाधान गर्नैपर्ने भएको छ।

द्वन्द्वका नाममा, सशस्त्र विद्रोही समूहका गतिविधि निस्तेज पार्ने नाममा सरकार सुरक्षा निकायको फन्दामा परेको छ। देशमा नागरिक शासनका गुणहरुमा दिनानुदिन ह्रास हुँदै आएको छ। सशस्त्र विद्रोह दवाउने नाममा पञ्चायती व्यवस्थाका कतिपय काला कानुनहरुलाई कार्यान्वयनमा ल्याइनु आजको सबैभन्दा खतरनाक विषय हो। यसका अलावा सरकार आफैले प्रतिपादन गरेका नीति र पक्षराष्ट्र भएका अन्तर्राष्ट्रिय संयन्त्रहरुले सुनिश्चित गरेका मानवअधिकारका प्रावधानहरु विरुद्ध हुने कानुनहरु निर्माण गरी कार्यान्वयनमा ल्याइनुले सरकार प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताका सवालमा संवेदनशील नभएको स्पष्ट हुन्छ। त्यसैगरी




*स्रोत: मानवअधिकार तथा प्रजातान्त्रिक अध्ययन केन्द्र (सेहुर्डेस)*

विद्रोही माओवादीले मानवअधिकारका अन्तर्राष्ट्रिय संयन्त्रहरुलगायत् जेनेभा महासन्धिको पालना गर्ने प्रतिबद्धता जाहेर गरे पनि व्यवहारमा उल्लंघन भइरहनुले प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताकर्मीका सामू जोखिमपूर्ण परिस्थिति सृजना भएको स्पष्ट हुन्छ।

देशमा "विधिको शासन" को परिकल्पना धरासायी हुँदै गएको अवस्थामा सरकार मानवअधिकार तथा अभिव्यक्ति स्वतन्त्रतालाई चुनौति दिने कानुन खारेज गर्नुको साटो त्यस्ता कानुनहरुलाई मानवअधिकार उल्लंघन गर्ने कार्यमा उपयोग गरिनु दुर्भाग्यको विषय हो। सरकारले हाल राज्यविरुद्धको अपराध र सजाय ऐन २०४६ र सार्वजनिक सुरक्षा कानुन प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताका हक दबाउनमा उपयोग गरिरहेको छ भने आतंककारी तथा विध्वंसात्मक कार्य (नियन्त्रण तथा सजाय) अध्यादेशले देशमा दीर्घकालीनरुपमा नकारात्मक प्रभाव पार्ने निश्चत छ। यसले सुरक्षा निकायलाई शंकाका भरमा गिरफ्तार गर्ने, घर खानतलास गर्ने र हिरासतमा राख्ने अधिकार प्रदान गरेको छ। त्यसैगरी मानवअधिकार, प्रेस तथा अभिव्यक्ति स्वतन्त्रता र नागरिक स्वतन्त्रताका विश्वव्यापी प्रावधानलाई चुनौति दिनुका साथै प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताकर्मीलाई निष्पक्ष र स्वतन्त्रतापूर्वक समाचार सम्प्रेषणको कार्यमा प्रत्यक्ष अवरोध खडा गरेको छ।

**अन्त्यमा,**

प्रेस तथा अभिव्यक्ति स्वतन्त्रतालाई संरक्षण तथा सम्बर्द्धन गर्न सैनिकीकरणको अभ्यासलाई न्यून गर्नु र सहीरुपमा प्रजातान्त्रिक अभ्यासको प्रारम्भ गर्नु जरुरी छ। सरकारले बोलीमा मात्र नभई व्यवहारमा मानवअधिकार र प्रेस तथा अभिव्यक्ति स्वतन्त्रतासम्बन्धी राष्ट्रिय तथा अन्तर्राष्ट्रिय कानुनले प्रत्याभूत गरेका प्रावधानहरुको कार्यान्वयनमा इमान्दार हुनुपर्दछ। साथै माओवादी पक्षले उनीहरुको प्रभाव रहेको क्षेत्रमा पत्रकार जगत र मानवअधिकार समुदायलाई स्वतन्त्ररुपमा आवागमन गर्न र स्वतन्त्ररुपमा समाचार सम्प्रेषण तथा प्रकाशन वा प्रवाह गर्नसक्ने वातावरण सृजना गर्नुपर्दछ। आजको समस्या नीतिगत प्रतिबद्धता मात्र नभई यसको व्यवहारमा इमान्दारीका साथ पालना गर्नुपर्ने कार्यान्वयन पक्ष हुन आएको छ।

देश युद्धको चपेटामा परेका कारण सुरक्षा निकाय र सरकारको प्राथमिकता देशको सुरक्षा व्यवस्था सुदृढ गर्नु हो। यस्तो अवस्थामा आम नागरिकलगायत् प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताकर्मीका सबै प्रकारका स्वतन्त्रता र मानवअधिकारको संरक्षण गर्ने तथा उनीहरुको स्वतन्त्ररुपमा बाँच्न पाउने हकको रक्षा गर्नु सदैव प्राथमिकताको विषय बन्नुपर्दछ। माओवादी पक्षले नागरिकका आधारभूत मानवअधिकारको सम्मान गर्नमा इमान्दार हुनुपर्दछ र उनीहरुका नीतिगत निर्णयहरु कार्यकर्ता तहमा पालना हुनसक्ने संयन्त्रको निर्माण गर्नुपर्दछ। यसको सुनिश्चितता त्यतिबेला मात्र संभव छ, जतिबेला सरकार तथा माओवादी दुवै पक्षले आम पत्रकार जगत र मानवअधिकार समुदायलाई स्वतन्त्ररुपमा समाचार संकलन वा अनुगमन र त्यसको निर्भयपूर्वक प्रकाशन वा प्रवाह गर्ने वातावरण तयार गर्दछन्। त्यसैले आलोचना, विरोध नभई उनीहरुका कमिकमजोरीलाई सच्याउने अवसरका रुपमा लिनुपर्ने हुन आउँछ। यसबाट प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताकर्मी र मानवअधिकार समुदायलाई पूर्ण सुरक्षा अनुभुत गराउन र मानवअधिकार र प्रजातन्त्रको संस्थागत विकासमा सहयोग पुऱ्याउन सहयोग पुग्नेछ।

*(मानवअधिकार तथा प्रजातान्त्रिक अध्ययन केन्द्र - सेहुर्डेसका महासचिव वुढाथोकी अमेरिकास्थित सानडियगो विश्वविद्यालयवाट मानवअधिकार र द्वन्द्व समाधान विषयमा स्नातकोत्तर हुनुहुन्छ।)*

# किन हुन्छ अभिव्यक्ति स्वतन्त्रतामाथि आक्रमण ?



## हतियार नै कारण हो

किशोर नेपाल,
पूर्व सभापति, नेपाल पत्रकार महासंघ

हिंसात्मक द्वन्द्वको अवस्थामा अभिव्यक्ति स्वतन्त्रताको अवस्थावारे कुनै-कुनै कुरा ठोसरुपमा भन्न सकिँदैन। राजधानी र ठूला शहरहरुमा सचेत मानिसहरुले आफ्ना कुराहरु राख्ने गरेको तथा छलफल, माग आदि गरिरहेको देखिएता पनि द्वन्द्वग्रस्त शहरहरुको अवस्था त्यस्तो छैन। उदाहरणका लागि विराटनगरमा एउटा पत्रकार वा वुद्धिजीवीले जे कुरा सोच्न वा वोल्न सक्ला, त्यही कुरा नेपालगञ्जको पत्रकार वा वुद्धिजीवीले बोल्नसक्ने अवस्था छैन। यसको मतलव विराटनगर कम र नेपालगञ्ज वढी द्वन्द्वग्रस्त छ भन्ने होइन तर स्वभावैले मध्यपश्चिम र सुदुरपश्चिमको केन्द्र भएकाले नेपालगञ्जमा द्वन्द्वको प्रभाव वढी देखिन्छ। औद्योगिक शहर भएकाले र धेरैजसो शासकवर्गका मान्छेहरु वस्ने भएकाले विराटनगरमा अलि हलुका किसिमको वातावरण देखिन्छ।

हतियारको सवैभन्दा पहिलो काम नै मानिसको आवाजलाई दवाउने हो। वन्दुक पड्क्यो भने हाम्रो आवाज सुनिँदैन। देशमा अहिले अभिव्यक्ति स्वतन्त्रताको अवस्था कस्तो छ भन्ने कुरा यसैवाट अन्दाज गर्न सकिन्छ। यस्तो अवस्था उत्पन्न हुनुको कारण भनेकै हतियार हो। जव हतियार चम्कन थाल्छ, तव मान्छेका आवाजहरु दव्छन्। अहिले कसले, किन हतियार चम्काइरहेको छ भन्ने सवालमा माओवादी वा राज्यपक्षले चम्काएको छ भनेर एउटा साधारण भनाई दिएर पन्छिन मिल्दैन। मेरो अनुभव के छ भने, माओवादीहरुले अहिले मान्छेका आवाजलाई संगठित हुन नदिन एकप्रकारको प्रयत्न गरिरहेका छन् किनभने उनीहरुको राजनीतिक एजेण्डामा मानिसको अभिव्यक्ति स्वतन्त्रता प्राथमिकताको क्षेत्रमा पर्दैन। एउटा एकाधिकारवादी संस्कारको स्थापनाका लागि उनीहरु लागिरहेका छन्। त्यस्तो उग्र किसिमको शासन व्यवस्थामा एकाधिकारवादी संस्कारले नै प्रभूत्व जमाउँछ। तर, यसो भनेर राज्यलाई "क्लिन चिट" दिन सकिँदैन। राज्य पनि त्यही एकाधिकारवादी वाटोमा अगाडि वढिरहेको छ। तसर्थ, जव राज्य र माओवादी दुवै पक्ष एकाधिकारवादी वाटोमा लाग्छन् वा त्यस्तो संस्कारवाट प्रेरित हुन्छन्, त्यस्तो अवस्थामा अभिव्यक्ति स्वतन्त्रता खतरामा पर्दछ।

अहिले नेपालमा रंगिन पत्रिकाहरु निस्कन्छन्, एफएमहरु



## कानुन अनुरुप व्यवहार भएन

पुरुषोत्तम दाहाल,
सभापति,
मानवअधिकार तथा शान्ति समाज

कानुनीरुपमा अभिव्यक्ति स्वतन्त्रतामा वन्देज लाग्ने कुनै आधार छैन। हामीले संवैधानिक हिसावले पर्याप्त अभिव्यक्ति स्वतन्त्रता पाएका छौं। द्वन्द्वरत पक्षहरुले पनि हामी आधारभूत स्वतन्त्रताहरुमाथि खासगरी पत्रकार, मानवअधिकारकर्मीहरुलाई केही गर्दैनौं भनेका छन्। तर, मनोवैज्ञानिक दवाव भने पर्याप्त मात्रामा छ। कानुनीरुपमा हाम्रो स्वतन्त्रता यथावत् भए पनि व्यवहारिकरुपमा त्यस्तो अवस्था छैन। पत्रकारहरुमाथि हस्तक्षेप भइरहेको छ। द्वन्द्वरत दुवै पक्षद्वारा पत्रकारहरु मारिएका छन्। कतिपय ठाउँमा पत्रकारहरुलाई माओवादीको अनुमति लिएर जानुपर्ने वाध्यता छ। व्यवहारमा हेर्ने हो भने, स्वतन्त्रता झन्-झन् संकुचित हुँदै जाने अवस्थामा छ।

जहाँ वन्दुक हावी हुन्छ, जहाँ वलको प्रयोग हुन्छ, त्यहाँ कलमलाई कमजोर वनाउने प्रयत्न गरिन्छ। हामी वच्चावस्थामा "कलम ठूलो कि वन्दुक" भनेर वहस गर्थ्यौं। त्यस्तो वहस चल्नुको अर्थ नै के हो भने, यी एक-अर्काका पूरक होइनन्। वन्दुक र कलम आपसमा विरोधी मान्यता हुन्। जहाँ कलमको शक्ति वढी हुन्छ, त्यहाँ वन्दुकको शक्ति कमजोर हुन्छ। जहाँ वन्दुकको शक्ति सवल हुँदै जान्छ, त्यहाँ कलमको शक्ति कमजोर वनाउने कोशिश हुन्छ, यद्यपि कलमको शक्ति कहिल्यै कमजोर हुँदैन भन्ने मान्यता छ। वन्दुकले लेखकीय स्वतन्त्रतालाई दवाउने काम गर्छ। त्यो उसको धर्म हो। सकारात्मक रुपमा लिने हो भने वन्दुकको काम सुरक्षा गर्नु पनि हो। त्यस कोणवाट हेर्ने हो भने, वन्दुकलाई एकदमै खराव हो भन्न मिल्दैन तर त्यसको प्रयोग गर्ने मानिसहरुको आशय वा अवस्थामा यसको परिणाम निर्भर गर्दछ। जव वन्दुकको दुरुपयोग हुन्छ, जव शक्तिको लागि वन्दुक प्रयोग हुन्छ, जव अन्य सामाजिक पक्ष र मूल्यहरुका विरुद्ध वन्दुक उपस्थित हुन्छ, त्यस्तो अवस्थामा कलम कमजोर जस्तो लाग्छ। अहिले वन्दुक क्रमश: सवल हुन थालेको अवस्था छ। तर, यसको मतलव कलम कमजोर छ भन्नेचाहिँ होइन। कलमजीवीहरु जहिले पनि स्वतन्त्रताका पक्षधर हुन्छन्। स्वतन्त्रता भएन भने कलमको औचित्य हुँदैन। कलम चलाउने मान्छे निर्देशित हुन सक्दैन तर वन्दुक जहिले पनि निर्देशित हुन्छ। त्यो निर्देशित पक्षले स्वतन्त्रताका विरुद्ध काम गर्छ।

हिंसाको पहिलो निर्णय गर्ने माओवादी हुन्। फलानालाई मार्छु भनेर निर्णय गर्ने र पहिलो आक्रमण गर्ने पक्ष जहिले पनि पहिलो दोषी

खुलिरहेका छन्, पत्रकारहरुको एउटा ठूलो समूह तयार भइसकेको छ। एकदमै रोचक किसिमको अवस्था छ। तर अभिव्यक्ति स्वतन्त्रता भनेको के? त्यसलाई कसरी परिभाषित गर्ने ? अखवारहरु निस्कँदैमा, एफएमहरु खुल्दैमा र सञ्चार क्षेत्रमा मानिसहरुको चहलपहल वढ्यो भन्दैमा वा टिभीको क्यामरा चम्कियो भन्दैमा अभिव्यक्ति स्वतन्त्रता सुरक्षित छ भन्ने कसैलाई भ्रम छ भने त्यसो होइन। अभिव्यक्ति स्वतन्त्रता नेपालका सम्पूर्ण नागरिकले उपभोग गर्न पाएका छन् कि छैनन् भन्ने सवाल प्रमुख हो।

अहिले राज्य र माओवादी दुवै पक्षले सञ्चार क्षेत्रका व्यक्तिहरु र संयन्त्रहरुलाई "मेनिपुलेट" गरेका छन्। यस्तो अवस्था विद्यमान हुनु नै अभिव्यक्ति स्वतन्त्रतामाथिको खतरा हो। अभिव्यक्ति स्वतन्त्रतामाथि आक्रमण गर्ने कार्यमा कुनै पनि पक्ष १९ छैनन्, सवै २० नै छन्।

गत महिना पण्डौनमा सैनिकहरुको विरताको गाथा अखवारहरुमा पढ्यौं, रेडियोवाट सुन्यौं। तर, घटनासँगसँगै त्यहाँका मानिसहरु भयले आक्रान्त भएको, उनीहरु केही वोल्न पनि नचाहने गरेको, किंकर्तव्यविमुढ भएर र लुकेर वसिरहेको समाचार पनि पढ्यौं। पाँच दिन अघि र पछि पढेको समाचारवीच नै भिन्नता आयो। राज्यले अभिव्यक्ति स्वतन्त्रतालाई ग्यारेण्टी गर्छु भनेर प्रतिवद्धता जनाएको छ। तर, राज्यको सुरक्षा व्यवस्थाको संचालनवाट जव मान्छेहरु भयभित हुने अवस्था आउँछ, त्यसवेला सोच्नैपर्छ। पण्डौनकै कुरा गर्ने हो भने, सुरक्षाकर्मीहरुले एउटा विरतापूर्ण, साहसपूर्ण, चमत्कारपूर्ण कार्य गरे भनेर हामीले अखवारहरु पढ्यौं। घटनास्थलको निरीक्षणका लागि थुप्रै अखवारवालाहरु पुग्नुभयो। उहाँहरुले त्यहाँ सिक्काको एउटा पाटोलाई हेरेर आउनुभयो र हामीलाई त्यही खवर दिनुभयो। त्यसपछि त्यहाँ अरु पक्षहरुको वारेमा फलोअप गर्न कोही गएको छैन। यसैवाट अवस्था कस्तो छ भनेर अन्दाज गर्न सकिन्छ।

अभिव्यक्ति स्वतन्त्रताका दुईवटा पक्ष छन्। एउटा- यसको सामाजिक पक्ष, जहाँ सवैले समानरुपमा अधिकारहरु उपभोग गर्न पाउनुपर्छ भन्ने सैद्धान्तिक अवधारणा छ। अर्को, व्यक्तिले कति वोल्न सक्छ वा कति हिम्मत गर्न सक्छ भन्ने कुरा। स्वतन्त्रता भनेको सापेक्षिक सवाल हो। संविधान, राज्यपक्ष, माओवादी वा अरु कुनै पक्षले दिएर स्वतन्त्रता सुरक्षित हुने होइन। हामीले कति हिम्मत गर्न सक्छौं, कति वोल्न-लेख्न सक्छौं भन्ने कुरासँग यो गाँसिएको छ। वुद्धिजीवीहरु वा राजनीतिकर्मीहरुमा रहेको दुईजीब्रे कुरा गर्ने वा मनमा एकथरी कुरा राखेर मुखले अर्कोथरी वोल्ने वानी नै समस्या हो। सत्य वोल्नै नचाहने प्रवृत्ति छ। सत्य वोल्दा असुरक्षित हुन्छु भन्ने एक किसिमको भावना यहाँका प्रत्येक वुद्धिजीवीको मनमा पसेको मैले देखेको छु। प्रत्येक नीति निर्माता, राजनीतिज्ञ, मन्त्री र प्रत्येक पत्रकारको मनमा पनि यस्तो भावना छ। जवसम्म म सत्य वोल्छु र त्यसका लागि व्यक्तिगतरुपमा कुनै पनि मूल्य चुकाउन तयार छु भनेर हामी तयार हुँदैनौं, तवसम्म अभिव्यक्ति स्वतन्त्रताका सुरक्षा कसैले दिन वा गर्न सक्दैन।

त्यसकारण अहिलेको आवश्यकता हिम्मत हो। स्थापित सञ्चार माध्यमहरुले आफ्ना विचारहरु प्रसार गरिदिदैनन् भने आफै पम्प्लेट निकाल्ने हिम्मत गर्नुपर्छ। पैसा छैन भने हातले लेखेर निकाल्नुपर्छ। अभिव्यक्ति स्वतन्त्रतालाई जसरी भए पनि अभ्यास गर्नु जरुरी छ। जवसम्म इमान्दार भएर अभिव्यक्ति स्वतन्त्रताको अभ्यास गर्न सक्दैनौं र विगतमा जस्तो लोभ र पापमा लागेर सञ्चार क्षेत्र वा अभिव्यक्ति स्वतन्त्रताको मर्यादालाई उल्लंघन गर्छौं, तवसम्म हामीलाई कसैले जोगाउन सक्दैन। संयुक्त राष्ट्रसंघ आएर हाम्रो अभिव्यक्ति स्वतन्त्रता जोगाइदेला वा मित्रराष्ट्रहरुले दवाव देलान् र अभिव्यक्ति स्वतन्त्रता जोगिएला भन्ने मलाई विश्वास छैन। विश्व इतिहासको आजसम्मका घटनाक्रमहरुले यो सावित गरेका छैनन्। मान्छे आफै सवल हुनुपर्छ। हाम्रा नेताहरुले त्यसो गर्न सक्नुभएन भने ०४६ सालको जनआन्दोलनका प्रमुख खेलाडी पत्रकारहरुले आफ्नो दायित्व पूरा गर्नु जरुरी छ। हिजो जेल जान तयार हुनेले आज किन नहुने ? अहिले त्यसैको अभाव छ।

हुन्छ। जव माओवादीहरुले निर्णय गरेर युद्धको थालनी गरे, त्यसपछि राज्यले प्रतिरोध गर्न थालेको हो। राज्यले प्रतिरोध गर्छ। यो उसको काम हो। तर, त्यस्तो प्रतिरोध गैरकानुनीरुपले गर्नुहुँदैन भन्ने हाम्रो मान्यता हो। राज्य भनेको जिम्मेवार संस्था हो। राज्यले पनि गैरकानुनी काम गऱ्यो र गैरजिम्मेवार हुन थाल्यो भने अरु नागरिक स्वाभाविकरुपमा गैरजिम्मेवार हुनसक्छन्। माओवादीहरु पहिलो दोषी हुन्। यसमा वहस गर्नै पर्दैन। तर, प्रतिरोधका नाममा सरकारले पनि उसकै शैली अख्तियार गर्नु गलत हो।

कतिपय व्यक्तिहरुले पत्रकारहरुले माओवादीलाई उक्साए भन्छन्। माओवादीहरुले पनि पत्रकारहरुले हाम्रो विरुद्धमा लेखे, वोले भन्छन्। त्यो केवल आरोप मात्रै हो। यथार्थमा, पत्रकारहरुले जे देखेका छन्, त्यो लेखेका छन्। जे देख्यो त्यो लेख्दा नोक्सान पुऱ्याएको भन्न मिल्दैन।

अहिले विभिन्न पत्रपत्रिकाहरु निस्केका छन्, एफएम रेडियोहरु खुलेका छन्। यसवाट अभिव्यक्ति स्वतन्त्रतामा केही हदसम्म पक्कै पनि वल पुगेको छ। संस्थागत ठाउँहरु विकास भने त्यहाँ धेरै शक्ति जम्मा हुन्छ, धेरै मान्छे आवद्ध हुन्छन् र धेरै मान्छेले स्वतन्त्रताको खोजी गर्दै जान्छन्। त्यसकारण यो सकारात्मक हो। तर, पत्रपत्रिका निस्कने र एफएम रेडियोहरु खुल्नेवित्तिकै अभिव्यक्ति स्वतन्त्रताको उपभोग गर्न पाइएको छ भन्नुचाहिं गलत हो। त्यस्ता सञ्चार संस्थाहरुका सामु चुनौति पनि छन्। माओवादीले "मेरो यो समाचार छापेवापत्" भनेर धम्की दिएका छन्, "तैले किन छापिस्" भनेर पत्रकारहरुलाई खेद्ने काम पनि गरेका छन्। "यो कुरा छापिस् भने तँलाई सफाया गर्छौं" भनेर कतिपय पत्रकारहरुलाई धम्की दिइएको छ। कहिलेकाहीं ठूल्ठूला प्रकाशन गृहहरुलाई पनि "हाम्रो यो समाचार छाप्नुपर्छ" भनेर दवाव आउने गर्छ। यस्तो कार्य सेनाले वा राज्यले पनि गर्ने गरेको छ। राज्यले पनि "पत्रकारहरु हाम्रो विरुद्ध छन्" भन्छ। यसको तात्पर्य के हो भने, सवैको तावेदारी नगर्दाको अवस्थामा पत्रकारहरु जहिले पनि असुरक्षित छन्। प्रेस जगत अहिलेको सन्दर्भमा संस्थागतरुपमा अगाडि वढ्ने चेष्टा गरिरहेको छ। सम्पूर्णरुपमा एकदमै अगाडि वढेको छ भन्न सकिंदैन तर न्यूनतमरुपमा, सांकेतिकरुपमा भए पनि स्वतन्त्रतालाई प्रवाहित गर्न प्रेस जगतको विकास भएको छ। संस्थाहरुको विकास भयो भन्दैमा समग्रमा स्वतन्त्रताको उपभोग पाउने अवस्था विकसित भयो भनेर दावी गरिहाल्नु हुँदैन।

अहिले गर्नुपर्ने प्रमुख कार्य भनेको हामी आफूले आफ्नो काम गर्नु हो। यसो गर्दा हाम्रो सीमा के हो भन्ने पक्षलाई मनन गर्नुपर्दछ। हाम्रो सीमा भनेको स्वतन्त्रताको सुरक्षा हो। नागरिक हकको सवाल हो। नागरिक हकको कुरा गर्ने वित्तिकै हाम्रो अभिव्यक्ति स्वतन्त्रताको कुरा उठ्छ, हामीले संगठन गर्न पाउने हकको कुरा उठ्छ, वाँच्न पाउने अधिकारको कुरा उठ्छ। त्यसका पक्षमा हाम्रो आन्दोलनलाई निरन्तरता दिनुपर्छ। एउटा पत्रकारको वा एउटा मानवअधिकारकर्मीको जिम्मेवारी पनि त्यही हो। हामी जनताको वीचमा कतिसम्म पुग्न सकेका छौं ? यो अहिलेको अत्यन्तै गुरुत्तर प्रश्न हो। वास्तवमा, हामी सवैभन्दा पछिल्लो पंक्तिसम्म पुग्न सकेका छैनौं। यसले गर्दा हिंसा वढिरहेको छ, मानिसहरु प्रजातन्त्रविरुद्ध वा आफ्नै अधिकार र स्वतन्त्रताका विरुद्धमा पनि उभिने स्थिति पैदा भइरहेको छ। यो पक्षमा हाम्रो ध्यान जानु जरुरी छ।

*वार्तामा आधारित*

## आवरण सन्दर्भ

# प्रेसका चार सिद्धान्त

**"प्रेसका चार सिद्धान्त" मार्फत् फ्रेड एस. सिवर्ट, थियोडोर पिटरसन र विलवर स्क्र्यामले प्रेसका महत्वपूर्ण सिद्धान्त प्रतिपादन गरेपछि आमसञ्चार अध्ययनको क्षेत्रमा नयाँ आयाम थपिएको थियो । व्यापकरुपमा व्यवहारिक अध्ययनपश्चात् १९५६ मा प्रकाशित सो पुस्तकमा उदाहरण दिइएका कतिपय प्रसंग वर्तमान अवस्थामा अप्रासांगिक लाग्नसक्ला । तर, यसको सान्दर्भिकता भने यथावत् भएकाले पुस्तकको "परिचय" भागको अनुवाद प्रस्तुत गरिएको छ ।**

प्रेस भन्नाले आम सञ्चारका सबै माध्यमहरूलाई बुझिएता पनि अन्य सञ्चार माध्यमहरुभन्दा पुरानो र आम सञ्चारका सिद्धान्त र दर्शनहरूमा आधारित भएको हुनाले यहा छापा माध्यमको सेरोफेरोमा प्रेसका चर्चा गरिएको छ।

हामीबीच सामान्यतया प्रेस भनेको के हो भन्ने प्रमुख प्रश्न छ। यसले किन बेग्लाबेग्लै मुलुकमा बेग्लाबेग्लै अर्थ वा स्वरुप जनाउँछ, उदाहरणका लागि सोभियत संघको प्रेस किन अमेरिकाको भन्दा फरक छ? किन बेलायतको भन्दा अर्जेन्टिनाको प्रेस फरक छ?

आंशिकरुपमा यी भिन्नताले अवश्य पनि राष्ट्रका प्रेसप्रति ध्यान दिने क्षमता, आमसञ्चारका लागि प्रयोग गरिने प्राविधिक श्रोत-साधनहरु, र आमसञ्चारलाई वढी महज र आवश्यक बनाउने शहरीकरणको सापेक्षिक अवस्थालाई झल्काउँछन्। त्यसैगरी भिन्न-भिन्न मुलुकमा विद्यमान प्रेसको भिन्नताले सामान्यतया फरक ठाउँका जनताले के गर्छन् र उनीहरुको अनुभवले पढ्ने इच्छालाई कतानिर डोहोर्‍याउँछ भन्ने कुरा पनि संकेत गर्दछ।

तर, यी भिन्नताका आधारभूत र महत्वपूर्ण कारकहरु छन्। प्रेसले जहिले पनि सामाजिक र राजनीतिक संरचनाको संयुक्त स्वरुप ग्रहण गरेको हुन्छ। त्यहीभित्र यो सञ्चालित हुन्छ। विशेषत: यसले सामाजिक नियन्त्रण प्रणाली झल्काउँछ, जसमा व्यक्ति र संस्थाहरुका सम्वन्ध गाँसिएका हुन्छन्। यो सामाजिक पक्षलाई बुझ्नु नै प्रेससम्वन्धी व्यवस्थित ज्ञान हासिल गर्नु हो।

प्रेसको पद्धतिको भिन्नता पूर्णरुपमा बुझ्न समाजको पद्धति बुझ्नुपर्ने हुन्छ। प्रेससँगको सही सम्बन्धमा सामाजिक पद्धति बुझ्न पनि समाजले ग्रहण गरेका निश्चित आधारभूत विश्वास र मान्यताहरु जस्तै: मानिसको स्वभाव, समाज र राज्यको प्रकृति, राज्यसंग व्यक्तिको सम्वन्ध आदि पक्षहरुको ज्ञान हासिल गर्नुपर्दछ। तसर्थ, प्रेस पद्धतिको भिन्नता एउटा दर्शन हो।

आमसञ्चारको विकास भएदेखि पुनर्जागरण कालसम्म संसारमा प्रेसका केवल दुई-चार आधारभूत सिद्धान्तहरु थिए। यहाँ चर्चा गरिएका चार सिद्धान्तहरुमध्ये दुईवटा सिद्धान्त पहिलेका दुई सिद्धान्तका विकसित र परिवर्तित रुप हुन्। सोभियत कम्युनिष्ट सिद्धान्त पुरानो अधिनायकवादी सिद्धान्तको विकास हो। हामी जुन सिद्धान्तलाई सामाजिक जिम्मेवारीको सिद्धान्त भन्छौं, त्यो स्वच्छन्दतावादी सिद्धान्तको परिवर्तित रुप हो।

यीमध्ये अधिनायकवादी सिद्धान्त सवैभन्दा पुरानो हो। पुनर्जागरणको पछिल्लो अवधिमा र छापाखानाको आविष्कारलगत्तै यो सिद्धान्त देखा परेको हो। त्यतिबेलाको समाजमा, सत्य आम जनताको सृजना नभएर केवल अरुलाई पथ-प्रदर्शन गर्न र धेरै चेलाहरु बनाउन सफल केही बुद्धिमान व्यक्तिहरुको हो भन्ने धारणा थियो। तसर्थ, सत्य शक्तिको वरिपरि केन्द्रित छ भन्ने ठानिन्थ्यो। यसकारण प्रेसले "माथिदेखि तल" को कार्य गर्दथ्यो अर्थात् त्यसवेलाका शासकहरुले जनताले जे कुरा थाहा पाउनुपर्छ भन्ने ठान्थे त्यो कुराका बारेमा र जनताले समर्थन जनाउनुपर्ने उनीहरुका नीतिका बारेमा जनतालाई सूचित गर्न प्रेसको प्रयोग गर्दथे। प्रेस राजाको कार्यालयप्रति उत्तरदायी हुन्थ्यो, त्यसकारण यसले दरबारिया नीतिको समर्थन गर्नु पर्दथ्यो। विशेष स्वीकृतिका आधारमा मात्र नीजि प्रेसको अनुमति दिइन्थ्यो तर यस्तो अनुमति उक्त प्रेसले दरबारिया नीतिको अपमान गरेको वा पालना नगरेको ठानियो भने फिर्ता गरिन्थ्यो। यसरी कुनै पनि कुराको प्रकाशन शासक र प्रकाशकबीचको सहमति जस्तै थियो जसमा शासकसंग एकाधिकार निहीत हुन्थ्यो भने प्रकाशकले त्यसलाई समर्थन गर्नुपर्थ्यो। शासक अर्थात् शक्तिको श्रोतसंग नीति बनाउने र परिवर्तन गर्ने, अनुमति दिने र सेन्सर गर्ने अधिकार हुन्थ्यो।

सोह्रौं शताब्दीभरि र सत्रौं शताब्दीको अधिकांश अवधिमा प्रेसले राज्यको दास भएर काम गर्ने यही सिद्धान्त विश्वव्यापीरुपमा अंगिकार गरिएको थियो। यही अवधारणाका आधारमा अधिकांश प्रेसका काम कारवाही निर्धारण गरिन्थ्यो। खासगरी गैरकम्युनिष्टबाहेक संसारका अधिकांश भागमा अन्य सिद्धान्तअनुरुपको प्रेस भएता पनि अझै केही हदसम्म संसारका विभिन्न भागमा यो अधिनायकवादी अभ्यास जारी नै छ। तर राजनीतिक प्रजातन्त्र र धार्मिक स्वतन्त्रताको विकास, व्यापार र आवतजावतको विस्तार, खुल्ला आर्थिक नीति (लेसेज्-फेयर) को अवलम्बन, र पुनर्जागरणको दार्शनिक प्रभावले अधिनायकवादलाई कमजोर बनायो र प्रेसको नयाँ अवधारणाको बाटो खोलिदियो। यो क्रमसंगै प्रेसको नयाँ सिद्धान्त आयो। सत्रौं शताब्दीको अन्त्यतिर विजारोपण भएर अठारौं शताब्दीमा ठोस रुपमा देखा परेको र उन्नाइशौं शताब्दीमा व्यापकता पाएको

यो सिद्धान्त स्वच्छन्दतावादी सिद्धान्त हो।

स्वच्छन्दतावादी सिद्धान्तले अधिनायकवादी सिद्धान्तमा देखिएको व्यक्ति र राज्यकोस्थानलाई उल्टाइदियो। यसमा जनतालाई आदेश पालकका रुपमा मात्र नलिएर तर्कशील प्राणीका रुपमा लिइन्छ जसले सत्य र असत्य, सही र खराब, बाझिएका प्रमाण र वैकल्पिक छनौटलाई छुट्याउन सक्छ। सत्यलाई केवल शक्ति वा सत्ताको सम्पत्तिका रुपमा नलिएर सत्यको खोजीलाई व्यक्तिको अहरणीय नैसर्गिक अधिकारका रुपमा लिइन्छ। यो सिद्धान्तले प्रेसलाई "सत्यको खोजी गर्ने सहकर्मी" ठान्दछ।

यस सिद्धान्तअनुसार, प्रेस सरकारको साधन वा हतियार होइन। यो त जनताले सरकारलाई जाँच्न वा त्यसको खबरदारी गर्न र नीति निर्माणमा पहुँच राख्न सकून् भन्ने मान्यताका आधारमा प्रमाण र तर्क प्रस्तुत गर्ने माध्यम हो। त्यसकारण, प्रेस सरकारको नियन्त्रण र प्रभावबाट मुक्त हुनु पर्दछ। सत्यको उत्पत्तिका लागि सबै विचारहरुको निष्पक्ष सुनुवाई हुनुपर्छ, विचार र सूचनाको

| | अधिनायकवादी | स्वच्छन्दतावादी | सामाजिक जिम्मेवारी | सोभियत सर्वसत्तावादी |
|---|---|---|---|---|
| विकास | सोह्रौं र सत्रौं शताब्दीमा बेलायतमा। त्यसपछि व्यापक अवलम्बन, अझै पनि धेरै ठाउँमा अभ्यास | १६८८ पछि बेलायतद्वारा र अमेरिकामा अवलम्बन, सबै ठाउँमा प्रभावकारी | बीसौं शताब्दीमा अमेरिकामा | सोभियत संघमा। यद्यपि नाजी र इटालियनद्वारा त्यसअघि पनि त्यस्तै काम। |
| आधार | राजा, उसको सरकार वा दुवैको असीमित अधिकार हुन्छ भन्ने दर्शन | मिल्टन लक र मिलको लेखन। तार्किकतावाद र प्राकृतिक अधिकारको दर्शन | डब्लु ई हकिंगको लेखन। प्रेस स्वतन्त्रता सम्बन्धी आयोग। अध्येताहरु। सञ्चार संहिता | मार्क्सवादी-लेनिनवादी-स्टालिनवादी विचार, हेगेल र १९ औं शताब्दीको रुसी विचार समेतको मिश्रण |
| मुख्य उद्देश्य | सरकारका नीतिहरुलाई समर्थन र विस्तार र राज्यको सेवा | सूचना, मनोरञ्जन दिने र बिक्री- तर मुख्यगरी सत्य उजागर गर्न सहयोग गर्ने र सरकारको खबरदारी गर्ने | सूचना, मनोरञ्जन दिने र बिक्री- तर मुख्यगरी छलफलमा आएका द्वन्द्व उजागर गर्ने | सोभियत समाजवादी पद्धतिको सफलता र निरन्तरतामा योगदान गर्ने, र विशेषगरी पार्टीको निरंकुशतालाई मद्दत पुर्‍याउने |
| सञ्चार माध्यमको प्रयोग गर्ने अधिकार के-कसको | दरबारिया अनुमति पाउने जो कोही | आर्थिक साधन-श्रोत भएकाले प्रयोग गर्न सक्ने | केही कुरा भन्न चाहने सबै | उदार र परम्परावादी पार्टी सदस्यहरु |
| सञ्चारमाध्यमको नियन्त्रण कोबाट | सरकारद्वारा तोकिएका अधिकारी | स्वविवेक, स्वच्छन्द विचार र अदालत | समुदायको धारणा, उपभोक्ताहरुको कारवाही, व्यवसायिक नैतिकता | सरकारले निगरानी गर्ने र आर्थिक तथा राजनीतिक कारवाही |
| निषेध गरिएको | शक्तिमा रहेका राजनीतिक संयन्त्र र कर्मचारीहरुको आलोचना | अपयश, दोषारोपण अमर्यादित युद्धकालमा द्रोह | मान्यताप्राप्त वैयक्तिक अधिकार र महत्वपूर्ण सामाजिक स्वार्थमाथि आक्रमण | पार्टीका उद्देश्यहरुको आलोचना |
| स्वामित्व | नीजि वा सार्वजनिक | मुख्यतया नीजि | सरकारले सार्वजनिक सेवाको ग्यारेण्टी नगर्दासम्म नीजि | सार्वजनिक |
| अरुसँग मुख्य भिन्नता | सरकारी स्वामित्वमा नभए पनि सरकारको नीतिलाई प्रभावकारी बनाउने साधन | सरकारको खबरदारी गर्ने र समाजका अन्य आवश्यकताहरु पुरा गर्ने साधन | सञ्चार माध्यमले सामाजिक उत्तरदायित्व वहन गर्नैपर्छ, त्यसो नगर्ने भए अरुबाट निगरानी हुनुपर्छ। | राज्यको स्वामित्वमा भएका र नजिकबाट नियन्त्रित सञ्चारमाध्यम पूर्णतः राज्यको मुख्य हतियारका रुपमा |

स्वतन्त्र स्थान हुनुपर्छ। चाहे अल्पसंख्यक होउन् या बहुसंख्यक, कमजोर होउन् या शक्तिवान्, प्रेसमा सबैको पहुँच हुनैपर्छ। यो नै प्रेसको सिद्धान्त हो, जुन कुरा मानवअधिकारका दस्तावेजहरु- "बिल अफ राइट्स" मा समेत लेखिएको छ।

संयुक्त राज्य अमेरिका र बेलायतले दुई सय वर्षसम्म सरकारी प्रभावबाट करिब-करिब सम्पूर्णरुपमा प्रेसलाई स्वतन्त्र गर्दै प्रेसलाई राज्यको चौथो अंगका रुपमा भूमिका निर्वाह गर्न हौसला प्रदान गरेका छन्। अन्य अधिकांश गैरकम्युनिष्ट मुलुकहरुले प्रेसको स्वच्छन्दतावादी सिद्धान्तप्रति कम्तिमा ओठे भक्ति भए पनि दर्शाएका छन्। तर, अहिलेको शताब्दीमा परिवर्तनको तरंग आएको छ। यो तरंग कम्युनिष्ट मुलुकहरुमा नयाँ अधिनायकवादी र गैरकम्युनिष्ट मुलुकहरुमा नयाँ स्वच्छन्दतावादी प्रेस सिद्धान्ततर्फको लहरका रुपमा आएको हो। जुन सिद्धान्त सामाजिक जिम्मेवारीको सिद्धान्तका रुपमा चिनिन्छ।

स्वच्छन्दतावादी नया सिद्धान्तले खासगरी हुचिन्स आयोगको प्रतिवेदनपश्चात् व्यापक प्रचार पाएको भए पनि त्यसअघि नै विभिन्न सम्पादक र प्रकाशकहरुद्वारा यस्तो मान्यताको प्रयोग गरिएको थियो। उनीहरुले बीसौं शताब्दीको परिवेशमा आम सञ्चारबाट एउटा नया र फरक खाले सामाजिक जिम्मेवारी वहन हुने आशा गरिएको थियो। जनताले आफूले भोगिरहेको "सञ्चार क्रान्ति" को लेखाजोखा गर्न शुरु गरेपछि यस्तो अनभूति मुखरित भयो।

शुरुमा प्रकाशन व्यवसाय चलाउन वा पत्रिका तथा रेडियो स्टेशन संचालन गर्न त्यति सजिलो थिएन। यस्ता निकाय वा संस्थाहरु विस्तारै बढ्दै जानेक्रममा तिनको स्वामित्व र व्यवस्थापनका कारण ठूलो लगानीको आवश्यक पर्ने अवस्था सृजना भयो। फलस्वरुप, प्रेस पुरानो अधिनायकवादी समयमा भैं केही शक्तिशालीहरुको हातमा पुग्यो। तर, प्रेसका यी नयाँ शासकहरु अधिकांशत: राजनीतिक शासक होइनन्। अभ तिनीहरुले प्रेसलाई सरकारी प्रभावबाट सशक्तरुपमा सुरक्षित पार्दथे। तर वास्तवमा, प्रेसप्रति साह्रै कम निगरानी हुँदा, सञ्चार जगतका केही मालिक तथा व्यवस्थापकहरुका हातमा नौलो तथा असहज शक्ति निहीत भयो। मिल र जेफर्सनले परिभाषित गरेभैं अहिलेको अवस्थामा प्रेस विचारको स्वतन्त्र थलो बन्न त्यति सजिलो छैन। प्रेस स्वतन्त्रतासम्बन्धी आयोगले भनेभैं, "सरकारबाट संरक्षणको सवालमा केही कुरा भन्न चाहने कुनै व्यक्तिलाई त्यो कुरा भन्ने मौका प्राप्त हुन्छ भन्ने प्रत्याभूति दिलाउन सफल छैन। को व्यक्ति, के तथ्य, तथ्यहरुको कस्तो अभिव्यक्ति सार्वजनिक हुनुपर्छ भन्ने कुरा प्रेसका मालिक र व्यवस्थापकहरुले निर्धारित गर्छन्।" यही असहजता नै सामाजिक जिम्मेवारी सिद्धान्तको विकासका लागि आधार हो। यसले प्रेसलाई सामाजिकरुपमा उत्तरदायी हुन बाध्य पार्दछ। जसबाट सबै आयामहरु निष्पक्षरुपमा प्रस्तुत गरियोस् र जनताले पर्याप्त सूचनाका आधारमा निर्णय गर्न सकून्। प्रेसले यस्तो जिम्मेवारी वहन गर्दैनन् भने यसका लागि जनताको अन्य कुनै निकाय आवश्यक पर्नसक्छ।

प्रेसको सामाजिक जिम्मेवारी सिद्धान्तलाई केवल केही विद्वानहरु वा केवल हुचिन्स आयोगले ल्याएको अवधारणाका रुपमा मात्र लिनु हुँदैन। यो सिद्धान्तका सवालहरुलाई आयोगभन्दा धेरै अगाडि नै कतिपय सम्पादक र प्रकाशकहरुले अभिव्यक्त गरिसकेका थिए। यो एउटा प्राज्ञिक अभ्यास नभई प्रकृयागत सवाल हो।

स्वच्छन्दतावादी सिद्धान्त यसका आफ्नै खाले समस्याहरुसँग जुध्दै र आफ्नो गन्तव्य निर्माण गर्दै गइरहेको बेला अधिनायकवादको एउटा नयाँ र नाटकीय विकास यसका लागि चुनौतिका रुपमा देखा पऱ्यो। उक्त चुनौति प्रेससम्बन्धी सोभियत कम्युनिष्ट सिद्धान्त थियो। मार्क्सवादी निरंकुशतावाद र दश प्रतिशतभन्दा कम देशका जनताको प्रतिनिधित्व गर्ने पार्टीको राजनीतिक दमन कायम राख्ने राजनीतिक स्वार्थमा अडिएको सोभियत कम्युनिष्ट सिद्धान्तमा आधारित प्रेसले पुरानो अधिनायकवादले जस्तै केवल शासक वर्गको हतियारको रुपमा काम गर्दछ। फरक यत्ति हो कि यसमा नीजि नभई राज्यको स्वामित्व हुन्छ। यसमा नाफाको उद्देश्य हुँदैन। तर, नकारात्मक स्वतन्त्रताको अवधारणाका लागि सकारात्मकलाई विस्थापित गरिएको हुन्छ। संभवत: संसारको इतिहासमा कुनै पनि प्रेस यसरी कडारुपमा नियन्त्रित थिएनन् होला। तर, सोभियत प्रवक्ताहरुले आफ्नो प्रेसलाई स्वतन्त्र ठान्दथे किनकी यो उनीहरुको पार्टीले सत्य ठानेको "सत्य" कुरा बोल्न स्वतन्त्र थियो। सोभियतहरुले अमेरिकी प्रेस साँचो अर्थमा स्वतन्त्र नभएको ठान्दथे। किनकी यो व्यापार नियन्त्रित थियो, त्यसकारण मार्क्सवादी "सत्य" बोल्न स्वतन्त्र थिएन। आफूहरुले गरेका कार्य वर्णन गर्न दुवै पक्षले स्वच्छन्दता र जिम्मेवारी जस्ता शब्दको प्रयोग गरेता पनि ती दुवै धार आपसमा आधारभूतरुपमा विरोधी थिए। साधारणतया सोभियत कम्युनिष्ट सिद्धान्तअनुरुप प्रेस स्वच्छन्द नभएको र सामाजिक जिम्मेवारी सिद्धान्तअनुरुप प्रेस उत्तरदायी नभएको आरोप एक-अर्कोले लगाउँदछन्।

पश्चिमी विश्वका प्रेसहरुलाई यी चारवटा सिद्धान्तहरुले समेटछन्। अधिनायकवादी सिद्धान्त प्लेटोदेखि मेकियावेलीसम्मको शताब्दीयौं लामो अधिनायकवादी राजनीतिक चिन्तनमा र स्वच्छन्दतावादी सिद्धान्त मिल्टन, लक र मिलका लेखन र पुनर्जागरणमा आधारित थियो। त्यसैगरी सामाजिक जिम्मेवारी सिद्धान्त सञ्चार क्रान्ति र पुनर्जागरणको दर्शनका बारेमा विद्यमान केही व्यवहारिक अस्पष्टताहरुमा र सोभियत कम्युनिष्ट सिद्धान्त मार्क्स, लेनिन, स्टालिन र सोभियत संघको कम्युनिष्ट पार्टीको निरंकुशतामा आधारित थिए।

●

# अभिव्यक्ति स्वतन्त्रता र कानुन

अधिवक्ता भुवनप्रसाद निरौला

अभिव्यक्ति स्वतन्त्रताको सवालमा नेपालको स्थितिलाई ऐतिहासिकरुपमा हेर्दा राणा शासनकालमा जारी भएको पाँच भागे मुलुकी ऐनको अदलको महलको दफा ३१ र ३१ (क) मा भएको व्यवस्थालाई लिन सकिन्छ। त्यसमा पूर्ण प्रतिबन्ध र सर्वाधिकारका केही व्यवस्थाहरु देखिन्थे। प्रेस स्वतन्त्रतामा बन्देज लगाउने गरी भएका केही कानुनी व्यवस्थाहरु २००५ सालमा बनेका प्रकाशनसम्बन्धी ऐनहरुमा देख्न सकिन्छ। लिखितरुपमा संवैधानिक इतिहासको शुरुवात मानिने नेपाल सरकार वैधानिक कानुन २००४ को धारा ४ ले लोकनीति र सदाचारका सिद्धान्तहरुको ख्याल नगरी तथा मौलिक हकहरुका विषयमा प्रचलित ऐन र नियमको विरोध नगरी वाक स्वतन्त्रता र प्रकाशन स्वतन्त्रतालाई समावेश गरेको थियो। तापनि, त्यस्ता खालका हकहरुलाई नियम र कानुनहरुको अधीनमा रहने गरी राखिनुका साथै संवैधानिक उपचारको व्यवस्था नगरेको हुँदा न्यायिक पुनरावलोकनसमेत हुन नसक्ने भएकाले अभिव्यक्ति स्वतन्त्रतासम्बन्धी यी हक केवल कागजमा मात्र सीमित थिए।

दोश्रो संविधानको रुपमा रहेको नेपाल अन्तरिम शासन विधान २००७ को धारा १६ ले सार्वजनिक हित र शान्ति कायम राख्न वा राज्यको सुरक्षाका निम्ति आवश्यक शर्तको अधीनमा वाक र प्रकाशन स्वतन्त्रताको अधिकार प्रत्याभूत गरेको थियो। तेश्रो संविधान नेपाल अधिराज्यको संविधान २०१५ को धारा ७ र ८ लाई हेर्दा, राजनीतिक स्वतन्त्रताको रुपमा वाक तथा प्रकाशन स्वतन्त्रताको हकलाई संवैधानिक संरक्षण प्रदान गरेको भए पनि सार्वजनिक हितको निम्ति मौलिक हकमा बन्देज लगाउन सकिने व्यवस्थालाई नकार्न सकिएको थिएन। चौथो संविधानको रुपमा रहेको नेपालको संविधान २०१९ द्वारा अभिव्यक्तिको स्वतन्त्रतामा आघात पुऱ्याउने बढी बन्देजयुक्त व्यवस्थाहरु गरिए, जसलाई न्यायिक पुनरावलोकनको प्रकृयाद्वारा अदालतले जाँच गर्न नसक्ने भयो।

०४६ सालको जनआन्दोलनको परिणामस्वरुप जनताको चाहनालाई समाहित गर्ने उद्देश्यले पाँचौं संविधानको रुपमा नेपाल अधिराज्यको संविधान २०४७ निर्माण भयो। यो संविधानका कतिपय व्यवस्थाहरुलाई आधार मान्ने हो भने नेपाल अधिराज्यको संविधान २०४७ लाई अन्य दक्षिण एसियाली मुलुकहरुका संविधानको तुलनामा नमुना संविधानको रुपमा पनि लिने गरिन्छ। राष्ट्रिय परिस्थितिमा यस संविधानलाई राजा, काँग्रेस र कम्युनिष्टको त्रिपक्षीय सम्झौता भन्ने गरिएता पनि यथार्थमा भने कदापि स्वीकार गरिएको पाइएन। नेपाल अधिराज्यको संविधान २०४७ को मस्यौदा गर्नुअघि व्यापकरुपमा सुझावहरु संकलन गरेको र जनताले पनि विभिन्न पत्रपत्रिका, सुझावपत्र, भेटघाट र सार्वजनिक प्रदर्शनहरुद्वारा संविधान सुझाव आयोगलाई आफ्नो भावनासँग परिचित गराई विभिन्न क्षेत्रबाट दवाब समेत दिने कार्य भएको थियो। जुन कुरालाई प्रस्तावनामा उल्लेख भएको "प्रत्येक नेपाली नागरिकको आधारभूत मानवअधिकार संरक्षित गरी स्वतन्त्रता र समानताका आधारमा नेपाली जनताबीच भ्रातृत्व र एकता कायम गरी वालिग मताधिकार, संसदीय शासन प्रणाली, संवैधानिक राजतन्त्र तथा बहुदलीय प्रजातन्त्रलाई सुदृढीकरण गर्न र स्वतन्त्र एवम् सक्षम न्याय प्रणालीको व्यवस्था गरी कानुनी राज्यको अवधारणालाई साकार पार्न नेपाली जनताको व्यापक जनसहभागिताबाट बनाइएको यस संविधानलाई घोषित गरी लागू गर्न वाञ्छनीय भएकोले" भन्ने कुराले पुष्टि गर्ने कोसिस गरिएको पाइन्छ। यस आधारमा पनि नेपाल अधिराज्यको संविधान २०४७ लाई जनताको इच्छा र चाहनाअनुसार जनताको तर्फबाट बनाइएको हो भन्ने तर्क पनि दिइने गरेको पाइन्छ।

वैचारिक स्वतन्त्रता बहुदलीय शासन व्यवस्थाको मूलभूत विशेषता भएको र स्वतन्त्र पत्रकारिता जनताको मतलाई सचेत र सजग गर्ने एक सशक्त माध्यम भएको मान्यताका आधारमा यस संविधानको धारा १२ (२) (क) मा विचार र अभिव्यक्तिको स्वतन्त्रता, धारा १३ मा छापाखाना र पत्रपत्रिकासम्बन्धी हक र धारा १६ मा सूचनाको हकको व्यवस्था गरिएको छ। छापाखाना र पत्रपत्रिकासम्बन्धी हकले कुनै सामग्री प्रकाशनउपर पूर्वप्रतिबन्ध नलगाइने, कुनै सामग्री मुद्रण गरेवापत् छापाखाना बन्द वा जफत नगरिने, कुनै सामग्री प्रकाशित गरेवापत् कुनै समाचारपत्र वा पत्रिकाको दर्ता खारेज नगरिनेजस्ता प्रेस स्वतन्त्रताका मौलिक मान्यताहरुको व्यवस्था गरेको छ। यति हुँदाहुँदै पनि यो संवैधानिक व्यवस्थालाई अझ व्यवस्थित गर्ने क्रममा छापाखाना र प्रकाशन सम्बन्धी ऐन २०४८ को दफा १४ ले सीमित अवस्था जस्तो- श्री ५ महाराजाधिराज वा राजपरिवारप्रति घृणा वा अनादर गराउने वा अपहेलना वा द्वेष बढाउने वा श्री ५ को प्रतिष्ठामा आँच आउने, नेपाल अधिराज्यको सार्वभौमसत्ता र अखण्डतामा आँच आउने,

नेपाल अधिराज्यको सुरक्षा, शान्ति र व्यवस्थामा खलल पर्न जाने, विभिन्न जातजाती, धर्म, वर्ग, क्षेत्र, सम्प्रदायका मानिसहरुवीच वैमनस्य उत्पन्न गर्ने तथा साम्प्रदायिक दुर्भावना फैलाउने, र सर्वसाधारण जनताको सदाचार, नैतिकता र सामाजिक मर्यादामा आघात पर्न जाने खालको प्रकाशनमा प्रतिबन्ध लगाएको अवस्था पाइन्छ। त्यसैगरी मोही ऐनको दफा १५ ले, राष्ट्रिय हितलाई ध्यानमा राखी श्री ५ को सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी कुनै खास विषय, घटना वा क्षेत्रसँग सम्बन्धित समाचार सूचना वा अन्य कुनै पाठ्यसामग्री सोही सूचनामा तोकिएको अवधिसम्मका लागि प्रकाशित गर्न नपाउने गरी वा सोही सूचनामा तोकिएको अधिकारीबाट जचाएर मात्र प्रकाशत गर्न पाउने गरी आदेश जारी गर्न सक्ने र त्यस्तो आदेश जारी भएपश्चात् कसैले पनि त्यस्तो समाचार, सूचना वा पाठ्यसामग्री प्रकाशन अनुवाद वा उद्दरण गर्न समेत हुँदैन भनेर प्रकाशनमा निषेध लगाएको पाइन्छ। प्रस्तुत कानुनी व्यवस्थाले छाडा रुपमा भएर जाने (छापाखाना र पत्रपत्रिका सम्वन्धी हक, जससँग अभिव्यक्तिको स्वतन्त्रता र सूचनाको हक पनि सम्बन्धित छ) लाई सीमित र सकारात्मक रुपमा नियन्त्रणसम्म गरेको पाइन्छ। कानुनी व्यवस्था भन्दा सदैव माथि रहने संवैधानिक व्यवस्था यस अर्थमा वर्तमान संविधानद्वारा प्रत्याभूत प्रेस स्वतन्त्रतासम्वन्धी हकहरु विकसित प्रजातान्त्रिक मुलुकहरुले प्रदान गरेको स्वतन्त्रतासँग तुलना गर्दा कम छैन। अझ दक्षिण एसियाली मुलुकहरुमा मात्र हेर्ने हो भने त अग्रणी अवस्थामा नै मान्नुपर्ने हुन्छ।

अभिव्यक्ति स्वतन्त्रता स्वतन्त्रताको मुटु हो। प्रजातन्त्र मानवको आधारभूत आवश्यकता हो भने प्रजातन्त्रको आधारस्तम्भ भन्नु नै अभिव्यक्ति स्वतन्त्रता हो। प्रेस स्वतन्त्रताको हकलाई अन्तर्राष्ट्रिय कानुनले समेत संरक्षित गर्ने अभिप्रायले विभिन्न प्रयासहरु भएको पाइन्छ। सन् १८९३ को सिकागो सम्मेलनका अलावा सन् १९१९ मा संयुक्त राष्ट्र (लिग अफ नेसन्स) को स्थापनापश्चात् सन् १९३२ को कोपेनहेगन सम्मेलन र सन् १९३३ को जेनेभा सम्मेलनले समेत प्रेस स्वतन्त्रताको अपरिहार्यतालाई आत्मसात गर्दै विभिन्न प्रस्तावहरु पारित गरेका थिए। त्यसैगरी सन् १९४८ मा सम्पन्न जेनेभा सम्मेलनले सूचनाको स्वतन्त्रताको महत्वलाई आत्मसात गरेको पाइन्छ। मानवअधिकारको विश्वव्यापी घोषणापत्र १९४८ को धारा १९ ले प्रत्येक व्यक्तिलाई विचार स्वतन्त्रता र प्रकाशनको अधिकार प्रदान गरेको छ। यसले विना कुनै हस्तक्षेप मत ग्रहण गर्न र विना रोकटोक कुनै माध्यमद्वारा मत प्राप्त गर्न खोज्ने र प्रसार गर्ने अधिकार प्रदान गरेको छ। त्यसैगरी नागरिक तथा राजनीतिक अधिकारसम्बन्धी अन्तर्राष्ट्रिय अनुबन्ध १९६६ को धारा ९ ले पनि अभिव्यक्ति स्वतन्त्रता प्रत्याभूत गर्दै यसअन्तर्गत प्रत्येक व्यक्तिलाई विना कुनै हस्तक्षेप विचार राख्ने स्वतन्त्रता हुने, सम्पूर्ण प्रकारका सूचना तथा विचार विनाबन्देज मौखिक, लिखित वा मुद्रितरुपमा वा आफ्ना छनौटका माध्यममार्फत् खोज्ने, प्राप्त गर्ने तथा दिने स्वतन्त्रता समावेश हुने व्यवस्था गरेको छ। अभिव्यक्ति स्वतन्त्रतालाई मानवअधिकारसम्बन्धी युरोपेली महासन्धि १९५०, मानवअधिकारसम्बन्धी अमेरिकी महासन्धि १९६९, हेलसिङ्की फाइनल एक्ट १९७५, मानवअधिकारसम्बन्धी अरब चार्टर १९७९, आमसञ्चारका साधनसम्बन्धी युनेस्को घोषणापत्र १९७८ जस्ता कैयौं सन्धि-सम्झौता र घोषणापत्रले आत्मसात गरेका छन्।

यस्तो अवस्था हुँदाहुँदै केही अनियन्त्रित अभिव्यक्तिले सेवाभन्दा विनाश निम्त्याउँछ भन्ने भावनास्वरुप यसै संविधानको धारा १२ को प्रतिबन्धात्मक वाक्यांशले अभिव्यक्ति स्वतन्त्रतासम्बन्धी हकलाई सकारात्मक धारणामा केही नियन्त्रण गर्ने कोसिस गरेको छ। जसअनुसार, कुनै कुराले नेपाल अधिराज्यको सार्वभौमसत्ता, अखण्डता वा विभिन्न जातजाति वा सम्प्रदायहरुका वीचको सुसम्बन्धमा खलल गर्ने वा राजद्रोह, गाली-बेइज्जती वा अदालतको अपहेलना हुने वा अपराध गर्न दुरुत्साहन दिने वा सार्वजनिक शिष्टाचार वा नैतिकताको प्रतिकूल हुने कार्यमा मुनासिब प्रतिबन्ध लगाउने गरी कानुन बनाउन रोक लगाएको मानिने छैन भन्ने उल्लेख छ। यसै संविधानको धारा ११५ को उपधारा ८ मा नेपाल अधिराज्यको सार्वभौमसत्ता, अखण्डता वा कुनै भागको सुरक्षामा युद्ध, बाह्य आक्रमण, सशस्त्र विद्रोह वा चरम आर्थिक विच्छृंखलताका कारण गम्भीर संकट उत्पन्न भएमा श्री ५ बाट नेपाल अधिराज्यभर वा कुनै खास क्षेत्रमा लागू हुने गरी संकटकालीन अवस्था घोषणा गर्न वा आदेश जारी गर्न सकिबक्सनेछ, यस्तो संकटकालीन अवस्थाको घोषणा वा आदेश गरिबक्सँदा सो घोषणा बहाल रहेसम्म विचार र अभिव्यक्तिको स्वतन्त्रता, छापाखाना र पत्रपत्रिकासम्बन्धी हक र सूचनाको हकसमेत निलम्बन गर्न सकिबक्सनेछ भन्ने उल्लेख छ। यसै संविधानको धारा ३५ को उपधारा (२) मा "श्री ५ बाट मात्र वा मौसुफको स्वविवेकमा वा अन्य कुनै निकाय वा पदाधिकारीको सिफारिसमा गरिबक्सने भनी किटानी साथ व्यवस्था भएकोमा बाहेक यो संविधानबमोजिम श्री ५ बाट गरिबक्सने सबै कार्यहरु मन्त्रिपरिषद्को सल्लाह र सम्मतिबाट गरिबक्सनेछ। यस्तो सल्लाह र सम्मति प्रधानमन्त्रीमार्फत् जाहेर हुनेछ" भन्ने व्यवस्था भएनुसार धारा ११५ को उपधारा ८ को प्रयोग मन्त्रिपरिषद्को सिफारिस विना हुनसक्ने अवस्था संविधानतः श्री ५ मा रहेको पाइदैन। साथै, यसरी गरिएको घोषणा वा आदेश सो घोषणा वा आदेश भएका मितिले ३ महिनाभित्र अनुमोदनको लागि प्रतिनिधिसभाको बैठकमा पेश गरिनेछ, प्रतिनिधिसभाको उपस्थित सदस्य संख्याको दुई तिहाई बहुमतले अनुमोदन गरेको अवस्थामा मात्र लागू भएका मितिले ६ महिनासम्म लागू रहनेछ, अनुमोदन नभएमा त्यसै मितिदेखि स्वतः निस्क्रिय भएको मानिनेछ। त्यसैगरी प्रतिनिधिसभाले आवश्यक लागेमा केवल एकपटक ६ महिना थप गर्नको लागि उपस्थित सदस्य संख्याको दुई तिहाई बहुमतकै निर्णयले मात्र सभामुखमार्फत् श्री ५ मा जाहेर गर्नसक्ने अवस्था भएको पाइन्छ। प्रतिनिधिसभाको विघटन भएको अवस्थामा भने यो कार्य

राष्ट्रियसभाले गर्ने व्यवस्था भएको पाइन्छ।

यसैगरी अभिव्यक्ति स्वतन्त्रतालाई सकारात्मकरुपमा मानवअधिकारको विश्वव्यापी घोषणापत्र १९४८ को धारा २९ (२) ले समेत "आफ्नो अधिकारको उपभोग गर्दा प्रत्येक व्यक्तिले अरुको अधिकार र स्वतन्त्रताहरुप्रति पनि आदर र सम्मान गर्नु पर्दछ र प्रजातान्त्रिक समाजको नैतिकता, सार्वजनिक सुव्यवस्था, सर्वसाधारणको कल्याणको लागि चाहिने उचित आवश्यकताहरु प्राप्त गर्ने उद्देश्यले कानुनद्वारा निश्चित गरिएको सीमाभित्र रहनुपर्ने व्यवस्था गरी अनियन्त्रित स्वतन्त्रता नहुने" भन्ने सिद्धान्तलाई मान्यता दिएको पाइन्छ।

अन्ततः राष्ट्रिय तथा अन्तर्राष्ट्रिय परिस्थिति जसअन्तर्गत विद्यमान संविधान, सन्धि, सम्झौता र घोषणापत्र (कतिपय सन्धि, सम्झौता र घोषणापत्रमा नेपाल पक्षराष्ट्र छ र नेपालको सन्धि ऐन २०४७ अनुसार राष्ट्रिय कानुनसरह यसको नितान्त पालना गर्नुपर्ने दायित्व हुन्छ) लाई हेर्दा, अभिव्यक्तिको स्वतन्त्रता व्यक्तिको स्वतन्त्रताअन्तर्गत कानुनी शासनको सिद्धान्तअनुरुप संरक्षित गरिएको हुन्छ। सकारात्मकरुपमा नियन्त्रणको दायरा निर्धारण गरिएको यस्तो व्यवस्थालाई निश्चित दायराभन्दा बाहिर गएर अन्य बहानाबाजीमा कसैले पनि कुण्ठित गर्नसक्ने अवस्था भने कदापि छैन। विगत ९ वर्षदेखि चालु माओवादी सशस्त्र विद्रोह र गलत राजनीतिक विकासक्रमको परिणामस्वरुप हाल नेपालमा प्रतिनिधिसभा नरहेको अवस्था हुँदा संकटकालीन अवस्थाको प्रयोगको अनुमोदन केवल राष्ट्रियसभाले मात्र गर्ने अवस्था देखिन्छ। तर, व्यवहारमा राष्ट्रियसभाबाट अनुमोदन गराइएको पाइँदैन। संविधान, अन्तर्राष्ट्रिय सन्धि, सम्झौता र घोषणापत्रहरुले आत्मसात गरेका सीमित दायरा, जो सकारात्मक अर्थमा निर्धारण गरेको छ, त्यसलाई मनमौजीरुपमा संविधान, सन्धि सम्झौता र घोषणापत्रले निर्धारण गरेको अवस्थाभन्दा पर गएर सशस्त्र द्वन्द्वको बहानाबाजीस्वरुप कसैले पनि निलम्बन वा प्रतिबन्ध लगाउनसक्ने अवस्था कदापि छैन। ●

# मानवअधिकारक मानवअधिक

प्रेक्षा ओझा

सूचनाको हक सबै मानवअधिकारको साँचो हो। त्यसैले सूचनाका वाहकहरुलाई अग्रपंक्तिको मानवअधिकार रक्षकका रुपमा चिन्ने गरिएको छ। जनताका मानवअधिकार संरक्षणका लागि प्रेसले ठूलो भूमिका खेल्दछ। मानवअधिकार रक्षाका लागि खबरदारी गर्ने कार्य प्रेसले अथवा आमसञ्चारका विभिन्न माध्यमहरुले गरिरहेका छन्। देशको जोखिमपूर्ण अवस्थामा पनि जनताका हकअधिकारका कुराहरुलाई सञ्चारले कुनै न कुनै प्रकारले उठाइरहेको छ। मानवअधिकारको संरक्षणका लागि सञ्चारका विभिन्न माध्यमहरुमा काम गर्ने व्यक्तिहरु मानवअधिकार रक्षकहरु हुन्। तर जनताको हकअधिकारका कुराहरु उठाएका कारण उनीहरु अहिले द्वन्द्वरत पक्षहरुको दोहोरो मारमा परेका छन्।

मानवअधिकारको संरक्षण र सम्बर्द्धनमा मानवअधिकार रक्षकहरु आफ्नो ज्यान नै खतरामा पारेर लडेका छन्। जनताका हकअधिकार सुनिश्चितताका लागि जनताका तर्फबाट वाचडगका रुपमा सरकारले गरेका कार्यहरुलाई नजिकबाट निगरानी गर्ने उनीहरु नै हुन्। राज्य र माओवादी दुवैतर्फबाट हुने गरेका मानवअधिकार विरोधी क्रियाकलापको घोर विरोध गर्दै उनीहरु सडकमा उत्रन पछि परेका छैनन्। द्वन्द्वरत दुवै पक्षबाट भएका मानवअधिकार उल्लंघनका घटनाहरुको विरोध गर्दा उनीहरुको ज्यानसमेत असुरक्षित भएको अवस्था छ। हिंसात्मक द्वन्द्व चलिरहेको अवस्थामा उनीहरु दुवैतिरको तारो बन्ने गरेका छन्। हत्या, यातना, गिरफ्तारी, बेपत्ता, अपहरणजस्ता कार्यको शिकार भइरहेको अवस्था छ। यस्तो अवस्थामा उनीहरुले मानवअधिकारको आन्दोलनलाई निर्भिक भएर अगाडि बढाउन अप्ठेरो परेको छ।

शिक्षक, राजनीतिक कार्यकर्ता, पत्रकार, मानवअधिकारकर्मी, सामाजिक कार्यकर्ता जो जनताको हकअधिकार स्थापनाका लागि कार्य गर्छन्। सबै संयुक्त राष्ट्रसंघले परिभाषा गरेको मानवअधिकार रक्षकभित्र पर्दछन्। भर्खरै हामीले मानवअधिकारको विश्वव्यापी घोषणापत्र जारी गरिएको ५६ औं वार्षिकोत्सव मनायौं। घोषणापत्र जारी गर्दा मानिसका हकअधिकारहरुका बारेमा मात्र कुरा गरिएको थियो भने। सो शताब्दीको अन्त्यतिर अर्थात् घोषणापत्र जारी गरिएको ५० वर्ष पछि मानिसका हक अधिकारहरुका बारेमा लड्ने व्यक्तिहरु स्वयम् नै खतरामा पर्न थालेको महसुस गरी सन् १९९८ को डिसेम्बर १० मा संयुक्त राष्ट्र संघको महासभाद्वारा मानवअधिकार रक्षकहरुको अधिकार सम्बन्धी घोषणा जारी गरियो।

मानवअधिकार रक्षकहरुको अधिकारसम्बन्धी संयुक्त राष्ट्रसंघको साधारण सभाले पारित गरेको घोषणापत्र जसलाई ***विश्वव्यापीरुपमा स्थापित मानवअधिकार र आधारभूत अधिकारको संरक्षण र सम्बर्द्धनको लागि कुनै व्यक्ति, समूह र समाजका अंगहरुको अधिकार र दायित्व विषयक घोषणापत्र*** भनी

## ा निम्ति संघर्षरत

## ार रक्षकहरू

नामाकरण गरिएको छ। यो संयुक्त राष्ट्रसंघको पहिलो दस्तावेज हो जसले मानवअधिकार रक्षकहरुको कामलाई महत्व र वैधानिकता प्रदान गर्नुका साथै रक्षकहरुको आवश्यक संरक्षणको पनि व्यवस्था गरेको छ।

देशको वाचडगका रुपमा कार्य गर्ने पत्रकारहरु पनि मानवअधिकार रक्षक भित्र पर्दछन। उनीहरु अहिले सशस्त्र द्वन्द्वको दोहोरो मारमा परेका छन्। राज्य र माओवादी दुवैले उनीहरुलाई बेला बेलामा दुःख दिने गरेका छन्। गिरफ्तारी, यातना, बेपत्ता तथा अपहरण पारिने कार्यमा कमी आएको छैन। दुबै तर्फबाट भएका मानवअधिकार उल्लंघनविरुद्ध आवाज उठाउँदा मानवअधिकारको संरक्षणका लागि काम गर्ने रक्षकहरुलाई विभत्स तरिकाले मारिएको छ। संविधानद्वारा प्रदत्त विचार तथा अभिव्यक्ति स्वतन्त्रताको उपभोग गर्ने यी रक्षकहरुले जनतालाई सूचना दिंदा पनि कहिले माओवादीको तारो बन्ने गरेका छन त कहिले सुरक्षाकर्मीको।

माओवादीहरुले आफ्नो आलोचना गरेका कत्ति पनि सुन्न चाहदैनन्। त्यसैले होला कालिकोटका पत्रकार नवराज शर्मालाई विभत्स तरिकाले मारे। उनको लाश समेत परिवारलाई बुझाएनन। जनताको सुसूचित हुन पाउने अधिकारको प्रत्याभूति गराउँदा-गराउँदै माओवादीहरुले उनलाई विभिन्न आरोप लगाई अपहरण गरेर नृशंस तरिकाले मारेका थिए। त्यस्तै गरी रेडियो नेपालका दैलेखस्थित सम्वाददाता डेकेन्द्र थापालाई पनि त्यस्तै प्रकारले मारे। सिन्धुपाल्चोकका ज्ञानेन्द्र खड्का पनि माओवादीद्वारा विभत्सरुपमा मारिए। क्रुरताको पराकाष्ठा नाघेका माओवादीहरुले पत्रकार ज्ञानेन्द्र खड्कालाई आफ्नै श्रीमतीको अगाडि घाँटी रेटेर मारेका थिए। कोही पनि कल्पना गर्न सक्छ यदि त्यो घटना आफूलाई परेको भए कस्तो हुन्थ्यो ? त्यस्तै गरेर समाचार लेखेकै कारण नेपाल समाचारपत्रका सुर्खेतस्थित सम्वाददाता र इन्सेक वर्ष पुस्तकका प्रतिनिधि दुर्गा थापालाई पनि अपहरण गरी २५ दिनको थुनुवा पुर्जी दिएका थिए। दुर्गालाई छुटाउन विभिन्न मानवअधिकार संघसंस्थाका प्रतिनिधिहरुले माओवादीका नेताहरुसँग ठूलो विवाद र छलफल गर्नु पर्‍यो। मानवअधिकारकर्मीको टोलीले चौथो पटकसम्म माओवादीहरुसँग वार्ता गरी थापालाई माओवादीको कब्जाबाट छुटाउन सफल भए। दुर्गा थापालाई माओवादीहरुले, उनले नगरेका कार्यहरुका बारेमा बयान लेखी जबरजस्ती हस्ताक्षर गर्न लगाएका थिए। यसैगरी मध्यपश्चिमका अन्य धेरै पत्रकारहरु हरिहरसिं राठौर, अमर सुनार आदिलाई उनीहरुका विरुद्धमा समाचार संप्रेषण नगर्न धम्की दिए। यदि यसो गरेमा कसैको ज्यान लिन सक्ने खालका अभिव्यक्तिहरु विभिन्न सञ्चार माध्यमहरुबाट आए। भने ललितपुरका मानवअधिकार शिक्षा रेडियो श्रोता क्लवका सदस्य माणिकलाल वाइवालाई सुराकी गरेको आरोपमा माओवादीले हत्या गरे।

सुरक्षा निकायबाट पनि बेला बेलामा पत्रकारहरुमाथि यस्ता क्रियाकलाप हुने गरेका छन्। सन् २००३ मा वर्दियाका एकजना स्थानीय पत्रकारलाई सुरक्षाकर्मीले पिटेका कारण पीडितको आँखामा गम्भीर चोट लागेको थियो। सगरमाथा टाइम्स राष्ट्रिय पत्रिकाका सम्पादक तथा प्रकाशक जीतमान बस्नेतलाई सुरक्षाकर्मीले ०६० सालमा गिरफ्तार गरि करिब १० महिना सम्म बेपत्ता बनाएका थिए। कानून व्यवसायीसमेत रहेका जीतमानलाई सर्वोच्चले छाड्ने आदेश दिंदासम्म श्री ५ को सरकार, शाही नेपाली सेना, नेपाल प्रहरीले समेत उनी आफ्नो हिरासतमा नरहेको जानकारी गराएका थिए। जीतमान हिरासतमा हुँदा उनलाई मानसिक र शारीरिकरुपमा यातना दिएको बताउँछन्। यसैगरी इन्सेक मानवअधिकार वर्ष पुस्तक संखुवासभा जिल्लाका पूर्व जिल्ला प्रतिनिधि विष्णु पोखरेललाई राज्यबाट भएको मानवअधिकार उल्लंघनको घटनाको सूचना संकलनका लागि जाँदा सुरक्षाकर्मीले निर्मम कुटपिट गरेर उनीद्वारा खिचिएका पीडितका फोटाहरुको रील समेत खोसिएको थियो।

यसैगरी एम्नेष्टीका सदस्य मानवअधिकार रक्षक प्रकाश थापालाई पनि अदालतले सिडिओलाई छाड्ने आदेश दिंदा पनि सेनाले मानवअधिकारकर्मी र उनकी श्रीमतिको अगाडि पुनः पक्राउ गरी हालसम्म बेपत्ता बनाएको छ।

०४६ सालको जनआन्दोलन पश्चात् प्राप्त वर्तमान संविधानले प्रत्याभूत अधिकारहरुमध्ये विशेष गरेर दुई वटा अधिकारहरु हामीले बढी उपभोग गरेका छौं भन्दा अत्युक्ति नहोला। राजनीतिक जीवनमा भाग लिन पाउने, सरकार छान्ने, सरकार बनाउने आदि र अभिव्यक्ति तथा प्रेस स्वतन्त्रता। यी दुई अधिकारहरुको हामीले अत्याधिक उपभोग गर्‍यौं। राजनीतिक अधिकारहरुलाई देशका नेताहरुले सहिरुपमा उपयोग नगर्दा आज देशको यो दुर्दशा भएको हो भन्नेमा कसैको विमति नहोला। तर जनतालाई सुसूचित गराउने, चेतना जगाउने कार्यमा सक्रियरुपले लागेका अभिव्यक्ति स्वतन्त्रताका वाहकका रुपमा देखा परेका पत्रकारहरुले भने वर्तमान स्थितिमा द्वन्द्वको चपेटामा पर्नुपरेको छ। मानवअधिकार रक्षकहरुलाई यसरी विभिन्न प्रकारले दुःख दिंदा उनीहरुको स्वतन्त्रतापूर्वक बाँच्न पाउने अधिकार खोसिएको छ। प्रत्यक्ष द्वन्द्वबाट असंलग्न मानवअधिकार

# शान्तिका लागि अभियान


बाँकेको फत्तेपुर गाविसमा गठन गरिएका शान्ति समूहहरुले आफैं निर्माण गरेको बैठक कक्षमा गइरहेका एक सदस्य

अनौपचारिक क्षेत्र सेवा केन्द (इन्सेक) ले देशको वर्तमान सशस्त्र द्वन्द्वको अवस्थामा मानवअधिकार र सामाजिक न्यायका निम्ति मुलुकमा दिगो शान्ति स्थापना गर्ने लक्ष्य हासिल गर्न मध्यपश्चिमको बाँके, बर्दिया, सुर्खेत तथा सुदूरपश्चिमको कञ्चनपुर र डोटी जिल्लाका सशस्त्र द्वन्द्वबाट अति प्रभावित ३० वटा गाविसमा शान्ति र विकासका लागि अभियान कार्यक्रम गत वर्षदेखि सञ्चालन गर्दै आइरहेको छ। कार्यक्रम संचालित प्रत्येक गाविसमा शान्तिका लागि द्वन्द्वपीडित प्रौढ, युवा, महिला र बालबालिकाका छुट्टाछुट्टै समूह गठन गरी पीडितहरुलाई समेट्ने प्रयास गरिएको छ। समूहहरुद्वारा मासिकरुपमा नियमित बैठक, मानवअधिकारको संरक्षण, शान्ति पुनर्स्थापना र विकास निर्माणका लागि छलफल, विचार-विमर्श गर्नुका साथै ती ठाउँहरुमा सचेतना कार्यक्रम सञ्चालन गरिएको छ। यसैगरी स्थानीय सरोकारवालाहरुबीच छलफल तथा अन्तरक्रिया कार्यक्रम सञ्चालन गरी गाउँमा शान्ति पुनर्स्थापनाका लागि पहल, जनताका आधारभूत अधिकारको रक्षा, विकास निर्माणका कामहरुमा सक्रियता ल्याउन निरन्तर प्रयास गरिएको छ। द्वन्द्वरत पक्षहरुको दोहोरो मारमा परेका पीडितहरुले यस कार्यक्रमलाई आफ्नो अभिभावकका रुपमा लिने गरेका छन्। सुरक्षाकर्मी तथा माओवादी दुवैदेखि डराउने जनता यस कार्यक्रम अन्तर्गतका विभिन्न क्रियाकलापहरुबाट आफ्नो अधिकारका बारेमा सचेत भएका छन्। उनीहरु द्वन्द्वरत पक्षहरु समक्ष आफ्ना अधिकारका कुराहरु राख्न सक्ने भएका छन् । आवश्यक परेको बेला जेनेभा महासन्धिका कुरा पनि द्वन्द्वरत पक्षहरु समक्ष राख्न पछि पर्दैनन्। त्यस्तै द्वन्द्व पीडितहरुका लागि साईकल मर्मत, कपाल कटाई, सिलाई बुनाईका साथै दालमोठ र पाउरोटी बनाउने जस्ता आयमूलक तालिम पनि सञ्चालन गरिएका छन्।

● बिमलचन्द्र शर्मा


दालमोठ बनाउन सिक्दै बाँके, राप्तीपारीका द्वन्द्वपीडितहरु


तालिमपश्चात् आफ्नै पसलमा साईकल मर्मत गर्दै बर्दियाका एक पीडित


सुर्खेतमा विद्यालय शिक्षकहरुका लागि आयोजना गरिएको बाल अधिकार तालिम


तालिमपश्चात् आफ्नै पसलमा कपाल काट्दै बर्दियाका एक पीडित


इन्सेक सुदूरपश्चिम क्षे. का. धनगढीमा कञ्चनपुर तथा डोटी जिल्लाका लागि कार्यक्रमको रणनीतिमा तय गर्न व्यस्त इन्सेक कार्यकर्ताहरु

सशस्त्र द्वन्द्वबाट अति प्रभावित बर्दियाको राजापुर बजार



माओवादीले ध्वस्त पारेको बर्दिया जिल्लाको राजापुरस्थित प्रहरी चौकी





इन्सेकले मानवअधिकार तथा शान्तिका लागि आव्हान गर्दै राजापुर बजार नजिक राखेको बोर्ड



माओवादीले ढालेको राजापुरको दूरसञ्चार टावर



माओवादीद्वारा ध्वस्त राजापुरस्थित भन्सार कार्यालय

**मानवअधिकार उल्लंघनका घटनामा पीडित मानवअधिकार रक्षकको संख्या**

| पीडितको प्रकार | पीडित संख्या | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| | १९९७ | १९९८ | १९९९ | २००० | २००१ | २००२ | २००३ | २००४ जुनसम्म | जम्मा |
| मानवअधिकार कार्यकर्ता | ४१ | ५७ | २९ | १० | ६३ | ९ | ३ | ४ | २१६ |
| पत्रकार | २५ | १६ | ३१ | ३५ | १०५ | ८७ | ८६ | ५८ | ४४३ |
| कानून व्यवसायी | ८ | ३४ | ११ | १२ | ११ | २१ | १९ | १३ | १२९ |
| स्वास्थ्यकर्मी | ५ | १८ | | ६ | १५ | ११ | १४ | ४ | ७३ |
| सामाजिक कार्यकर्ता | ४३ | ४१ | १० | ८ | ३४ | ४१ | ३८ | १५ | २३० |
| शिक्षक | १५० | २२० | १५७ | ४०८ | ४२१ | ५२७ | ४७४ | १५३३ | ३८९० |
| जम्मा | २७२ | ३८६ | २३८ | ४७९ | ६४९ | ६९६ | ६३४ | १६२७ | ४९८१ |

स्रोत: मानवअधिकार वर्ष पुस्तकहरु (१९९७-२००४) र मानवअधिकार प्रलेख तथा प्रसार केन्द्र, इन्सेक

रक्षकहरुलाई द्वन्द्वको नाममा यसप्रकारले दु:ख दिनु भनेको अन्तराष्ट्रिय मानवीय कानुनको उल्लंघन गर्नु हो।

मानवअधिकार प्रत्याभूतिका लागि आफ्नो ज्यान जोखिममा पारेर सक्रियरुपले कार्य गरिरहेका यी रक्षकहरुलाई द्वन्द्वको चेपुवामा पारिनु ठिक होइन। यसले देश, अनि सर्वसाधारण जनताका लागि मात्र होइन, स्वयं द्वन्द्वरत दुवै पक्षलाई समेत हितकर हुँदैन। किनकि सूचना भनेको सर्वसाधारणको लागि मात्र नभएर देशमा रहेका सम्पूर्ण वर्गका मानिसहरुका लागि हो। सूचना भएन भने चेतना हुँदैन र चेतना भएन भने कुनै पनि प्रकारको गतिविधि अगाडि बढाउन कठिन हुन्छ।

द्वन्द्वरत दुवै तर्फबाट हुने हस्तक्षेपहरु आक्रमण, धम्की, ज्यानमार्ने धम्की, कुटपिट, अपहरण, हत्या, आदि चुनौतिहरु पत्रकारहरुका अगाडि छन। तर पनि उनीहरुलाई चुप लागेर बस्न उनीहरुको समाजप्रतिको दायित्वले दिएको छैन।

संयुक्त राष्ट्रसंघका महासचिव कोफी अन्नानले ०६१ पुस ९ गते एक विज्ञप्ति जारी गर्दै नेपालमा दिन पर दिन युद्धका कारण बढ्दै गएको मानवअधिकार उल्लंघनका घटनाहरुले आफू दु:खित भएको वताउँदै यसले प्रजातन्त्र र मानवअधिकारलाई बेवास्ता गरेको र यसका कारण विकासका कामहरु पछाडि धकेलिएको बताउनु भएको छ। उहाँले मानवअधिकार रक्षकहरु खतरामा परेकोप्रति चिन्ता व्यक्त गर्नु भएको छ।

बेला बेलामा द्वन्द्वरत पक्षहरुवाट मानवअधिकार रक्षकहरुमाथि हुने गरेका यसप्रकारका हस्तक्षेपहरुका वारेमा विभिन्न संयुक्त राष्ट्रसंघीय संघसंस्थाहरुले विरोध गरिरहेका छन्। पत्रकारहरुका अधिकारहरुका वारेमा आवाज उठाउने अन्तर्राष्ट्रिय संस्था रिपोर्टर्स विद्आउट बोर्डर्सले अभिव्यक्ति स्वतन्त्रतामाथि गरिएको यसप्रकारको हस्तक्षेप द्वन्द्वरत पक्षहरुले बन्द गर्नु पर्ने कुरा उठाउँदै आएको छ।

भर्खरै एम्नेष्टी इन्टरनेशनल, ह्युमन राइट्स वाच तथा इन्टरनेश्नल कमिशन अफ जुरिस्टले नेपालको गहिरिंदो मानवअधिकार संकटका कारण यहाँका मानवअधिकार रक्षकहरु गम्भीर जोखिममा परेको कुरा बताएको छ। ती संस्थाहरुले आजभोली पत्रकार, कानुन व्यवसायी, राष्ट्रिय मानव अधिकार अयोगका कर्मचारी तथा स्थानीय मानवअधिकार कार्यकर्ता लगायत् कैयौं मानवअधिकार रक्षकहरुले सुरक्षाकर्मी तथा माओवादीबाट बढ्दो मात्रामा हैरानीहरु व्यहोर्नु परिरहेको छ। त संस्थाहरुले मानवअधिकार रक्षकहरु मारिएका, आतंककारी विरुद्धको ऐनअन्तर्गत थुनिएका, अपहरण गरिएका, यातंना र धम्की दिइएका छन भने मानवअधिकार संस्थाका कार्यालयहरुमा खानतलासी गरिएका छन् भन्ने कुरा उठाएका छन्।

आफ्नो ज्यान खतरामा पारेर मानवअधिकार रक्षाका लागि कार्य गर्ने मानवअधिकार रक्षकहरु, जो धम्कीपूर्ण वातावरणमा बाँचिरहेका छन्, उनीहरुको संरक्षणको जिम्मा लिने भरपर्दो निकाय राष्ट्रिय मानव अधिकार आयोग भए पनि आयोगले मानवअधिकार रक्षकहरुमाथि हुने हस्तक्षेपका विरुद्ध आवाज उठाए पनि द्वन्द्वरत पक्षहरुले वास्ता गरेको कमै पाइन्छ।

विभिन्न अन्तर्राष्ट्रिय मानव अधिकार कानुनहरुको पक्षराष्ट्र बनिसकेको नेपालले संवैधानिक रुपमा प्रत्याभूत गरेको प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताको बेला-बेलामा उपहास गरेको पाइएको छ। जनताको सुसूचित हुन पाउने अधिकारको द्वन्द्वरत दुवै पक्षले बेवास्ता गरेका कारण मानवअधिकारका निम्ति संघर्षरत मानवअधिकार रक्षकहरु स्वयम् संकटमा परेका छन्। यस्तो संकट सर्वथा निन्दनीय छ। कुनै पनि वहानामा मानवअधिकार रक्षकहरुको अधिकार हनन गर्न पाइँदैन।

# कस्तो छ नेपालमा मुस्लिमहरुको अवस्था ?

हमिद अन्सारी

**विषय प्रवेश**

ईस्लाम धर्म मान्नेलाई मुस्लिम भनिन्छ। "ईस्लाम" को शाब्दिक अर्थ "शान्ति" हो। ईस्लाम धर्म मान्नेहरुले निम्न लिखित ५ कुराहरु मान्न अनिवार्य हुन्छ:

**इमानः** मुस्लिमहरुमा यो दृढ विश्वास हुनु जरुरी छ कि अल्लाह (ईश्वर) एउटै मात्र छ। अल्लाह निराकार हुन्। अल्लाहले विभिन्न समयमा आफ्ना दूतहरु (पैगम्वरहरु) पठाए। आखिरी पैगम्वर महम्मद सल्लाहो अलैहे बसल्लम हुन्। कुरान शरीफ आखिरी किताब हो र अब फेरि कयामतसम्म कुनै पैगम्बर र किताब अल्लाहले पठाउँदैनन्। "हदीस" महम्मद सल्लाहो अलै हे बसल्लमले भनेका कुराहरुको संकलित धार्मिक किताब हो जसअनुरुप मुस्लिमको आचरण र व्यवहार हुनुपर्दछ।

**नेभाजः** प्रत्येक दिन ५ चोटी नेभाज पढ्नु पर्दछ। कसरी पढ्ने त्यसको व्याख्या हदीसमा छ। त्यसै नियमअनुसार पढ्नुपर्छ।

**रोजाः** प्रत्येक वर्ष हिजरी सम्वत्अनुसारको रमजान महिनामा एक महिनासम्म रोजा (उपवास) बस्नुपर्छ। रोजा पनि हदीसमा उल्लेख भएअनुसारको नियमअनुसार गर्नुपर्छ।

**हजः** प्रत्येक सम्पन्न व्यक्तिले आफ्नो जीवनकालमा एक चोटी भए पनि अनिवार्यरुपमा हज गर्नु जरुरी छ। विपन्न र गरिबलाई यो अनिवार्य छैन। हज पनि हदीसको नियमअनुसार गर्नुपर्छ।

**जकातः** जकात भनेको "दान" हो। प्रत्येक व्यक्तिले हदीसमा उल्लेखित नियमअनुसार जकात निकाल्नैपर्दछ। उदाहरणको लागि प्रत्येक मुस्लिमले आफ्नो जकात फिया २.५ किलो गहुँ वा सोबराबरको रकम रमजानको अन्तिम दिनसम्म निकाल्नु र दिनैपर्छ। गर्भमा भएको बच्चाको पनि २.५ किलो गहुँ वा त्यसबराबरको विद्यमान बजार मूल्य बराबरको रकम ईद नेभाज पढ्नुभन्दा पहिले निकालेर हदीसले तोकेअनुसारको ठाउँ/संस्था/व्यक्तिलाई बुझाउनैपर्छ।

माथि उल्लिखित ५ बुँदाहरु "फर्ज" (अनिवार्य शर्त) हुन्। यसमा थपघट गर्ने अधिकार कसैलाई पनि छैन। यी ५ वटा फर्जहरुले प्रत्येक मुस्लिमलाई एउटा बाध्यात्मक स्थितिमा राखेका हुन्छन्। यसले एउटा आफ्नो ईस्लाम धर्मावलम्बी भएको छुट्टै पहिचान बनाउँछ। तर, यी ५ वटा फर्जहरुले अरु समुदायसँग घुलमिल गर्न अप्ठ्यारो स्थितिमा पनि पारेको हुन्छ।

यी ५ वटा कुराहरुबाहेक हदीसमा उल्लिखित केही "फर्ज" अनिवार्यरुपले मान्नैपर्छ। जस्तैः

- हलाल मासु मात्र खाने।
- ब्याज लिने दिने दुवै हराम हो। ब्याज लिनु/दिनु हुँदैन।
- रक्सी पिउनु पनि हराम हो।

माथि भनिएका कुराहरु जीवनभर मान्नैपर्छ। यसबाट एउटा जीवन पद्धति कायम हुन्छ। यी अनिवार्य शर्तहरुको पालना गर्दा त्यसैअनुरुप मुस्लिमहरुको परिवारको निर्माण भएको छ र पछि गएर विभिन्न देशमा भएका मुस्लिम समुदायमा ईस्लाम धर्मको व्यापक प्रभाव परेको छ। विभिन्न समुदायसँगको सहवासमा एउटै देशभित्र सर्वाधिक समुदायको रितिस्थिति, भेषभुषा, खानपिन, लवाई-खवाई इत्यादिको प्रभाव पनि परेको छ। तसर्थ, मुस्लिम समुदायमा सामाजिक र साँस्कृतिक विभिन्नता छ।

नेपालको कुरा गर्दा, ईस्लाम धर्मावलम्वी मुस्लिमहरु बाइसी र चौबीसी राज्यमा पनि आफ्नो धर्मअनुसारको जीवन यापन गरेर जुन समुदायसँग बसे त्यसका पनि सामाजिक, साँस्कृतिक मूल्य-मान्यताका कुरा मान्दै आए। पृथ्वीनारायण शाहले नेपालको एकीकरण शुरुवात गरेर बाइसी र चौबीसी राज्यका भूभाग मिलाई वर्तमान नेपालको संरचना त तयार भयो तर यी स्थानमा बसोवास गर्ने समुदायमा एकीकरण गरिएन, भएन। हिन्दु राज्यको घोषित र अघोषित लिखित-मौखिक संवैधानिक प्रयोगले गर्दा हिन्दु भएता पनि तथाकथित "अछूत" हरुलाई मन्दिरमा प्रवेश गरेर पूजा गर्न दिइएन, पानी नचल्ने जातिमा राखियो। यहाँसम्म कि बुद्ध धर्मावलम्वीहरुलाई पनि सुविधाको नाममा श्री ५ को सरकारले बुद्ध जयन्तीको मात्र बिदा दियो। धेरै माग बौद्धमार्गीले पनि राख्दै आएका छन्। अरु जनजाति, समुदायलाई पनि एकताको सूत्रमा बाँध्न सकिएन। यो स्थिति हालसम्म यथावत् छ। एउटा मूल प्रवाहको नेपाली समाज निर्माण गर्न बाँकी नै छ।

नेपालमा हाल आएर कस्तो लाग्छ भने यो देशमा मान्छे जन्मिदैन, जाति मात्र जन्मिन्छ। प्राकृतिक नियमअनुसार मान्छे जन्मिन्छ, पछि त्यो मान्छे मुस्लिम, हिन्दु, बुद्धिष्ट अथवा कुनै समाजको हुन्छ। नेपालमा ९० भन्दा बढी जाति जनजाति समुदायहरु छन्। उनीहरुलाई एकताको सूत्रमा बाँधी एउटै सुन्दर देश बनाउन सर्वप्रथम राजनीति ठीक हुनुपर्दछ, विधिको शासन हुनुपर्दछ, कानुनी राज्यको निर्माण गर्नुपर्दछ र राजनीतिक पार्टीहरुमा सबै धर्म, जाति, जनजाति र समुदायहरुलाई समेटेर लैजाने प्रतिबद्धता हुनुपर्दछ भन्ने विश्वास र मान्यताका साथ मुस्लिम समुदाय पनि नेपाली समाजको मूल प्रवाहमा सक्रियरुपमा सहभागी हुन चाहन्छन्।

**मुस्लिमहरुको तथ्यांकसम्बन्धी केही समस्या र समाधान**

सन् १९५२/५४ देखि २००१ सम्मको तथ्यांकले विगत ५० वर्षको अवधिभरी नै हिन्दु र बुद्ध धर्मपछि ईस्लाम धर्मावलम्वी मुस्लिमहरुको स्थान तेस्रो छ। सन् १९५२/५४ को जनगणनामा मुस्लिमहरु करिब २ लाख १५ हजार अर्थात् कूल जनसंख्याको २.५९ प्रतिशत थिए भने सन् २००१ को जनगणनामा मुस्लिमहरुको

संख्या बढेर ४.२० प्रतिशत अर्थात् ६ लाख ५३ हजार भयो (तालिका नं. १) । यसबाट के अनुमान गरिन्छ भने विगत आधा शताब्दीको दौरानमा मुस्लिमहरुको संख्यामा दुगुना पनि बृद्धि भएन जबकि क्रिश्चियनहरुको संख्यामा विगत बीस वर्षमा अप्रत्याशीतरुपले ५० गुणा बृद्धि भयो (तालिका नं. १)।

यसले प्रष्टरुपमा दुईवटा कुराहरु संकेत गर्छ:- पहिलो, मुस्लिमहरुले नेपालका बासिन्दाहरुलाई धर्म परिवर्तन गराएर बृद्धि भएन, यो प्राकृतिक रुपले र बाहिरबाट आएर बृद्धि भएको छ। तर यो बृद्धिको कति प्रतिशत प्राकृतिक र बसाई सराईबाट भयो त्यसको भरपर्दो तथ्यांक पाइँदैन। क्रिश्चियनहरुको अप्रत्याशित बृद्धि दर धर्म परिवर्तन गरेर/गराएर भएको अनुमान गरिएता पनि कुन जाति, जनजाति वा धर्मावलम्बीहरुबाट कति परिवर्तन भएर कति मानिस क्रिश्चियन भए भन्ने कुराको तथ्यांक पाइँदैन।

दोश्रो, मुस्लिमहरुको जनसंख्यामा जनगणनाको विवरणमा निरन्तररुपमा देखिएका मुख्यत: दुईवटा कारणहरु मुस्लिमहरुले उठाउँदै आएका छन्। पहिलो कारण, प्रश्नावली भर्ने/भराउने बेलामै हुने गल्ती हो। गणकहरु मुस्लिम हुँदैनन्। धेरैजसो गैरमुस्लिम हुन्छन्। ईस्लाम धर्म आफ्नो धर्मभन्दा भिन्दै भनि अन्य शिर्षकमा ठिक लगाउँछन्। दोस्रो, तथ्यांक प्रशोधन गरी तालिकामा मुस्लिम जनसंख्यामा चुरौटे, धुनिया र अन्य मुस्लिम जाति उपजातिलाई पनि "अन्य" अथवा "जवाफ नदिएको" शिर्षकमा गाभिदिन्छन्। यो परम्पराजस्तै भइसकेको छ। न त श्री ५ को सरकारले आफ्नो जनगणना संकलन विधि र संयन्त्रमा सुधार ल्यायो न त गणकहरुमै गणनासम्बन्धी आवश्यक तालिम दिन सक्यो।

मुस्लिम समुदायका शैक्षिक संस्था जस्तो मदरसामा कार्यरत शिक्षक, संघसंस्थाका व्यक्तिहरु पनि जनगणनाको बेला सक्रिय भएनन् र त्यसले पनि कम संख्या हुन गएको देखिन्छ। फेरि यस लेखकले केन्द्रीय तथ्यांक विभागको २००१ को जनसंख्या विवरण पनि त्रुटीपूर्ण भएको तथ्य तालिका नं. २ मा उल्लेख गर्न चाहन्छ। जसअनुसार, सन् २००१ को जनगणनाको सबै धर्मावलम्बीहरुको जोड र "अन्य" शिर्षकको संख्या जोड्दा तथ्यांकमा गडबडी देखिन्छ। सन् २००१ को जनसंख्या प्रत्येक ठाउँमा केन्द्रीय तथ्यांक विभागले २३१५१४३८ देखाउँछ तर धर्मसम्बन्धी तालिका जोड्दा नेपालको जनसंख्या जम्मा २२७३६९४९ अर्थात् ४,१४४८९ ले घटी देखिन्छ (तालिका नं. २)।

### मुस्लिमहरु कहाँ कति छन् ?

मुस्लिम बौद्धिक समुदायले विभिन्न सभा-सम्मेलनमा आफ्नो संख्या १० देखि २० प्रतिशत रहेको दावा गर्छन्। धेरैजसो बुद्धिजीवी मुस्लिमले मुस्लिमहरु १० प्रतिशतभन्दा कम नरहेको अनुमान गर्छन्। तर, नेपालको केही इलाकामा यस लेखकले गरेको नमूना सर्भेक्षणको आधारमा नेपालको जनसंख्याको १२ प्रतिशत रहेको अनुमान छ। केन्द्रीय तथ्यांक विभागसँग विभिन्न धार्मिक समुदाय, जाति, जनजातिले भरपर्दो तथ्यांकको माग गर्दै आएका छन्। तर, अरु विकल्पको अभावमा यस लेखको पछिका विवरणहरु पनि यसै केन्द्रीय तथ्यांक विभागको तथ्यांकका आधारमा नै प्रस्तुत गरिएको छ। श्री ५ को सरकार केन्द्रीय तथ्यांक विभागको विवरणअनुसार नेपालका ७५ वटै जिल्लामा मुस्लिमहरु पाइन्छन्। तर, मुस्लिमहरुको संख्या मनाङ जिल्लामा एक मात्र छ भने रौतहट जिल्लामा सबभन्दा बढी ३९२९५ रहेको छ। नेपालका ५ विकास क्षेत्र, १४ अञ्चल र ७५ जिल्लाको मुस्लिम संख्या, प्रतिशतसम्बन्धी विस्तृत विवरणको आधारमा निम्न लिखित तालिका निर्माण गरी विश्लेषण गर्न प्रयत्न गरिएको छ।

विकास क्षेत्रअनुसार सबभन्दा बढी जनसंख्या मध्यमाञ्चलमा ५.६७ प्रतिशत र सबभन्दा कम सुदुरपश्चिमाञ्चलमा ०.२०

तालिका नं. १
नेपालका विभिन्न धर्मावलम्बीहरुको संख्या (हजारमा)

| धर्मावलम्बीहरुको विवरण | १९५२/५४ | | १९६१ | | १९७१ | | १९८१ | | १९९१ | | २००१ | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | जम्मा | प्रतिशत | जम्मा | प्रतिशत | जम्मा | प्रतिशत | जम्मा | प्रतिशत | जम्मा | प्रतिशत | जम्मा | प्रतिशत |
| हिन्दु | ७३५० | ८०.६३ | ८२५४ | ८७.६९ | १०३३० | ८०.३९ | १३४४५ | ८९.५० | १५९९७ | ८६.५१ | १८३३० | ८०.६२ |
| बौद्ध | ७२७ | ८.७७ | ८७१ | ९.२५ | ८६६ | ७.४९ | ७९९ | ५.३२ | १४३९ | ७.७९ | २४४३ | १०.७४ |
| ईस्लाम | २१५ | २.५९ | २८१ | २.९९ | ३५१ | ३.०४ | ३९९ | २.६६ | ६५३ | ३.५३ | ९५४ | ४.२० |
| जैन | - | - | - | - | ०५ | ०.०४ | १० | ०.०६ | ३१ | ०.१४ | ४ | ०.०२ |
| क्रिश्चियन | - | - | - | - | - | - | ४ | ०.०३ | ३१ | ०.१७ | १०२ | ०.४४ |
| किरांत | - | - | - | - | - | - | - | - | - | - | ८१८ | ३.६० |
| सिख | - | - | - | - | - | - | - | - | - | - | ६ | ०.०३ |
| बहाई | - | - | - | - | - | - | - | - | - | - | १ | ०.०१ |
| अन्य | १ | ०.०१ | ७ | ०.०७ | ५ | ०.०४ | ३६५ | २.४३ | २६३ | १.९६ | ७९ | ०.३४ |
| जम्मा | ८२९३ | १०० | ९४१३ | १०० | ११५५७ | १०० | १५०२२ | १०० | १८४९० | १०० | २२७३७ | १०० |

*स्रोत: श्री ५ को सरकार केन्द्रीय तथ्यांक विभाग, काठमाडौं*

प्रतिशत देखिन्छ। विगत तीन दशकको दौरानमा मुस्लिमहरुको जनसंख्यामा कुनै उल्लेखनीय र अप्रत्याशित बृद्धि भएन। तालिका नं. २ को आधारमा हेर्दा, सुदुरपश्चिमाञ्चलमा सबभन्दा कम मुस्लिमहरु बस्थे भने सन् २००१ सम्म तिनको संख्यामा न्यूनतम बृद्धि (०.११ प्रतिशतबाट ०.२०) भएको छ। मध्यमाञ्चलमा बढी मुस्लिम थिए भने हाल पनि त्यो यथावत् नै छ।

तीनवटै जनगणना काल (१९८१, १९९१ र २००१) मा पहाडका ५६ र तराईका १९ जिल्लामा मुस्लिमहरुको संख्या रहेको पाइन्छ। मुस्लिमहरुको कूल जनसंख्यामध्ये तराईमा ९६ प्रतिशत र पहाडमा ४ प्रतिशत मात्र रहेको छ (तालिका नं. ४)।

मुस्लिमहरुको संख्यामा अनेकौं प्रश्नहरु रहेता पनि यसले एउटा के सत्य दर्शाउँछ भने मुस्लिमहरु जुन जिल्लामा पनि

तालिका नं. ३

मुस्लिमहरुको क्षेत्रीय आधारमा संख्या (२००१)

| विकास क्षेत्र | १९८१ | | १९९१ | | २००१ | |
|---|---|---|---|---|---|---|
| | संख्या | प्रतिशत | संख्या | प्रतिशत | संख्या | प्रतिशत |
| पूर्वाञ्चल | ९९६१३ | २.६९ | १५६४१६ | ३.५२ | २१६५१४ | ४.०५ |
| मध्यमाञ्चल | २००७७६ | ४.०९ | ३०३८४३ | ४.९१ | ८०३१६२९ | ५.६७ |
| पश्चिमाञ्चल | ६९०५६ | २.२१ | १३१०९३ | ३.४८ | १८६१८० | ४.०७ |
| मध्यपश्चिमाञ्चल | २८४५८ | १.४६ | ५८३७४ | २.४२ | ९१३३८ | ३.०३ |
| सुदुरपश्चिमाञ्चल | १४३५ | ०.११ | ३४८३ | ०.२१ | ४२७६ | ०.२० |
| नेपाल | ३९९३३८ | २.६६ | ६५३२०९ | ३.५३ | ९५४०२३ | ४.१२ |

*स्रोत: केन्द्रीय तथ्यांक विभाग, जनगणना १९८१, १९९१ र २००१*

अल्पसंख्यक नै छन् र बढी मुस्लिमहरु तराई क्षेत्रमा बस्दछन्। यसरी नै अरु किताबमा उल्लेख भएअनुसार, नेपालका कुनै पनि जिल्लामा कुनै पनि समुदाय वा जातिको बाहुल्यता देखिँदैन। नेपालको गाउँघर हेर्दा पनि जातीय समन्वय, धार्मिक सहिष्णुता र सद्भावको वातावरण प्रष्ट देखिन्छ। हिन्दु-मुस्लिमहरुबीच हुने गरेका द्वन्द, जातीय दंगा धेरैजसो बाहिरबाट संचालित भएको हुनसक्छ।

**मुस्लिम समुदायभित्रको धार्मिक विभिन्नता र जातियता**

ईस्लाम धर्ममा दुईवटा मुख्य धार

तालिका नं. २

नेपालका विभिन्न धर्मावलम्बीहरुको संख्या (हजारमा)

| धर्मावलम्बीहरुको विवरण | १९८१ | | १९९१ | | २००१ | |
|---|---|---|---|---|---|---|
| | जम्मा | प्रतिशत | जम्मा | प्रतिशत | जम्मा | प्रतिशत |
| हिन्दु | १३४४५ | ८९.५० | १५९९६ | ८६.५० | १८३३० | ८०.६२ |
| बौद्ध | ७९९ | ५.३२ | १४३९ | ७.७८ | २४४३ | १०.७४ |
| ईस्लाम | ३९९ | २.६६ | ६५३ | ३.५३ | ९५४ | ४.२० |
| क्रिश्चियन | ४ | ०.०३ | ३१ | ०.१७ | १०२ | ०.४५ |
| अन्य | ३७५ | २.५० | ३७२ | २.०१ | ९०८ | ३.९९ |
| जम्मा | १५०२२ | १०० | १८४९१ | १०० | २२७३७ | १०० |

*स्रोत: केन्द्रीय तथ्यांक विभाग, काठमाडौं*

छन्: सुन्नी र शिया। यी दुवै धार सर्वत्र पाइन्छन्। तर, नेपालमा सुन्नी मुस्लिम समुदाय मात्रै छन्। सुन्नी मुस्लिम समुदायमा पनि चारवटा ईमाम (पुरोहित) का अनुयायीमध्ये दुईवटा मात्रै पाइन्छन्। ती हुन्: हनफी इमाम (करिब ६० प्रतिशत) र शाफई इमाम (करिब ४० प्रतिशत) मान्नेहरु। यी दुवै ईमामका प्रार्थना गर्ने छुट्टाछुट्टै तरिकाहरु छन्, जुन हदीस र कुरान र महम्मद (स.अ.ब.) ले नै सिकाएका हुन्। फेरि यी दुवै ईमाम मान्नेहरुमा पनि वरेलवी/सुन्नी जमातका पनि भिन्नता छन्। शाफई ईमाम मान्नेहरुले कुरान हदीसको अक्षरस: पालना गर्छन् तर हनफी इमाम स्थानीय सामाजिक मूल्य-मान्यता, सँस्कृति र साँस्कृतिक पक्षहरुलाई पनि त्यत्तिकै मान्यतामा धार्मिक प्रतिबद्धता निभाउने गर्छन्। हनफी मुस्लिम समुदायमा पीर (सिद्ध पुरुष) बढी पाइन्छन्। तर, साफईमा सिद्ध पुरुष थोरै मात्रामा पाए पनि बढी जोडकोरान र हदीसको अक्षरस: पालना गर्न दबाब दिन्छन् र पीर एवम् मजार मान्दैनन्।

नेपालका मुस्लिमहरुका करिब २६ जाति-उपजातिहरु छन्। यी जातिहरु हनफी र शाफई दुवैमा छन्। धर्मले वर्जित गरेता पनि हिन्दु र बौद्ध धर्मावलम्बीहरुसँगको सहबासले सम्भवत: मुस्लिमहरुमा पनि सैयद, शेख, मुगल, पठान र व्यवसायअनुसारको जातीय वर्गीकरण छ। त्यसमा पनि को मुस्लिम कहाँबाट आए भन्ने पनि छन्। काठमाडौंमा कश्मिरीबाट आएका नयाँ र पुराना कश्मिरी मुस्लिमहरुमा शैयद, शेख, जू, ख्वाजा भन्ने जातिहरु छन् भने पहाडका मुस्लिमहरु धेरैजसो मिया, खाँ, शेख लेख्छन्। तराईमा सैयद, शेख, सिद्धिकी, खान, पठान जातिहरु आफूलाई ठूलो जाति ठान्छन् भने परम्परागत पेशा अंगालेका जातिहरु जस्तै: कपडा बनाउनेलाई जुलाहा (अन्सारी), रुवा धुने र रजाई दोलाई बनाउनेलाई धुनिया, लुगा धुनेलाई धोबी, लुगा सिउनेलाई दर्जी, लुगा रंगाउनेलाई रंगरेज, हलुवा-मिठाई

तालिका नं. ४

पहाड र तराई क्षेत्रमा मुस्लिम समुदायको संख्या (प्रतिशतमा)

| जनगणना वर्ष | तराई (१९ जिल्लामा) | पहाड (५६ जिल्लामा) |
|---|---|---|
| १९८१ | ९७ | ३ |
| १९९१ | ९७ | ३ |
| २००१ | ९६ | ४ |

*स्रोत: केन्द्रीय तथ्यांक विभाग, जनगणना १९८१, १९९१ र २००१*

तालिका नं. ५

विभिन्न समुदायको साक्षरता र आम्दानी, १९९६

| | साक्षरता प्रतिशत | प्रतिव्यक्ति आय (रु. मा) |
|---|---|---|
| पहाडिया बाहुन | ५८ | ९,९२१ |
| पहाडिया क्षेत्री | ४२ | ७,७४४ |
| तराईका जातिहरु | २७.५ | ६,९११ |
| लिम्बु, गुरुङ, मगर, राई, शेर्पा | ३५.२ | ६,६०३ |
| मुस्लिम | २७.६ | ६,६०३ |
| नेपाल | ३६.७ | ७,६७३ |

*स्रोत: केन्द्रीय तथ्यांक विभाग, जनगणना १९९६, विश्व बैंक, १९९७*

बनाई बेच्नेलाई हलुवाई जाति (वेरादर) का छन्। त्यसैगरी जुत्ता सिउने/बनाउनेलाई मोची, दिशा-पाइखाना सफा गर्नेलाई भंगी जाति भनिन्छ। यी जातिका मानिसहरु मिलेर, सँगै बसेर खान्छन् र एक जातिले अर्को जातिसँग विवाह गर्न सक्छन्। तर, सकभर एउटै जातिमा बिहेवारी हुने चलन छ। अन्सारी जातिले देववन्दी, वरेलवी वा शाफई जो भए पनि अन्सारी जातिमै विवाह गर्न बढी प्रचलन छ। यसरी धार्मिक परम्परा र अकिदामा बाँडिएका मुस्लिम समुदायमा कायम भइआएका द्वन्द्वहरुले कहिलेकाहीं उग्र रुप लिन्छन् र ध्वंसात्मक गतिविधि पनि हुनसक्छ। यस्तो सामाजिक विकृतिलाई हटाउन मुस्लिम संघसंस्थाले कार्यक्रम गर्नु बढी व्यवहारिक हुन्छ।

**मुस्लिमहरुको प्रमुख समस्या गरिबी र अशिक्षा हो**

"यो असली हिन्दुस्थान" हो भनिने नेपाल अधिराज्य संवैधानिक राजतन्त्रात्मक हिन्दु राज्य भए पनि सही मानेमा "हिन्दु राज्य" बन्न सकेन। विगत करिब २ सय ३५ वर्षको राज्यकालमा दलित समुदाय हिन्दु धर्म मान्ने भए पनि "हिन्दु राज्य" मा आफ्नै देवताको मन्दिरमा गएर पूजा गर्न पाउँदैनन्, अपहेलित छन्, अशिक्षित छन्। मुस्लिमको के कुरा गर्ने ? अरु जातिको दयनीय अवस्था निम्न अनुसारको तालिकाले देखाउँछ।

यो तथ्यांकले के देखाउँछ भने, वार्षिक आम्दानी र साक्षरता प्रतिशत नेपालका अरु जाति, जनजाति र धार्मिक समुदायभन्दा पनि कम रहेको छ। अर्को एउटा अध्ययनले मुस्लिमहरुको दयनीय अवस्था अझ प्रष्ट पार्छ (तालिका नं. ६)। यसरी नेपाली मुस्लिम समुदाय पनि अरु जाति, जनजाति जस्तै सबै कुरामा अपहेलित, उपेक्षित र गरिबीको मारमा फस्दै गएको छ। एउटा अर्को प्रतिवेदनअनुसार, प्रतिदिन प्रतिमुस्लिमको आय एक अमेरिकी डलर लिएर हिसाब गर्दा गरिबीको रेखामुनि रहेका मुस्लिमहरुको संख्या ८० प्रतिशत हुन आउँछ। मुस्लिमहरुको अकालमा मृत्यु हुने, अशिक्षित भएर जीवनयापन गर्ने, कुपोषण, बेरोजगारी र भूमिहीन अवस्थामा पुस्तौंदेखि गरिबीसँग जुझ्दै येनकेन प्रकारेण जीवनयापन गर्छन्। अधिकांश मुस्लिमहरु तराई क्षेत्रका सीमान्त भूमिहीन किसान, मोही र हलिया भएर पनि जीवनयापन गर्दैछन्। करिब ५ प्रतिशत जति शहरी क्षेत्रमा छन्। सम्पन्न मुस्लिमहरुलाई पनि सम्पन्नता बचाई राख्न कहिले चन्दा आतंक, कहिले उनीहरुले चलाएको कलकारखाना, व्यवसायमा अनेकौं व्यवधान खडा गरी, नचाहिँदो किसिमको कर, भन्सार दर र अरु अलिखित कानुनहरुको सामना गर्नुपर्ने स्थिति अद्यावधि कायम छ। तसर्थ, राज्यले अन्य उत्पीडित र उपेक्षित जनसमुदायलाई पनि एउटा कानुनी राज्यको आभास दिलाएर उनीहरुलाई प्रत्येक क्षेत्रमा समान सुविधा र अवसर प्रदान गरी गरिबी निवारणका उपलब्ध साधन श्रोतको उपयोग गर्न/गराउन तथा नेपालको विकास प्रक्रियामा सक्रियरुपले सहभागी गराउन अनिवार्य छ।

**मुस्लिमहरुको पहिचानसम्बन्धी समस्या र समाधान**

ईस्लाम धर्म मान्ने मुस्लिम हुन्छन्। ईस्लाम धर्म मान्दा र नेपालका विभिन्न समुदायसँग बस्दा मुस्लिमहरुको छुट्टै पहिचान छ। मुस्लिमभित्र पनि विभिन्न भाषा, खानपिन, रहनसहन, जातियता, विभिन्न अकिदा, धार्मिक द्वन्द्व आदि छन्। तैपनि उनीहरुमा इत्तेहाद (एकता) कायम गर्न कुरान र हदीसका नियमहरुले "उम्मत" को शिक्षा-दीक्षा दिई एक सूत्रमा बाँधन खोज्छ। राष्ट्रिय र अन्तर्राष्ट्रिय क्षेत्रमा "इत्तेहाद (एकता)" को सन्देश र शिक्षाअनुरुप हज र जकातको माध्यमबाट एकताको सूत्रमा बाँधिएका हुन्छन्। नेपालको सँस्कृति, सामाजिक र जातीय आधारमा मुस्लिमहरुले धेरै कुरा अपनाएका

तालिका नं. ६

जात-जाति अनुसारको मानवीय विकास, १९९८

| मानवीय विकास | नेपाल | बाहुन | क्षेत्री | नेवार | पहाडीया जनजाति | मधिशे | दलित (पहाडीया) | मुस्लिम |
|---|---|---|---|---|---|---|---|---|
| कति वर्षसम्म बाँच्छन् | ५५ | ६०.८ | ५६.३ | ६२.२ | ५३.० | ५८.४ | ५०.३ | ४८.७ |
| कति वर्षसम्म स्कूल जान्छन् (वर्षमा) | २.३ | ४.७ | २.८ | ४.४ | २.० | १.७ | १.२ | १.४ |
| वार्षिक प्रतिव्यक्ति आय (रु. मा) | ७,६७३ | ९,९२१ | ७,७४४ | ११,९५३ | ६,६०७ | ६,९११ | ४,९४० | ६,३३६ |

*स्रोत: नेपाल मानव विकास प्रतिवेदन, सेसाक, १९९८*

छन्, घुलमिल गरेका छन्। यद्यपि, ईस्लाम धर्मका ५ वटा खम्बाले मुस्लिमहरुलाई अलग अस्तित्व कायम गर्नैपर्छ। तैपनि उनीहरु दैनिक जीवनमा ९८ प्रतिशत समय स्थानीय रीतिरिवाज, खेतीपाती र व्यवसायमा खर्चिन्छन् भने बाँकी २ प्रतिशत समय मात्रै आफ्नो धर्मअनुसारको कर्म (जस्तैः नेमाज पढ्ने आदि) मा बिताउँछन्। मुस्लिमहरुको आफ्नै पहिचान छ र जस्तो अवस्थामा जहाँ बसेका छन् कुनै न कुनै तरिकाबाट छुट्याउन सकिन्छ। तसर्थ, नेपालीका बौद्धिक तरिकाबाट राजनीतिक पार्टी, सरकार, गैरसरकारी र नागरिक समाजले निम्न कुराहरु प्रष्टसँग बुझ्नु र त्यसअनुसार कारवाही गर्नु पर्दछः

१) ईस्लाम धर्म हो। ईस्लाम धर्म मान्नलाई मुस्लिम भनिन्छ। मुस्लिम धर्म भन्नु हुँदैन। ईस्लाम धर्म "उल्टो धर्म" होइन। यिनीहरु पश्चिमतिर मुन्टो गरेर पूजा गर्दैनन्। यिनीहरु काबातिर ध्यान केन्द्रित गर्न पश्चिमतिर उभिएका हुन्। "काबा" जुन देशबाट जुन दिशातर्फ पर्छ, त्यही दिशातिर मुन्टो फर्काउनुपर्छ।

२) मुस्लिमहरुलाई उर्दू र अरबी मकतब मदरसामा पढ्नै पर्दछ किनभने धार्मिक ग्रन्थ र अरु किताबहरु सबै यी भाषामै छन्। तसर्थ, मकतब मदरसामा उर्दू अनिवार्य शिक्षा भएकाले उर्दूलाई संवैधानिक भाषा बनाउनु पर्दछ।

३) मकतब मदरसाहरु नेपालका मुस्लिम समुदायका अभिन्न अंग हुन्। यसको अपरिहार्यतालाई महसुस गरी राज्यले, नेपाली समाजले एउटा शिक्षण संस्थाको रुपमा मान्नुपर्छ। मुस्लिम समुदायले यसको सञ्चालन आफैं गर्छन्। मुस्लिमहरु यसलाई अझ सुदृढ, आधुनिक शिक्षासँग गाँस्न चाहन्छन्। यसलाई मध्यनजर गरी मकतब मदरसालाई श्री ५ को सरकारले एउटा शिक्षण संस्थाको रुपमा कानुनी मान्यता दिनुपर्छ, सहयोग गर्नुपर्छ र शिक्षण संस्थाअनुरुपको सहयोग गर्न एउटा मदरसा बोर्डको गठन गर्नु पर्दछ।

४) मुस्लिम नेपालको एउटा छुट्टै समुदाय हो। यसलाई जाति, जनजाति र अरु समुदायभित्र राख्न धार्मिक, दर्शनशास्त्र र समाजशास्त्रीय दृष्टिकोणबाट पनि तर्कसंगत छैन, वैज्ञानिक हुँदैन। तसर्थ, सरकारी, गैरसरकारी संघसंस्था, राजनीतिक पार्टीहरुले आफ्ना दस्तावेजहरुमा छुट्टै "मुस्लिम" शब्द लेख्नु पर्दछ।

५) मुस्लिमहरुको नाम पनि शुद्ध लेखिदैन। कहीं मुस्लिमहरुले आफ्नो जातिअनुसार अन्सारी, सैयद इत्यादि किसिमका जाति लेख्छन् त कहीं (पहाडमा) मियाँ लेख्छन्। यसरी अनेकौं परम्परा ग्रहण गरेका मुस्लिमहरुको नाम लेख्ने र बोलाउनेमा विभिन्नता छ। तर, सरकारी कागजपत्रमा एउटा मुस्लिमको नाम एकथरीले नागरिकतामा, फेरि त्यही व्यक्तिको नाम अर्कोथरीले लालपुर्जामा, अर्कोथरीले एसएलसीको प्रमाणपत्रमा तथा जन्म र मृत्युसम्बन्धी प्रमाणपत्रमा अर्कोथरी लेख्ने प्रवृत्तिले सरकार र मुस्लिम दुवैपक्षलाई समस्याहरु पर्ने गरेका छन्। तसर्थ, यी कागजहरुमा एकरुपता कायम गरी शुद्ध नाम लेख्नु जरुरी छ।

६) मुस्लिमहरुका लेबास छुट्टाछुट्टै छन् तर मइलपोस-सुरुवालमा मुस्लिम संस्कृति झल्किन्छ। त्यसलाई ग्रहण गरी स्कूलदेखि आफ्नो अनौपचारिक कार्य गर्न तयार पार्न जनजागरण अभियान गराउँदा मइलपोस-सुरुवाललाई नै मुस्लिमहरुको पहिचान बनाउन सकिन्छ।

७) मुस्लिमहरुले संचालन गर्ने संघसंस्था र समस्त समुदायले आफ्ना धार्मिकस्थलहरु जस्तैः मस्जिद, मदरसा, मकतब, ईदगाह, कब्रिस्तान, मजार, करबला, यतिमखाना इत्यादि बनाउनैपर्ने अनिवार्यता छ। यी धार्मिकस्थलहरुको नाममा जग्गा किन्न र लालपुर्जा पाइदैन। हालसम्म व्यक्तिको नाममा लालपुर्जा बनाई किन्ने र त्यसमा यी धार्मिकस्थल बनाउने परम्परा रहिआएको छ। यसले धेरै अप्ठ्यारो सृजना गर्ने गरेको छ। धर्मस्थलहरुका लागि जग्गा किन्ने, घर बनाउने, संरक्षण तथा सम्वर्द्धन गर्ने इत्यादि कुराहरुमा कानुन बनाउनु अत्यावश्यक छ।

(८) मुस्लिम समुदायका लागि प्रत्येक वर्ष श्री ५ को सरकारले हज कमिटी गठन गर्ने गरेको छ। तर, यो हज कमिटीबाट मुस्लिम समुदायलाई झन्झट बढी र फाइदा कम छ। तसर्थ, श्री ५ को सरकारले गृह मन्त्रालय या अन्य कुनै मन्त्रालयअन्तर्गत एउटा हज उमरा शाखा बनायो भने यो बढी व्यवहारिक हुने देखिन्छ। यसबाट श्री ५ को सरकारको आर्थिक र प्रशासनिक दुवै खर्च र दायित्व पनि कम हुनजान्छ र मुस्लिमहरु पनि स्थायी व्यवस्थाका कारण बढी लाभान्वित हुनसक्छन्।

(९) मुस्लिमहरु आफ्ना गैरसरकारी संघसंस्था, पार्टी, मदरसा वा अरु आधुनिक स्कूल खोल्न चाहन्छन् भने श्री ५ को सरकारले त्यससम्बन्धी कानुन बनाउनु पर्दछ र यसमा आपत्ति जनाउनु हुँदैन।

१०) हालको सार्वजनिक बिदा दिने प्रचलनअनुसार मुस्लिम समुदायको लागि कुनै बिदा छैन। बुद्ध धर्मावलम्बीहरुको लागि वर्षमा एक दिनको मात्रै बिदा छ। मुस्लिमहरुलाई आफ्ना महान चाडहरु मनाउन कठिनाई भएको छ। तसर्थ, श्री ५ को सरकारले मुस्लिमहरुलाई कानुनीरुपमा वर्षमा निम्नानुसारको बिदा दिन पर्छ।

- ईदुल फित्रका लागि १ दिन,
- ईद् ज्जोहाका लागि ३ दिन,
  शबेबा रातका लागि १ दिन, र
- मुहम्मद जयन्तीका लागि १ दिन।

११) मुस्लिमहरुको विवाह, पारचाचुक, व्रतबन्ध (अकिका), चाडवाड, र अंशसम्बन्धी धार्मिक चलन नेपालका अरु समुदायभन्दा एकदमै भिन्न छन्। यी विभिन्नताको छोटकरी विवरण निम्न अनुसार छः

- विवाहः विवाह मुख्यरुपमा बाबु, आमा, नातेदारको सहमतिमा हुनेगर्छ। यसमा दुलाहा-दुलहीको अनिवार्य

सहमति धर्म गुरुको प्रत्यक्ष सहभागिता र गाउँ-टोलका ४-५ जना र दुलाहा-दुलही दुवैका नातेदारको सहभागितामा दैनमोहर (Bride-Price) विवाह गर्नु पहिले नै निश्चित गरिन्छ। यो हैसियतअनुरुप हुन्छ। यो रकम सुहागरात (प्रणय मिलनको रात) भन्दा पहिले नै दुलाहाले दुलहीलाई तिरिसक्नुपर्छ। धार्मिक विधिअनुसार गर्ने "निकाह" विवाहमा धार्मिक गुरु (मुल्लामौलाना) ले निकाह पठाउनुभन्दा पहिले नै स्थानीय मदरसा/मस्जिद कमिटीको रोहवरमा एउटा वैवाहिक प्रमाणपत्र तयार पार्छन् र निकाहको सम्पूर्ण धार्मिक प्रक्रिया पूरा भई त्यस प्रमाणपत्रमा दुलाहा-दुलही, गवाह (साक्षी), आमाबाबु र कमिटीका सदस्यहरुको हस्ताक्षर गराइन्छ। कति ठाउँमा त दाइजोका लागि दिइएका सामानहरुको सबै अदत छुट्याई सामग्रीहरुको एउटा लगत पनि बनाई हस्ताक्षर गराइन्छ। यी प्रमाणपत्रहरुको एक प्रति दुलाहालाई र अर्को प्रति दुलहीलाई दिइन्छ। यी प्रमाणपत्रहरुलाई मुस्लिम समुदायले मान्यता दिएता पनि धेरैजसो मुस्लिम परिवारमा दैनमोहरको रकम दुलाहाले तिर्दैनन्, तलाक (छोडपत्र) दिने बेलासम्म द्वन्द्व भइरहन्छ। तर, मर्नुभन्दा पहिले नै सो रकम तिर्नु अनिवार्य शर्त हो। धार्मिक प्रयोजनअनुसार दैनमोहरको रकम दुलहीले माफ गरेमा दुलाहाले तिर्नुपर्दैन। तर, विवाहभन्दा पहिले दिइएको सामग्री तलाकपूर्व दुलहीकै पेवाको धन हुनुपर्नेमा धेरैजसोले दाजुभाइको अंशवण्डामा त्यसलाई पनि अंशमा गाभ्छन्। यसले पनि गृह कलह बढाउन मद्दत गर्छ। धार्मिक प्रयोजनअनुसार बाबुआमाको सगोलको सम्पूर्ण चल/अचल सम्पत्तिमा तीन बराबर अंश लगाई एक भाग छोरीहरुको अंश र दुई भाग छोराहरुको अंश दिनैपर्छ। तर, धेरैजसोले यस्तो गरेको पाइदैन। यो पनि द्वन्द्वको कारण हो। विवाहसम्बन्धी विद्यमान नेपाली कानुनले मुस्लिमहरुका यस्ता द्वन्द्व समाधान हुँदैन।

- तलाकसम्बन्धी धार्मिक प्रयोजन अनुसार, केटा वा केटीले स्थानीय समाजका मानिसहरुका अगाडि, उनीहरुले सुन्ने गरी रित पुऱ्याएर (जथाभावी होइन) ३ पटक तलाक शब्द भन्यो भने तलाक दिएको ठहरिन्छ र पुरोहितले त्यसको तलाकनामा लेख्छन्। त्यस्तो तलाकनामा र तलाकको प्रथालाई न्यायालय र सरकारले मान्यता दिँदैन किनभने यससम्बन्धी कानुन नै छैन। तसर्थ, यसलाई मान्यता दिनुपर्दछ।
- अकिका (ब्रतबन्ध): छोरा वा छोरीलाई आठ वर्षको उमेरसम्म मुस्लिम प्रथामा ल्याउन अकिका गर्नु जरुरी हुन्छ। छोरीलाई एउटा खसी र छोरालाई दुईवटा खसी काटेर (जबह गरेर) मासु बाँढ्ने या आफ्नो नातेदार, सम्प्रदाय इष्टमित्रलाई ख्वाउने कार्य गर्नुपर्छ। छोराको ब्रतबन्धलाई "खतना" गर्ने भनिन्छ। त्यसमा मुस्लिमहरुको हजामले केटा मान्छेको लिंगको टुप्पोको छाला काट्छन्। मुस्लिम समुदायले आफ्नो तिथिअनुसारको अकिका निर्धारण गर्दा एकादशी पऱ्यो भने खसी काट्न नदिँदा समस्या पर्छ। तसर्थ, कानुनले यो समस्या सुल्झाउनसक्छ।
- मुस्लिमहरुको चाड बकरइद (इदुल अजहा) तीन दिन मनाइन्छ। त्यसबेला खसी, भेंडा, राँगा काट्ने गरिन्छ। यदि एकादशी पऱ्यो भने उक्त कार्यमा समस्या पर्छ। यससम्बन्धी कानुनी संरक्षण छैन।
- "मोहर्रम" चाडमा ताजिया निकाल्ने, कराबलाको मैदानमा गएर आफ्ना केही धार्मिक क्रियाकलाप गर्ने बेला कानुनको अभावमा अप्ठ्यारो पर्छ।
- मजार र उर्स गर्न, बनाउन मेला लगाउन पनि गाह्रो पर्छ।

समग्रमा, केही कुराहरु यस्ता पनि छन् कि नेपाली मुस्लिम समुदायले आफ्नो धार्मिकरुपले क्रियाकलाप गर्दा छुट्टै पहिचान बनाई राख्न अनिवार्य छ, बाध्यता छ। यसको कानुनी उपचार हुनु जरुरी छ। तसर्थ, यदि एउटा मूलप्रवाहको नेपाली समाज निर्माण गर्ने हो भने मुस्लिमहरुको पहिचान कायम गराउन माथि उल्लिखित केही कुराहरुको कानुनी उपचार जरुरी छ। यस्तो कानुन बनाउँदा अरुहरुको नोक्सानी हुँदैन र सरकारलाई पनि सजिलो हुन्छ। तसर्थ, मुस्लिमहरु वा मुस्लिम समुदायले सरकारसँग एउटै माग राख्छन्- त्यो हो कानुन। यस्तो कानुन जसले मुस्लिमहरुको जीवनदेखि मरणसम्म गर्ने क्रियाकलाप (अकिका, निकाह, तलाक, धर्मस्थल निर्माण, विदा इत्यादि) लाई सुव्यवस्थित गर्न सकोस्। त्यही कानुनअनुसार, मुस्लिम समुदाय पनि अरुसँग काँधमा काँध मिलाए बस्न सकुन् र विकास प्रक्रियामा सहभागी बनुन्।

**निष्कर्ष**

नेपालका मुस्लिम समुदाय पनि नेपाली नै हुन्। उनीहरु पनि कानुन बनाउने, शान्तिपूर्वक बस्ने, कानुनअनुसार हिड्ने, काम गर्ने इच्छा राख्छन्। उनीहरुको मौलिक हक र जीवनयापन गर्ने अधिकार छ। तसर्थ, विकासको मूलप्रवाहमा मुस्लिमहरुको प्रभावकारी सहभागिता जुटाउनु मुस्लिमलगायत सबै पक्ष (सरकारी, गैरसरकारी, अरु समुदाय) को समान दायित्व हो। मुस्लिमहरुलाई पनि नेपाली समाजको निर्माणमा सक्रियरुपमा सहभागी गराउनु सबै पक्षको समान दायित्व हो। मुस्लिमलाई विशेष कानुनको अनिवार्यताको नाममा अरु धार्मिक समुदायलाई काखा-पाखा लगाउनु भने हुँदैन। सबैको लागि एउटै कानुन बनाउन सकिन्छ। यो गाह्रो कार्य होइन। त्यस्तो कानुन बनाउन धेरै बुद्धिमत्तापूर्ण कार्य र विवेकको आवश्यकता भने अवश्य पर्दछ तर असम्भव छैन। यदि नेपाललाई सुन्दर, शान्त, विशाल, स्वतन्त्र, सार्वभौमसत्ता सम्पन्न र आधुनिक प्रजातान्त्रिक राज्य बनाउने हो भने धर्म निरपेक्ष राज्यको संरचना अपनाउनु र त्यसअनुरुपको संविधान तथा कानुन बनाई सबैलाई विकासको मूल प्रवाहमा डोहोऱ्याउनु आवश्यक छ।

# यातना विरुद्धको महासन्धि र हाम्रा प्रतिवेदनहरु–३

**यसअघिका दुई अंकमा हामीले सरकारको तर्फबाट समितिमा प्रस्तुत प्रारम्भिक तथा संयुक्त आवधिक प्रतिवेदनबारे सामान्य चर्चा गरेका थियौं । यस अंकमा नागरिक समाजका तर्फबाट तयार गरिएको यातनाविरुद्धको महासन्धिको वैकल्पिक प्रतिवेदनको सामान्य चर्चा गर्दै त्यसको सार प्रस्तुत गरिएको छ ।**

नागरिक समाजका तर्फबाट ०६१ पुस ४ का दिन नेपालको राज्य तहबाट यातनाविरुद्धको महासन्धिमा संयुक्त राष्ट्रसंघीय यातनाविरुद्धको समितिमा प्रस्तुत गरिएको यो महासन्धिको दोस्रो, तेस्रो र चौथो (संयुक्त) आवधिक प्रतिवेदनउपर तयार गरिएको वैकल्पिक प्रतिवेदन सार्वजनिक गरियो। मानवअधिकार सन्धि अनुगमन समन्वय समितिअन्तर्गत यातनापीडित सरोकार केन्द्र (सिभिक्ट) को संयोजनमा उक्त प्रतिवेदन तयार गरिएको थियो। यसमा सन् १९९२ देखि २००४ सम्मको अवधिमा यातनाविरुद्धको महासन्धिको कार्यान्वयनका सम्बन्धमा भएको क्रियाकलापमा रहेका उतारचढावको प्रवृत्तिका बारेमा जानकारी समेट्ने प्रयास भएको छ। यो प्रतिवेदन सरकारबाट प्रस्तुत प्रतिवेदनको प्रतिवाद वा खण्डन नभएर यो प्रतिवेदनमा छुटाइएका, आवश्यकताअनुसार प्राथमिकतापूर्वक उठाइनपर्ने विषय, त्यसो नगरिएका पक्ष समेट्ने परिपूरक अभिलेखका रुपमा रहेको छ। यो प्रतिवेदन तयार गर्दा नेपालका विभिन्न स्थान, पोखरा, नेपालगञ्ज, विराटनगर र काठमाडौंमा परामर्श कार्यक्रम आयोजना गरेर सकेसम्म जनस्तरीय सरोकार समेट्ने जमर्को गरिएको छ। यसर्थ, यो दस्तावेज मानवअधिकार संस्थामार्फत् व्यक्त भएको नेपाली जनताको आवाज पनि हो।

**प्रतिवेदनमा समेटिएका प्रमुख विषय**

**सामाजिक–राजनीतिक सन्दर्भ**

भौगोलिक, जातीय तथा अन्य कुरामा विविधतायुक्त, संयुक्त राष्ट्रसंघको सदस्य, नेपालमा यस अवधिमा बहुदलीय प्रजातन्त्रको अभ्यास भए पनि भ्रष्टाचार, नातावाद, कृपावाद, शासनमा एकलवादी प्रवृत्ति हावी रहेकाले निमुखा, गरिब र राजनीतिक, जातीय र भाषिक अल्पसंख्यकहरु अन्यायका शिकार भए।

यो अवधिमा यहाँको औपचारिक न्याय प्रणालीको मूल प्रवाह प्रतिकात्मक पद्धतिमै आधारित रह्यो र यसले सुधारमूलक उपायका साथ पुनर्लाभात्मक अभिमुखीकरण लिन सकेन। यातना र अन्य स्वरुपका दुर्व्यवहारहरु राजनीतिक विपक्षी, अल्पसंख्यक तथा निम्छरा वर्गका मानिसहरुलाई सत्ताधारीको हालीमुहाली साकार गराउनका लागि सताउने माध्यमका रुपमा प्रयोग भए।

सन् १९९६ मा नेपाल कम्युनिष्ट पार्टी (माओवादी) ले "जनयुद्ध" का नाममा हिंसात्मक विद्रोह थालेपछि सरकारी सुरक्षाकर्मी र माओवादी कार्यकर्ता दुवैतिरबाट मानवअधिकारको हनन र ज्यादति अपूर्व र अनपेक्षित मात्रामा बढ्यो। यसबीचमा नेपाल संसारभरमै मानिस बेपत्ता पार्नेमा पहिलो हुनपुग्यो भने मानवअधिकारका अन्य स्वरुपमा हननका मात्रात्मक र प्रवृत्तिगत वृद्धिले समाजलाई पूरै आतंकित पार्‍यो। संसदको विघटन र संकटकालको घोषणापछि नेपाल अघोषित

> मूल्य–मान्यताको तीव्र संक्रमणमा रहेको नेपाली समाजमा परम्परागत मूल्य र मानवअधिकारका मूल्य–मान्यता एक–आपसमा टकराएका छन्। समाजमा परम्परागत मूल्य र कट्टरवादी सोच हावी छ। पुरुषप्रधान सामाजिक संरचनाले महिलालाई यातना तथा अमानवीय व्यवहारलगायत् सबै किसिमका हिंसाले बढी पीडित पारेको छ।

न्यायपालिकाले यातनालाई रोक्नका लागि कानुनको मर्यादा क्रममा अन्तर्राष्ट्रिय अध्यालेखहरू कहाँ पर्छन् भनेर स्पष्ट दृष्टिकोण दिन सकेको छैन। यसबाट अदालती प्रणालीको लाभ पीडकले उठाइरहेको छ। यातनाको रोकथाम तथा पीडितलाई न्याय दिने गरी न्यायपालिकाले तालिम, कार्यगोष्ठी र छलफलमा ल्याउने गरेको छैन। यसमा न्यायपालिकाले स्पष्टता कायम गर्नु आवश्यक छ।

---

पक्राउ भई यातनाको सम्भावित खतरामा रहेको व्यक्तिका परिवार र कानुनी सल्लाहकारको पक्राउको जानकारी दिने व्यवस्था छैन। हिरासत व्यवस्थापन र मानवोचित व्यवहारको प्रत्याभूतिका लागि व्यवस्थापकीय नियम वा मार्गदर्शन छैनन्। प्रहरी ऐनका व्यवस्थाहरू अस्पष्ट र अपर्याप्त छन्। यसैगरी थुनछेकसम्बन्धी नीति-नियमको अनुगमन गर्ने कार्य भएको छैन। यसका लागि सक्षम आयोग बनाई अनुगमन र नियमनको जिम्मा लिइनुपर्छ।

सैनिक शासनको फन्दामा पर्‍यो।

संविधानले अदालतलाई स्वतन्त्र न्यायालय बनाए पनि अदालतमाथि अनेक कार्यपालिकीय अंकुश रहे र अदालतमाथि नियन्त्रण राख्ने सोच कायम रह्यो। तीसभन्दा बढी ऐनले अदालतको क्षेत्राधिकार तोक्ने अख्तियारी सरकारमा राखियो। कानुनले अख्तियारी दिएकै अवस्थामा पनि रुढीग्रस्त मानसिकताका कारण अदालतबाट आफूलाई सरकारी अंग ठानेर चाहिँदो मात्रामा प्रगतिशील पाइला चालिएनन्। यातनाका बारेमा प्रश्न उठ्दा प्रहरीले कर्तव्य पालनका सिलसिलामा यातना दिनु जायजै कुरा हुन्छ र मानवअधिकार पराई अवधारणा हो भन्ने मानसिकताबाट न्यायाधीशहरुले मानवअधिकारका अध्यालेखहरु र मापदण्डहरुको उपेक्षा पनि गरे।

पूर्वीय र पाश्चात्य मूल्यको मिसावटका रुपमा विकास भएको नेपालको न्याय प्रणालीमा लिच्छवि, मल्ल र मल्लोत्तर कालमा यातनालाई वैधानिक कार्यका रुपमा मान्यता दिइएको र ०२० सालतिर आएर यातनाको वैधानिकता समाप्त गरिए पनि त्यो कागजमा सीमित भयो र यस अवधिसम्म व्यवहारमा यातना कायमै रह्यो। यातनाको नियमित र नियोजित अभ्यासविरुद्ध लड्ने राजनीतिक इच्छाशक्तिको अभाव खड्कियो।

#### यातनाका किसिम

प्रतिवेदनले समेटेको अवधिमा पैतालामा पिट्ने, मनपरी कुटपिट गर्ने, बिजुलीको झड्का, आँखामा पट्टी बाँध्ने, बेलना पेल्ने, चुरोटको ठुटाले पोल्ने, कुखुरा बनाउनेजस्ता यातनाका किसिमहरु बहुप्रचलित रहे। पशु, किराकिरी, सुई यातनाका साधनका रुपमा प्रयोग गरिए। धम्की, अन्नपानीबाट वञ्चित गर्ने, फोहर खुवाउन, जनै झिक्न लगाउने, लामो अवधि एकान्तमा राख्ने, कालकोठरीमा राख्ने र चर्को ध्वनि सुनाउनेजस्ता मनोवैज्ञानिक असर पार्ने यातनाका अन्य तरिका हुन्।

मूल्य-मान्यताको तीव्र संक्रमणमा रहेको नेपाली समाजमा परम्परागत मूल्य र मानवअधिकारका मूल्य-मान्यता एक-आपसमा टकराएका छन्। समाजमा परम्परागत मूल्य र कट्टरवादी सोच हावी छ। पुरुषप्रधान सामाजिक संरचनाले महिलालाई यातना तथा अमानवीय व्यवहारलगायत् सबै किसिमका हिंसाले बढी पीडित पारेको छ।

#### नागरिक समाज र गैरसरकारी क्षेत्रका मुख्य सरोकार र सुझाव

यो वैकल्पिक प्रतिवेदनमा नेपालमा विद्यमान यातनासम्बन्धी विषयवस्तु र समस्याको सिंगो झलक छैन र त्यस्तो झलक उतार्नु उति सम्भव पनि छैन। यस प्रतिवेदनमा महासन्धिको कार्यान्वयनको प्रसंगका मुख्य प्रवृत्ति, सरोकार र सम्भाव्य सुधारका लागि आवश्यक सुझाव मात्र समेटिएका छन्।

१. नेपालको राष्ट्रिय कानुनले यातनाको परिभाषामा महासन्धिको धारा १ अनुसारको यातनाको परिभाषाको अभिप्राय ग्रहण गरेको छैन, अतः पारिभाषिक सुस्पष्टताको खाँचो छ।
२. प्रचलित केही कानुनका प्रावधान विशेषतः आतंककारी तथा विध्वंसात्मक कार्य (नियन्त्रण तथा सजाय) ऐन २०५८ का दफा ५, ९, ११, १३, १५, १९, २० र यसका उत्तराधिकारी अध्यादेशहरु, केही सार्वजनिक (अपराध र सजाय) ऐन २०२७ को दफा ३ र प्रहरी ऐनको दफा ९ ले सरकारी सुरक्षाकर्मीले गर्ने यातनाको नियमित प्रयोगलाई अरु घनिभूत र संस्थागत पार्ने साधनको काम गरेका छन्।
३. यातनासम्बन्धी क्षतिपूर्ति ऐन २०५३ सरकारलाई जस दिलाउने कानुन भए पनि क्षतिपूर्तिसम्बन्धी समस्यालाई सम्बोधन गर्न पर्याप्त सक्षम छैन। यसैले महासन्धिको भावनाअनुरुप यसका दफा ३.२, ५.१, ६.२ र १० लाई परिमार्जन गर्न आवश्यक छ।
४. मानवअधिकार प्रवर्द्धन केन्द्र, गृह मन्त्रालय, प्रहरी प्रधान कार्यालय,

शाही नेपाली सेना र सशस्त्र प्रहरीका मानवअधिकार संलसम्बन्धी सबै जानकारी सार्वजनिक गर्नुपर्छ, यिनीहरूले खुल्ला र पारदर्शीरुपमा काम गर्नुपर्छ।

५. न्यायपालिकाले यातनालाई रोक्नका लागि कानुनको मर्यादा क्रममा अन्तर्राष्ट्रिय अध्यालेखहरु कहाँ पर्छन् भनेर स्पष्ट दृष्टिकोण दिन सकेको छैन। यसबाट अदालती प्रणालीको लाभ पीडकले उठाइरहेको छ। यातनाको रोकथाम तथा पीडितलाई न्याय दिने गरी न्यायपालिकाले तालिम, कार्यगोष्ठी र छलफलमा ल्याउने गरेको छैन। यसमा न्यायपालिकाले स्पष्टता कायम गर्नु आवश्यक छ।

६. महासन्धिको धारा ३ को परिपूर्तिका लागि शरणार्थीसम्बन्धी १९५१ को महासन्धि र अतिरिक्त प्रोटोकलमा नेपालले सम्मिलन गर्नुपर्छ। भुटानी शरणार्थीको समस्या सम्बोधन गर्न अग्रदर्शी र अग्रगामी कार्यक्रम तय गर्न आवश्यक छ।

७. प्रस्तावित फौजदारी अपराधसंहितामा समावेश गरिएको यातनाको परिभाषाको पनि महासन्धिको परिभाषासँग संगति छैन। यातनाको उद्योग, मतियारी र सहभागितालाई पनि उचित दण्ड हुन गरी परिमार्जन गरी कम्तिमा पाँचदेखि १० वर्षको कैद सजाय हुनेगरी यातनालाई फौजदारी अपराध घोषित गरिनुपर्छ।

८. कानुन कार्यान्वयन गर्नुपर्ने र न्यायप्रणालीको अंगका रुपमा काम गर्नुपर्ने कर्मचारीका शिक्षा र तालिमका पाठ्यक्रम र कार्यक्रममा यातनाको निषिद्धता पर्याप्त समेटिएको छैन र यसतर्फको संवेदनशीलतालाई जोड दिइएको छैन। प्रभावकारी कार्यक्रम आवश्यक छ।

९. माध्यमिक तथा उच्च शिक्षामा समेत यातनाको निषिद्धतालाई समेटिएको छैन। यसका लागि मानव मर्यादाको सम्मान गर्नेगरी शैक्षिक संस्थामा प्रभावकारी कार्यक्रम लागू गर्नुपर्छ।

१०. पक्राउ भई यातनाको सम्भावित खतरामा रहेको व्यक्तिका परिवार र कानुनी सल्लाहकारको पक्राउको जानकारी दिने व्यवस्था छैन। हिरासत व्यवस्थापन र मानवोचित व्यवहारको प्रत्याभूतिका लागि व्यवस्थापकीय नियम वा मार्गदर्शन छैनन्। प्रहरी ऐनका व्यवस्थाहरु अस्पष्ट र अपर्याप्त छन्। यसैगरी थुनछेकसम्बन्धी नीति-नियमको अनुगमन गर्ने कार्य भएको छैन। यसका लागि सक्षम आयोग बनाई अनुगमन र नियमनको जिम्मा लिइनुपर्छ।

११. यातनाको उजुरी सुन्ने र अनुसन्धान गर्ने निकाय नभएकाले यस्तो संयन्त्रको स्थापना हुनुपर्छ। मानवअधिकार आयोगले यस्तो संयन्त्र स्थापना गरी सञ्चालनमा ल्याउनुपर्छ।

१२. यातनासम्बन्धी क्षतिपूर्ति ऐन २०५३ अनुसार, यातनाको क्षतिपूर्ति निर्धारण गर्दा अदालतबाट अत्यन्त न्यून राशी तोकिदिने परम्परा बसेको छ। तथापि यस्तै क्षतिपूर्ति पनि पीडितले पाउन सकेका छैनन्। अन्तिम किनारा लागेका मुद्दामा पनि रकमको अभाव जनाएर सरकारले क्षतिपूर्ति नदिई पीडितलाई पुनर्पीडनको शिकार बनाएको छ। यो कार्य तत्काल रोकी यथाशीघ्र क्षतिपूर्ति दिने परिपाटी अंगाल्न आवश्यक छ।

१३. प्रहरीमा भएको साविती बयानको थुनछेक तथा पुर्पक्षमा प्रमाण ग्राह्यताका बारेमा अदालतले एकै दृष्टिकोण राखेको छैन। नेपालको न्याय प्रणाली प्रतिद्वन्द्वात्मक भएकाले साविती बयानलाई दुवै प्रयोजनमा अग्राह्य गर्ने बहिष्कारी (एक्सक्लुजनरी) नियम स्थापित गर्नुपर्छ। साथै, अपराध अनुसन्धानको वैज्ञानिक पद्धति प्रवर्द्धन गर्न उपकरण र श्रोतसाधन बढाइनुपर्छ।

१४. नेपालले बोक्सी, घरेलु हिंसा, विद्यालयमा कुटपिट र दुर्व्यवहारजस्ता अनेक समस्या झेलिरहेको छ। यस्ता सामाजिक हिंसाको अन्त्यका लागि उपयुक्त कार्यक्रम कार्यान्वयन गर्नुपर्छ।

१५. महासन्धिको वास्तविक कार्यान्वयनका लागि पवित्र राजनीतिक इच्छा शक्तिसाथ सरकारले निम्न कुरा गर्नुपर्छ:

क. यातनाको अन्त्यका लागि गैरसरकारी संस्थासँग साझेदारी गर्नुपर्छ।

ख. महासन्धिको धारा २१ बमोजिम अन्य राज्यपक्षले नेपालविरुद्ध सञ्चार गर्ने र त्यसमा समितिले छानबिन गर्ने सक्षमता रहने घोषणा गर्नुपर्छ।

ग. महासन्धिको धारा २२ अनुसार व्यक्ति वा व्यक्तिको तर्फबाट समितिमा सञ्चार पठाउने र समितिले त्यसउपर विचार गर्नसक्ने क्षमता राख्नेगरी समितिको सक्षमताको घोषणा गर्नुपर्छ। यसका लागि समितिले मागेको जानकारी उपलब्ध गराउने तत्परता पनि घोषित गर्नुपर्छ।

घ. महासन्धिअन्तर्गतको ऐच्छिक प्रोटोकलमा हस्ताक्षर गरी पक्ष बन्नुपर्छ।

ङ. यातनालाई मानवताविरुद्धको अपराध घोषित गर्दै अन्तर्राष्ट्रिय फौजदारी अदालतसम्बन्धी रोम विधानमा हस्ताक्षर गरी यसको पक्ष बन्नुपर्छ।

च अन्तर्राष्ट्रिय मानवीय कानुनका रुपमा रहेका जेनेभा महासन्धिको दोश्रो प्रोटोकलमा हस्ताक्षर र सम्मिलन गरी गैरअन्तर्राष्ट्रिय चरित्रको सशस्त्र द्वन्द्वका पीडितको संरक्षण गर्ने चाह व्यक्त गर्नुपर्छ। ●

# अभिव्यक्ति स्वतन्त्रताको हननले उब्जाएको प्रश्न

**प्रकाश ज्ञवाली**

सशस्त्र द्वन्द्वको अवस्थामा सबैभन्दा अवरुद्ध हुन्छ- अभिव्यक्ति स्वतन्त्रता। चाहे त्यो निरंकुशतावाट प्रेरित होस् या अधिनायकवादको दुष्चक्रबाट उम्रिएको। अरुका विचार बन्द गर्न उद्दतहरु जहिले पनि मुख थुन्न सक्रिय हुने गर्छन्। तर पनि आफ्ना विचार र अनुभूति व्यक्त गर्नबाट दीर्घकालसम्म कसैले रोक्न सक्दैन। मान्छेलाई मान्छे बनाउने विचारले हो, विचारबाट निर्देशित अभिव्यक्तिले हो। यसको हननमा सम्झौता हुन सक्दैन। मानवअधिकार संस्कृतिको कुरा गर्दा, अभिव्यक्ति स्वतन्त्रताको महत्व कम आँक्नु मानवअधिकारकै व्याख्यामा भ्रम सृजना गर्नुजस्तै हो। त्यस्तो भ्रम केवल मानवअधिकारको सिद्धान्तका गफ गरेर मेटिन सक्दैन, यो त व्यवहारमा देखिने सवाल हो। अभिव्यक्ति स्वतन्त्रता हनन भएको भौतिक प्रमाण कुनै हतियार समर्पण गरेजस्तो सजिलो नहोला तर पनि समाजले त्यो कुरा बोलिरहेको हुन्छ। मानव समाज हतियारलाई अभिव्यक्तिको प्रतीक बनाउन सक्दैन। मानवताको हिसाब राख्नेहरु जडतामा विश्वास गर्न सक्दैनन्। त्यस्तो विश्वास त विचार अभिव्यक्ति र लेखनको स्वतन्त्रतामा देखिएको हुन्छ।

यस्तो कुरा गर्दा, स्वतन्त्रता विरोधीहरुको सधैं एउटै तर्क रहने गरेको पाइन्छ- जसले जे मन लाग्यो त्यही अभिव्यक्त गर्न पाउने छूट छैन। यस्तो तर्क विचार अभिव्यक्ति स्वतन्त्रताको वकालत गर्नेहरुलाई तर्साउने हतियार हो। अभिव्यक्ति स्वतन्त्रता बुझेको व्यक्तिले मुखमा आएको बोल्नुलाई स्वतन्त्रताको परिभाषाभित्र कदापि राख्दैन। यसका पनि निश्चित तरिका, विधि-विधान र नियमहरु छन्। मान्छेका विचार, जसले वास्तवमै मानवताका परिधिभित्र रहेर, मानवअधिकारका आधारभूत सिद्धान्तहरुको सीमाभित्र रहेर स्वतन्त्रता खोजिरहेका हुन्छन्, ती हुन्- स्वतन्त्रताका कुरा। अभिव्यक्ति स्वतन्त्रता कसैलाई आलोचना गर्न हुनसक्छ तर गालीगलौजलाई निरपेक्षरुपमा अभिव्यक्ति स्वतन्त्रताको खोल ओढाउन सकिदैन। यही परिस्थितिमा लुकेको हुन्छ- अभिव्यक्ति स्वतन्त्रता र छाडा संस्कृतिबीचको भिन्नता। छाडा संस्कृतिको पर्याय बन्न सक्दैन, अभिव्यक्ति स्वतन्त्रता। अनुशासनहीनताको प्रतीक पनि होइन, यो। मान्छे मुख बाँधिएको मूर्तिझैं भएर बस्न सक्दैन। अमूर्त हुन सक्दैन। मूर्त हुनुपर्छ, यसका क्रियाकलाप। त्यस्तो पारदर्शितामा अडेको हुन्छ, अभिव्यक्ति स्वतन्त्रता।

अभिव्यक्ति स्वतन्त्रता कुनै कुरा अभिव्यक्त गर्न दिने कोरा स्वतन्त्रता नभएर मानवीय मूल्य, मान्यता र अधिकारप्रदत्त स्वतन्त्रताको समष्टि हो। मानवको आधारभूत अधिकारको सवाल हो। मान्छेलाई बोल्न दिनु मात्र अभिव्यक्ति स्वतन्त्रता होइन, यसभित्र समग्र मानवअधिकारको मान्यता संग्रहित छ।

स्वतन्त्रताको कुरा गर्न सजिलो छ तर त्यसलाई अनुशासित, मर्यादित र निश्चित मूल्य-मान्यताका परीधिमा उपभोग गर्न मुस्किल छ। यस्तै मुस्किलले गर्दा कैयौं समाजमा अभिव्यक्ति स्वतन्त्रताको अपव्याख्या गरिएको छ। कतिपय समाजमा अभिव्यक्ति स्वतन्त्रतामाथि भोटे ताल्चा लगाइएको छ। कतिपय ठाउँमा यस्तो मुस्किलले आत्मघात गरेको छ।

आत्मघातको खतरा जहिले पनि हुन्छ, सीमा निर्धारण गरिएन भने। स्वतन्त्रताका सीमा र परीधि नाघ्न खोज्दा सबभन्दा पहिले शिकार हुन्छ, विचार तथा अभिव्यक्तिको स्वतन्त्रता। सबैभन्दा आधारभूत अधिकार सबैभन्दा पहिलो आक्रमणको निशाना बन्नेगर्छ, मानवअधिकार विरोधी व्यवहारको।

यस्तै मानवअधिकारविरोधी व्यवहार विरुद्ध केन्द्रित हुनुपर्छ अभिव्यक्ति स्वतन्त्रताको लक्ष्य। प्रेस स्वतन्त्रताका लागि मात्र अभिव्यक्ति स्वतन्त्रताको आन्दोलन चलाउने हो भने त्यसले बृहत्तर जनताका आवाज समेट्न सक्दैन। त्यसकारण आम जनता, अझ खासगरी वाणीविहीन जनताका वाणीहरुलाई केन्द्र बनाउनुपर्छ- अभिव्यक्ति स्वतन्त्रताको आन्दोलनले। यस्तो आन्दोलन जो सदैव जनताको बीचबाट हुर्कियोस्, जनताकै नेतृत्वमा अगाडि बढोस् र बृहत्तर प्रजातान्त्रिक अधिकार वा बृहत्तर मानवअधिकार अभियानको स्वरुप ग्रहण गरोस्।

मानवका आधारभूत आवश्यकताका आ-आफ्नै तर्क र व्याख्याहरु छन्। गास, बास, कपास, शिक्षा, स्वास्थ्य र रोजगारलाई मात्र आधारभूत आवश्यकता मान्ने परम्परावादी मान्यताले परिवर्तनलाई प्राथमिकता दिँदैन। यी आवश्यकताहरु निरंकुशतामा पनि पुऱ्याइएको प्रचार गर्न सकिन्छ। त्यसले व्यवहारमा मानवअधिकार आत्मसात गर्न सक्दैन। मानवले मानव भएका नाताले प्राप्त गर्नुपर्ने आधारभूत अधिकार वा आधारभूत आवश्यकताको परिपूर्ति अभिव्यक्ति स्वतन्त्रताबाट शुरु हुन्छ भन्दा अत्युक्ति नहोला। मुखमा ताल्चा लगाएर गास, बास, कपासको गफ गर्नुको औचित्य के ? मान्छेका हातखुट्टा बाँधेर रोजगारीको कुरा गर्नुको अर्थ के ? शिक्षा ज्ञान आर्जन गर्ने श्रोत हो। केवल किताबमाथि आँखा राखेर ज्ञान प्राप्त हुने होइन, यो त जानेको कुरा अभिव्यक्त गर्ने कला पनि हो। अनुभव आदान-प्रदान गर्ने र सही-बेठिक छुट्याउने सीप पनि हो।

अभिव्यक्ति स्वतन्त्रतालाई मानवअधिकार र प्रजातान्त्रिक परिपाटीको मुटु मान्ने गरिन्छ, जसद्वारा रक्तसञ्चार होओस्। त्यस्तो रक्तसञ्चार हरेक तह, तप्का र वर्गका व्यक्तिहरुमा होओस् न कि केवल शिक्षित, पहुँचवाला र हुनेखानेहरुमा मात्र। टोमस जेफर्सनले भनेझैं जीवन, स्वतन्त्रता र खुशीको चाहना वा खोजी आपसमा अन्योन्याश्रित छन् र तिनीहरुको समग्र अवलम्बन प्रजातन्त्रको सार हो। यस्तै सार निहीत छ, अभिव्यक्ति स्वतन्त्रता र मानवअधिकार एवम् प्रजातान्त्रिक मूल्य-मान्यताबीच। एउटाको हरण अर्काको पूरक हुन सक्दैन। एउटामाथिको आक्रमण अर्काको जयजयकार नहुनसक्छ।

तर, अहिले यस्तै आक्रमण भइरहेको छ, अभिव्यक्ति स्वतन्त्रतामाथि। यस्तो आक्रमणलाई सबै स्वतन्त्रताहरुको हननका लागि आधार बनाइएको छ। अभिव्यक्ति स्वतन्त्रतामाथि अंकुश लगाएर मानवअधिकार हननको श्रृंखला अगाडि बढाउने दुष्प्रयत्न गरिएको हुनसक्छ। कारणहरु जे भए पनि स्वतन्त्रतालाई आफूमा खिच्ने निरंकुश प्रयास हो, यस्तो आक्रमण। त्यही निरंकुशतामा यस्ता क्रियाकलापको कारण निहीत छ।

●

# मानवअधिकार सन्धिहरु किन भएन कार्यान्वयन ?

जीवन्त वाग्ले

नेपालले अहिलेसम्म मानव अधिकारका १६ वटा महासन्धि तथा अनुबन्ध अनुमोदन गरिसकेको छ। मानवअधिकारका विभिन्न संयन्त्रहरुमा राज्यले धेरै अगाडिदेखि नै पक्षराष्ट्र भए पनि ती संयन्त्रहरुको अपेक्षाकृत पालना हुन सकेको छैन।

नेपालले सन् १९५५ मा संयुक्त राष्ट्रसंघको सदस्यता लिएपछि २५ सेप्टेम्बर १९२६ मा पारित भएको दासत्व महासन्धि, यसै सन्धिलाई संशोधन गर्ने प्रोटोकल पूरक महासन्धि र दासत्व, दास व्यापार र दासत्व समान संस्था र अभ्यासहरुको उन्मूलनसम्बन्धी पूरक महासन्धि गरी पहिलो पटक सन् ७ जनवरी १९६३ मा तीनवटा महासन्धिमा नेपालले सम्मिलन जनायो र अनुमोदन गर्ने क्रमले निरन्तरता पायो। पञ्चायती व्यवस्थामा आठवटा महासन्धिमा सम्मिलन जनाइएको थियो। यही प्रक्रियाले निरन्तरता पाउनेक्रममा प्रजातन्त्रको पुनर्बहालीपछि मात्र आठवटा थप ठूला महासन्धिमा नेपालले हस्ताक्षर गरेको थियो। यसरी विभिन्न मानवअधिकार संयन्त्रहरुमा पक्षराष्ट्र बनी मानवअधिकारको प्रत्याभूति गर्ने प्रतिवद्धता जनाइएको थियो। तर, मानवअधिकार उल्लंघन गर्ने राज्यको प्रवृत्ति हेर्दा, राज्यलाई मानवअधिकार संयन्त्रको अनुमोदनसम्बन्धी ज्ञान नै नभएको हो कि भन्ने आशंका उब्जन्छ भन्नु अत्युक्ति नहोला।

यता राज्यको संविधान नमान्ने भन्दै "जनयुद्ध" को नाममा सशस्त्र युद्ध गर्दै आएको माओवादीले अन्तर्राष्ट्रिय मानवीय कानूनको पालना गर्ने प्रतिवद्धता पटक-पटक व्यक्त गरे पनि सर्वसाधारणहरुमाथिको ज्यादतिका घटनाबाट उसले पनि अन्तर्राष्ट्रिय मानवअधिकार कानुनहरुको उल्लंघन गरेको प्रष्टिन्छ। यद्यपि यस्ता अन्तर्राष्ट्रिय मानवअधिकार संयन्त्रहरु सिद्धान्ततः राज्यका लागि मात्र बाध्यकारी हुन्छन्। अर्कातर्फ, खासगरी आन्तरिक सशस्त्र द्वन्द्वरत पक्षहरुलाई उत्तिकैरुपमा बाध्यकारी हुने अन्तर्राष्ट्रिय मानवीय कानुनको राज्य र माओवादी दुवै पक्षबाट व्यापक उल्लंघन भएको छ।

राज्यले आफू पक्षराष्ट्र बनेका केही प्रमुख मानवअधिकार दस्तावेजहरु कार्यान्वयन भए-नभएको अवस्थाबारे संयुक्त राष्ट्रसंघसमक्ष तोकिएको समयमा आवधिक प्रतिवेदनहरु बुझाउनुपर्छ। तर, हालसम्म राज्यले तोकिएको समयमा प्रतिवेदन बुझाएको छैन। बुझाएका प्रतिवेदनहरु पनि व्यवहारिकभन्दा बढी सैद्धान्तिक तवरले प्रस्तुत गरेको पाइन्छ। ती प्रतिवेदनहरुमा देखिएका कमि-कमजोरीहरुलाई सम्बन्धित समितिले औंल्याएर आवश्यक विषयवस्तु सच्याउन निर्देशन दिने गर्छ तर राज्यले यसको कुनै वास्ता गरेको पाइँदैन।

हालै एसियाली मानवअधिकार आयोगले एक विज्ञप्ति सार्वजनिक गर्दै नेपालमा कानुनको उपस्थिती शून्य रहेको औंल्यायो। आयोगले विश्व मानवअधिकार दिवसका अवसरमा ०६१ मंसिर २४ गते जारी गरेको विज्ञप्तिमा उक्त मूल्यांकन प्रस्तुत गरेको हो। विज्ञप्तिका अनुसार, आधुनिक एसियाको इतिहासमा नागरिक बेपत्ता पार्ने मुलुकहरुमा नेपाल अग्रस्थानमा छ। नेपालले अन्तर्राष्ट्रिय महासन्धि र ऐच्छिक उपलेखमा अनुमोदन गरे पनि कार्यान्वयन गर्न सकेको छैन। यसप्रकारको क्रियाकलापले सरकार असफल भएको एसियाली मानवअधिकार आयोगको विज्ञप्तिमा उल्लेख गरिएको छ। यसैगरी अन्तर्राष्ट्रिय मानवअधिकार संस्थाहरु एमनेष्टी इन्टरनेशनल, ह्युमन राइट्स वाचलगायतले नेपालमा बेपत्ता पार्ने क्रमले मानवअधिकारको अवस्था खस्किएको र नेपालमा कार्यरत मानवअधिकार रक्षकहरु जोखिममा परेको जनाएका छन्। नेपालमा मानवअधिकारको उल्लंघन भएका घटनाप्रति चिन्ता व्यक्त गर्दै नेपालस्थित संयुक्त राष्ट्रसंघीय आवासीय प्रतिनिधि माथ्यु कहानेले पनि सरकार, नेपालस्थित विदेशी कुटनीतिक नियोग, विभिन्न राष्ट्रिय तथा अन्तर्राष्ट्रिय संस्था एवम् राष्ट्रिय मानव अधिकार आयोगको समेत ध्यानाकर्षण गर्नुभएको छ।

नेपालमा मानवअधिकारको खस्कँदो अवस्थाले अन्तर्राष्ट्रियस्तरमा परेको असरका बारेमा राष्ट्रिय मानव अधिकार आयोगका सदस्य सुशील प्याकुरेल भन्नुहुन्छ- "नेपालमा मानवअधिकारको संरचनात्मक उल्लघन भइरहेको देखिएको छ। राज्यको अमानवीय क्रियाकलापले गर्दा मानवअधिकार उल्लंघन गर्ने देशहरुमा नेपाल अग्रपंक्तिमा परेको छ। राज्यले एकातिर अन्तर्राष्ट्रिय कानुनप्रति प्रतिवद्धता व्यक्त गरेको छ भने अर्कातिर व्यापकरुपमा मानवअधिकार उल्लघन गर्ने क्रियाकलाप प्रकारान्तरले दोहोऱ्याउँदै आएको छ। यस्तो विरोधाभासपूर्ण चरित्रका कारण

**नेपाल पक्षराष्ट्र भएका अन्तर्राष्ट्रिय मानवअधिकार महासन्धि तथा अनुबन्धहरु**

- दासत्व महासन्धि, १९२६
- जाति हत्या अपराधको रोकथाम र सजायसम्बन्धी महासन्धि, १९४८
- जीउ मास्ने बेच्ने तथा अरूको वेश्यावृत्तिको शोषणको दमनका लागि व्यवस्था भएको महासन्धि, १९४९
- नारीको राजनीतिक अधिकारसम्बन्धी महासन्धि, १९५२
- दासत्व महासन्धिलाई संशोधन गर्ने प्रोटोकल पूरक महासन्धि, १९५३
- दासत्व, दास व्यापार र दासत्व समान संस्था र अभ्यासहरूको उन्मूलनसम्बन्धी पूरक महासन्धि, १९५६
- सबै किसिमका जातीय भेदभाव उन्मूलन गर्नेसम्बन्धी अन्तर्राष्ट्रिय महासन्धि, १९६५
- आर्थिक, सामाजिक तथा साँस्कृतिक अधिकारसम्बन्धी अन्तर्राष्ट्रिय अनुबन्ध, १९६६
- नागरिक तथा राजनीतिक अधिकारसम्बन्धी अन्तर्राष्ट्रिय अनुबन्ध, १९६६
- नागरिक तथा राजनीतिक अधिकारसम्बन्धी अन्तर्राष्ट्रिय अनुबन्धको स्वेच्छिक प्रोटोकल, १९६६
- रंगभेद अपराधको दमन र दण्डसम्बन्धी अन्तर्राष्ट्रिय महासन्धि, १९७३
- महिलाविरुद्ध हुने सबै प्रकारको भेदभाव उन्मूलनसम्बन्धी महासन्धि, १९७९
- यातना तथा अन्य क्रुर, अमानवीय वा अपमानजनक व्यवहार वा दण्डविरुद्ध महासन्धि, १९८४
- खेलकुदमा रंगभेदविरुद्धको अन्तर्राष्ट्रिय महासन्धि, १९८५
- बालअधिकारसम्बन्धी महासन्धि, १९८९
- मृत्युदण्ड उन्मूलन गर्ने उद्देश्यले व्यवस्था भएको नागरिक तथा राजनीतिक अधिकारसम्बन्धी अन्तर्राष्ट्रिय दोस्रो स्वेच्छिक प्रोटोकल, १९८९

अन्तर्राष्ट्रियस्तरमा राज्य नांगिदै गएको छ।"

सुरक्षा निकाय मानवअधिकार हनन गर्न उद्धत हुँदै गएको वर्तमान अवस्थामा सुरक्षा निकायले विशेष गरी बेपत्ता पार्ने क्रमलाई अगाडि बढाएका छन् भन्ने कुरा राष्ट्रिय मानव अधिकार आयोगमा दर्ता भएको १ हजार ४ सयजना बेपत्ता पारिएको तथ्यांकबाट पुष्टि हुन्छ। मानवअधिकारको आवाज उठाउने देशको एक मात्र सरकारी निकाय राष्ट्रिय मानव अधिकार आयोगसमेत निरीह बन्न बाध्य भएको छ।

राज्य आफैले प्रतिबद्धता जनाएका मानवअधिकार सन्धि, महासन्धिहरुको आफै उल्लंघन गर्ने परिपाटीका कारण अहिले देशको समग्र मानवअधिकार स्थिति दयनीय बनेको छ। राज्यको राजनीतिक प्रतिबद्धतामा कमी, मानवअधिकारको सोचमा कमी, मानवअधिकारलाई राजनीतिक सीमाभित्र राखेर हेर्ने प्रवृत्ति र राजनीतिज्ञहरु तथा कर्मचारीतन्त्रमा मानवअधिकारसम्बन्धी ज्ञानको अभावका कारण राज्यले मानवअधिकारप्रतिको प्रतिबद्धता व्यवहारमा लागू गर्न नसकेको आयोगका सदस्य प्याकुरेल बताउनुहुन्छ। "अन्तर्राष्ट्रिय मानवअधिकार कानुन पालना गर्नुपर्छ भन्ने कुरालाई राज्यले आफ्नो कर्तव्य र जवाफदेहिता सम्झिएको छैन", नेपाल बार एशोसिएशनका अध्यक्ष शम्भु थापाको ठहर छ। मानवअधिकारको उल्लंघन गर्ने प्रवृत्तिले गर्दा राज्य यसप्रति कत्ति पनि संवेदनशील नभएको उहाँले बताउनुभयो। मानवअधिकारका यस्ता संयन्त्रले प्राप्त गर्न खोजिरहेको उद्देश्यलाई सरकारले बुझ्ने चेष्टासमेत गरेको छैन। राज्यले यस्ता अन्तर्राष्ट्रिय मानवअधिकार संयन्त्रलाई राष्ट्रिय ढर्रामा परिवर्तन गर्न नखोजेको उहाँको तर्क छ। सन्धि ऐनको दफा ९ ले आत्मसात गरेको सामुहिक उत्तरदायित्वको भावना राम्रो भएको तर यसलाई मनोमानी तवरले व्याख्या गरिँदै आएको अध्यक्ष थापाको कथन छ।

मानवअधिकारका यस्ता सन्धि, महासन्धि कार्यान्वयनको प्रमुख जिम्मेवारी राज्यका विभिन्न निकायको हो। तर, उनीहरुबाटै यसको उल्लंघन हुँदै आएको पाइन्छ। तर, राजनीतिक अस्थिरताका कारण मानवअधिकारसम्बन्धी अन्तर्राष्ट्रिय संयन्त्र लागू हुन कठिनाई भएको नेपाल प्रहरीका मानवअधिकार सेल प्रमुख नवराज सिलवालको तर्क छ। सरकार प्रमुखहरुले विदेशमा सम्बन्धित कार्यक्रममा गएको अवस्थामा अध्ययनविना, सन्धि/अभिसन्धिमा हचुवाको भरमा हस्ताक्षर गर्ने प्रवृत्तिले पनि कार्यान्वयन पक्षमा ढिलाई भएको उहाँको धारणा छ। सिलवालका अनुसार, त्यस्तो महत्वपूर्ण विश्वव्यापी लिखतमा हस्ताक्षर गरेर मानवअधिकारको ज्ञान भएका आवश्यक जनशक्ति उत्पादन गर्ने, तालिम दिनेजस्ता कार्यतर्फ सम्बन्धित कोही सचेत भएका छैनन्। तथापि अहिले केही सुधार भएको र वर्तमान अवस्थामा सुरक्षा निकायलाई मानवअधिकारबारे तालिम, अध्ययनको अवसर सृजना हुँदै गइरहेको पनि मानवअधिकार सेल प्रमुख सिलवाल बताउनुहन्छ।

जेहोस्, मानवअधिकारसम्बन्धी अन्तर्राष्ट्रिय संयन्त्रहरुप्रति प्रतिबद्धताको भाषण मात्र नगरी प्रभावकारी कार्यान्वयनमार्फत् जनतालाई अनुभूति दिन सके यस्ता प्रतिबद्धताहरुको सही अर्थ लाग्नेछ।

# द्वन्द्वले तहसनहस जनजीवन

## खोटाङमा गाडी त गुडेन विमान पनि उडेन

खोटाङ पूर्वको सबैभन्दा विकट पहाडी जिल्लाहरुमध्ये एक हो। यहाँ अहिलेसम्म मोटर पुगेको छैन। मोटरबाटो सदरमुकाम पुगेको पाँच वर्ष भइसक्यो। ०५८ को जनगणनाअनुसार, झण्डै अढाई लाख जनसंख्या भएको खोटाङ हवाइजहाज सेवाबाट पनि वञ्चित छ। विमानस्थल भने नभएका होइनन्।

दुईवटा चालु अवस्थाका विमास्थल छन् तर विमान चल्दैनन्। एउटा विमानस्थल लामिडाँडा र अर्को खोटाङबजारमा छ। यी दुईमध्ये लामिडाँडा सदरमुकाम दिक्तेलबाट मच्चिएर हिड्दा आधा दिन लाग्छ भने खोटाङ विमानस्थल पुग्न डेढ दिन लाग्छ। असुरक्षाका कारण यी दुवै विमानस्थल बन्द छन्। जिल्लाको पुरानो सदरमुकाम खोटाङ हुँदा जहाज प्रशस्त आउने-जाने गर्दथे तर सदरमुकाम सरेपछि त्यो अवस्था रहेन। लामिडाँडाको विमानस्थल टावर माओवादीहरुले ध्वस्त पारेपछि एक वर्ष त जहाज नै चलेन। अहिले अस्थायीरुपमा चालु छ। जुन दिन सुरक्षाफौज गस्ती गर्दै लामिडाँडा पुग्छ त्यो दिन जहाज आउँछ। सदरमुकामबाट हिँडेर जाने सोझो बाटोमा ठूलो पात्ले जंगल पर्दछ। त्यही जंगलमा विमानस्थल सुरक्षार्थ खटिएका सुरक्षाकर्मीलाई माओवादीले दुईपटक विद्युतीय धराप थापेर आक्रमण गरेपछि त्यो बाटो असुरक्षित बनेको हो।

यी दुई विमानस्थलको विकल्पमा अर्को विमानस्थल सदरमुकामबाट एक-डेढ घण्टाको फरकमा खानिडाँडा विमानस्थल खनिँदैछ। ०६० बैशाखदेखि खन्न थालिएको त्यो विमानस्थल पाँच वर्षमा पूरा हुने ठेकेदार मोहन खत्री बताउँछन्। यो विमानस्थल सदरमुकामबाट पूर्व दक्षिणको खाल्ले गाविसमा पर्दछ। दैनिक पाँच सय श्रमिकले विमानस्थल खनिरहेका छन्। यो विमानस्थलको लम्बाई पाँच सय असी र चौडाई चालीस मिटर रहेको ठेकेदार खत्री बताउँछन्। ४९ रोपनी जग्गा ऐलानी रहेको विमानस्थलका लागि टिकाबहादुर कटुवालले सबैभन्दा बढी २३ रोपनी, भीमसेन राईले १३ रोपनी र शिव दाहालले १० रोपनी जग्गा नि:शुल्क प्रदान गरेका छन्। बाँकी नम्बरी जग्गा सरकारले मुआब्जा दिएर अतिक्रमण गरेको छ।

विमानस्थल निर्माणका कामदार भने बेखुशी छन्। दैनिक डेढ सय रुपैयाँ दिए पनि त्यो रकम सरकारले छुट्याएको भन्दा न्यून भएको, बिहान ६ बजेदेखि बेलुकी ६ बजेसम्म सुख्खा काममा लगाइने गरेको गुनासो पोख्छन्, श्रमिक टंकबहादुर श्रेष्ठ। विमानस्थल निर्माणस्थलमा डोकोमा माटो ओसार्ने, गैंची, झम्पल, कुटो, कोदालो र बेल्चा चलाउने श्रमिकहरुको घुइँचो देखिन्छ। विमानस्थल निर्माणले मानिसलाई प्रशस्त रोजगारी दिएको छिमेकी गाविस रतन्छाका हरि ढकाल बताउँछन्। ठेकेदार मोहन खत्री भने श्रमिकका लागि बेला-बेलामा विमानस्थलमै स्वास्थ्य शिविर संचालन गर्ने गरेको बताउँछन्।

खानिडाँडा विमानस्थल बनेपछि खोटाङबासीलाई हवाई सुविधा भरपर्दो हुने पत्रकार विमलकाजी श्रेष्ठ बताउँछन्। यो विमानस्थल सदरमुकामबाट सुरक्षाकर्मी आउन-जान सजिलो हुने हुँदा सुरक्षा व्यवस्था पर्याप्त हुने आशा व्यक्त गर्दछन्,



निर्माणाधीन खानिडाँडा विमानस्थल

जिल्ला स्वास्थ्य कार्यालयका निमित्त कार्यालय प्रमुख जयकान्त झा।

## सञ्चार सम्पर्कको केन्द्र अर्खौले

खोटाङ माओवादी अति प्रभावित जिल्लामध्येमा पनि गनिन्छ। यो जिल्लाका ऐंसेलुखर्क, चिसापानी, चेश्मीटार, हलेसी, अर्खौले, खोटाङ (पुरानो सदरमुकाम) क्षेत्रलाई माओवादीले आफ्नो आधार इलाका ठानेका छन्। यी क्षेत्रमध्ये चिसापानी घटनाले त राष्ट्रिय चर्चा नै पाएको थियो। त्यहाँ निर्दोष शिक्षकलाई माओवादीको आरोपमा सेनाको गस्ती टोलीले हत्या गरेको थियो। उल्लेखित ठाउँमा माओवादी र सुरक्षाकर्मीबीच साना-ठूला झडप र भीडन्त नभएका पनि होइनन्। अपहरण र गिरफ्तारका घटना पनि नियमितजस्तै हुने गरेको इन्सेक, मानवअधिकार वर्ष पुस्तक जिल्ला प्रतिनिधि युवराज राई बताउँछन्।

तीमध्ये अर्खौले गाविस माओवादीका लागि सञ्चार सम्पर्कको अनुकूल क्षेत्र मानिदोरहेछ। अर्खौले बजार खोटाङको सञ्चार सुविधाका हिसाबले पनि धनी छ। यहाँ तीनवटा टेलिफोन सञ्चालित छन्। बजार पनि उस्तै घुइँचोसँग लाग्दछ। बजारको गतिविधि र भीड देख्दा हिंसात्मक द्वन्द्वमा पनि आर्थिक कारोबार राम्रोसँग चले जस्तो लाग्छ।

**अर्खौले बजार खोटाङ्गको सञ्चार सुविधाका हिसाबले पनि धनी छ। यहाँ तीनवटा टेलिफोन सञ्चालित छन्। बजार पनि उस्तै घुइँचोसँग लाग्दछ। बजारको गतिविधि र भीड देख्दा हिंसात्मक द्वन्द्वमा पनि आर्थिक कारोबार राम्रोसँग चलेजस्तो लाग्छ।**

मानिसहरु एक दिनको बाटो हिंडेर भए पनि फोन गर्न घुइँचो लाग्छन्- अर्खौले बजारमा। वर्षीको छोरो च्यापेर एक दिनको बाटो हिँडेर टेलिफोन गर्न आएकी रुबी राई भन्छिन्- "सदरमुकाममा एउटा टेलिफोन छ, दिनभरि लाइन लाग्दा पनि पालो आउँदैन, त्यसैले यहाँ आएकी हुँ। मेरा बुढा मलेसिया गएका छन्। एकछिन कुरा गर्न पाए मन ढुक्क हुन्थ्यो।" एउटा टेलिफोन काउण्टरमा एक जना अधबैंशे टेलिफोन रिसिभर उठाएर कुरा गरिरहेका थिए। आँगनमा विराटनगरका पत्रकार फिक्का चिया (दुधविनाको) पिउँदै थिए। हातमा जनादेश पत्रिका लिएको लुरे-लुरे केटाले प्रश्न गऱ्यो "के पिएको ? कहाँबाट आउनुभयो ? कहाँ जाने ?" ऊ माओवादी कार्यकर्ता रहेछ। रक्सी खाएको हो कि भन्ने आशंकाले सोधेको रहेछ। टेलिफोन गर्ने अर्को मोटो-घाटो मान्छे त माओवादीको जिल्लास्तरीय कार्यकर्ता नै रहेछन। परिचय भयो। उपनाम "शक्ति"।


अर्खौले बजार

अर्खौलेको टेलिफोन लाइन पहिला दिक्तेल पनि तानिएकोमा टेलिफोनवालालाई माओवादीले अपहरण गरेपछि अर्खौलेमा नै सार्ने शर्तमा छाडिएछ। सदरमुकाम दिक्तेलमा सञ्चार सुविधा मात्र होइन, खाद्यान्न लैजान पनि माओवादीले प्रतिबन्ध लगाएपछि अर्खौले मुख्य बजार बनेको स्थानीय बासिन्दा हर्कजीत राई बताउँछन्। खोटाङ जिल्लाको दक्षिण उदयपुरको घुर्मीबाट अर्खौले बजारका लागि सामान ओसार्न सजिलो र छोटो दूरी पर्छ। लाठे भरिया दुई दिनमै घुर्मीबाट अर्खौले पुग्नसक्छन्। घुर्मीसम्म यातायातको सुविधा छ।

सामान खच्चडले पनि ओसार्छन्। तर पहिरो गएर बाटो कठिन छ। भरिया र खच्चडबाट पनि माओवादीले कर लिने गर्दछन्। प्रति खच्चड बार्षिक एक हजार र भरियाबाट वजनका आधारमा माओवादीले व्यापारीबाट एकमुष्ठ कर उठाउने गरेको स्थानीय बासिन्दा बताउँछन्। भरिया र खच्चड हिड्ने बाटो स्थानीय बासिन्दाले अनिवार्य बनाउनु वा मर्मत गर्नुपर्छ। यसलाई माओवादी जनसरकारको आदेश भनिने गरिन्छ। खाजा-सामल बोकी एक ठाउँका मानिसले अर्को ठाउँमा बाटो खन्नुपर्ने नीति अख्तियार गरिएको माओवादी कार्यकर्ता मुक्तिले बताए। बाटो खन्न नसक्नेले जनही दिनको हजार रुपैयाँ बुझाउनुपर्ने वाध्यता भएको बताउँछन्- पुरेत मुक्तिनाथ निरौला। "म खन्न नस्कने, दुईटा छोरा हाइस्कुल छोडेर बाटो खन्न गए। के गर्नु पार्टीको शासन नमाने मारिहाल्छन्। बाँच्न चर्को भइसक्यो", निरौला भन्छन्।

# उर्वर भएर पनि अभावमै बाँच्नुपर्छ

विकट भए पनि उर्वरभूमि मानिन्छन्- खोटाङका कतिपय ठाउँ। लामिडाँडा विमानस्थलभन्दा उत्तरतर्फको खार्पा गाविस क्षेत्रमात्र नभएर कुभिन्डे, राजापानी आदि ठाउँमा प्रशस्त धान उत्पादन हुन्छ। रावा नामको खोलाका दुई किनारा फाँटमा पानी लगाउन सकिन्छ। ती क्षेत्र पनि खेतीका लागि उपयुक्त छन्। हेर्दा गरिब देखिने स-साना घरमा बस्नेहरु पनि तराईका शहर-बजारमा घर-जग्गा जोडेका भेटिन्छन्। त्यस्ता मानिसमध्ये खार्पाका मोहन मगर पनि एक हुन्। उनी पहिला खार्पाली पोखरेलहरुको खेती उठाउने गर्दथे। अहिले विराटनगरको पोखरियास्थित पानीट्यांकीमा घर बनाएर छोरो पढाउँदैछन्। उनी भने गाउँकै उपस्वास्थ्य चौकीका ग्रामीण स्वास्थ्य कार्यकर्ता हुन्। खार्पा धान उत्पादनका हिसाबले सबैभन्दा धनी गाविस मानिँदोरहेछ– खोटाङ जिल्लामा।

त्यही खोटाङ हो जहाँ एक गिलास तातो पानी र एक मुठी मकै-भटमास मुखमा हाल्न नपाएर भोकभोकै बस्नेहरु पनि छन्। खोटाङको दक्षिण भागमा यस्तै एउटा गोठमा बस्ने परिवार भेटियो। धितुङ गाविस-७ बरियाडाँडाकी चतुरमाया राई साहसिक महिला हुन्। बेंशीमा एकान्तको गोठमा बस्नु चतुरमायाको बाध्यता हो। चतुरमाया राईले धानको भात खान पाएको दिन मन धेरै खुसी हुन्छ। चारैतिर प्वाल परेर फाटिसकेको चौबन्दी चोलो, नकोरेको गज्याङ-गुजुङ अनुहार नदेखिने गरी ढाकिएको कपाल, निकै मैलो लुङ्गी लगाएर काममा जोतिएकी चतुरमायाका दुई भाइ छोरा पनि हुर्किसकेका छन्। अधबैंशे चतुरमायाको लाठे भइसकेको ठूलो छोराको बिहे पनि भइसकेको छ। घरमा सधैं अभावै-अभाव झेल्नु पर्दा दिक्क भइसकेकी उनले त्यही बढेको छोरालाई पैसा कमाउनका लागि शहर पठाउन ऋण खोजिन्। बल्लतल्ल माइतीपट्टिकाले पत्याए। तर, उनले छोरालाई शहर पठाउन पाइनन्। माओवादीले उनीसँगै चन्दा मागे।



गोठ अगाडि चतुरमाया

उनले दिन सकिनन् र छोरो पनि पठाइनन्। कमाउन जानेबाट माओवादीले पहिले नै कर लिँदारहेछन्।

## सुनसान हलेसी

पूर्वकै प्रख्यात हलेसी बजार केही वर्षदेखि सुनसान छ। धार्मिक र पर्यटकीय हिसाबले अति महत्वपूर्ण मानिएको हलेसी महादेवस्थान सुनसान हुनुमा देशमा चर्केको हिंसात्मक द्वन्द्वले घर गरेको छ। हलेसी महादेवको दर्शन गर्न बर्षेनी हजारौं देशी-विदेशी पर्यटकहरुको घुइँचो लाग्ने यो ठाउँ अहिले माओवादीको सुरक्षित आश्रयस्थल बनेको स्थानीय बासिन्दा सुरबहादुर श्रेष्ठ बताउँछन्। वर्षमा दुई पटक- रामनवमी र बालाचतुर्दशीमा मेला लाग्ने र बर्षेनी दुई लाख पर्यटक तथा भक्तजनहरु आवत-जावत गर्ने महादेवस्थान यतिखेर सुनसान बनेको हलेसी महादेव व्यवस्थापन समितिका अध्यक्ष तथा शिक्षक हेमन्त गिरी बताउँछन्। महादेवस्थान वरिपरि गतिलै बजार छ। पर्यटक र भक्तजनहरु थेग्न सक्ने पक्की घरहरु पनि बनिसकेका छन्। पसलहरु पनि प्रशस्त पाइन्छन् तर मन्दी अवस्थामा।

"धेरै पाहुनाहरु आउलान्, आम्दानी होला, व्यापार-व्यवसाय पनि राम्रै चल्ला भनेर ढुंगा-सिमेन्टको गारो हालेर तीनतले घर बनाइयो तर हात लाग्यो शून्य भएको छ। लजमा सिरक-डसना ढुसी परेर, मुसाले गुँढ लगाएर चौपट् छ", शिक्षक गिरी दु:खेसो गर्छन्। गिरीको अवस्था मात्र यति दयनीय बनेको होइन। यहाँका दुई दर्जन लगानीकर्ताहरु पूँजी फसेकोमा टाउकोमा हात राखेर थक-थक मानिरहेका छन्। राजा वीरेन्द्र सवारी हुँदा हलेसी महादेवको जीर्णोद्वार निकै गतिलोसँग भएको थियो। अहिले गुफा मर्मत सम्हारको अभावले कुरुपजस्तो भएको गुनासो पोख्छन् गुफा सरसफाइमा जुटेका वीरे नेपाली। मन्दिरको आम्दानीमा समेत माओवादीले कर तोकेपछि गुफाको अवस्था अझ जीर्ण भएको र पर्यटकसँग चन्दा लिन थालेपछि पर्यटक पनि स्वात्तै घटेको पसले विर्खबहादुर श्रेष्ठ बताउँछन्। महादेवस्थानमा आजभोली आक्कल झुक्कल मात्र पर्यटकहरु आउने गरेको स्थानीय बासिन्दाहरु बताउँछन्। "पहिला हेलिकप्टर चार्टर गरेर पर्यटक ओइरिन्थे, आजभोली पार्टीले जहाज बस्न दिँदैन," श्रमिक श्याम क्षेत्री भन्छन्।

● *दीपेन नेउपाने*

# श्रम शोषणको रुपमा कायम छ बालिप्रथा

ललितपुर। पुस्तौंदेखि चल्दै आएको बालिप्रथाका कारण लुगा सिउने दमाई र फलामको काम गर्ने कामीहरुले श्रमको मूल्य पाउन सकेका छैनन्। ललितपुरको दक्षिणी पहाडी भेगमा पनि यो प्रथा कायम छ। लुगा सिइदिएवापत् दमाईले र फलामका औजारहरु मर्मत गरिदिएवापत् कामीले वार्षिकरुपमा केही अन्न पाउने गर्दछन्। यसरी पाउने अन्नलाई बोलिचालीमा बाली भन्ने गरिन्छ। काम गरिदिएवापत् अन्न दिने दातालाई परम्परादेखि नै विष्ट भन्ने चलन छ।

श्रम विभाजनका कारण दमाई, कामी जातका मानिसहरुले पुस्तौंदेखि बाली प्रथाअन्तर्गत अन्नसँग श्रम साट्दै आएका छन्। अन्नसँग श्रम साट्ने चलन कहिलेदेखि चल्यो भन्ने तथ्य भने कसैलाई थाहा छैन। "खै मेरा विष्टहरु त बाजेका पालादेखिका हुन्। यो प्रथा कसरी शुरु भयो भन्नेबारे केही थाहा छैन" देवीचौरका मुरारी परियार बताउँछन्।

कतै-कतै वर्षभरी लुगा सिइदिएवापत् तथा औजार मर्मत गरिदिएवापत् पाउने बाली दमाई, कामीहरुले तोकेअनुसार नभई विष्टको इच्छाअनुसार निर्धारण हुनेपर्छ। तर, दुवैको सहमतिमा बाली निर्धारण हुने गरेको चापागाउँ, झ्यालुम्टारका धनजीले दमाई बताउँछन्।

स्थानीय बजार गोटिखेल, भट्टेडाँडा तथा चापागाउँमा एउटा पाइन्ट सिलाएको एक सय पचास रुपैयाँसम्म पर्ने गर्छ भने सर्ट सिलाएको मात्र पचहत्तर रुपैयाँ लाग्छ। तर, बालीका रुपमा दिइने अन्नबाट भने स्थानीय बजार मूल्यका आधारमा दमाईहरुको ठूलो श्रमशोषण भएको प्रष्ट हुन्छ।

कामीहरु पनि श्रमअनुसारको ज्याला बालीबाट असुल गर्न नसकेको गुनासो गर्छन्। "विष्टहरुले दिएको बालीबाट परिवार धान्न त के, काममा लागेको श्रमको मूल्यसमेत उठ्दैन", छप्पी हनुमठका कुमाल कामी बताउँछन्। उनको भनाई छ, "मानसिक परिश्रमलाई नहेर्ने हो भने तुलनात्मकरुपमा दमाईभन्दा कामीले बढी गाऱ्हो काम गर्नुपर्दछ।"

बालीमा काम गरेवापत् दमाईले विष्टका परिवारका थोत्रिएका लुगा छाल्ने-सिउनेदेखि नयाँ लुगासमेत सिउनु पर्छ भने कामीले विष्टका भाँचिएका



औजारको मर्मतदेखि नयाँ निर्माणको काम गर्नुपर्छ। यस्तो काम गरेवापत् घरैपिच्छे पाउने अन्नले उनीहरुको श्रम मूल्यको एक छेउ पनि असुल्न सक्दैन। त्यसो त युवा दमाई-कामीहरु बाली लिने प्रथालाई माग्ने प्रथाजस्तो भएको ठान्छन्। उनीहरु तर्क छ, "काम नगर्नेले मात्र माग्छन् तर दमाई-कामीहरु भने मरीमरी काम गर्दा पनि घर-घरमा झोला थाप्दै माग्नेझैं हिँड्नुपर्छ। बाली प्रथालाई सरल ज्यालाप्रथामा बदल्नुपर्छ। अनिमात्र विष्ट र दमाई-कामीको साझा हित हुन्छ।"

"बालीमा लुगा सिउन तथा फलामका औजार मर्मत गर्न विष्टले बोलाएको बेला आफ्नो समय अनुकूल नभए पनि काम गर्नैपर्ने वाध्यता छ, केवल वार्षिक बालीका लागि। नत्र विष्टले बाली दिँदैनन्", दक्षिण ललितपुरका दमाई - कामीको एक मत छ। परिवारका पुरुष संख्याका आधारमा एक-एक पाथीका दरले मकै तथा महिला संख्याको आधारमा आधा-आधा पाथी मकै तथा केही नुन, तेल र तरकारी पाउने गरेको उनीहरु बताउँछन्।

दक्षिणी ललितपुरको केन्द्र मानिने गोटिखेल गाविसका दमाईहरुले बालीबाट परिवार धान्न नसक्ने भएपछि वैकल्पिकरुपमा भैंसीपालन पेशा अपनाएको मानवअधिकार शिक्षा रेडियो श्रोता क्लब राष्ट्रिय समिति (रिलेक-नेपाल) का जिल्ला अध्यक्ष दीपक घिमिरे बताउँछन्। तर, भैंसी पालेर पनि दुध बेच्न नपाउँदा ती दमाईहरु झनै पीडित भएको घिमिरेको मूल्यांकन छ। दमाई-कामीले छोएको खानेकुरा उपल्लो भनिने जातका व्यक्तिहरुले नखाने परम्पराका कारण उनीहरुले उत्पादन गरेको दुध बिक्री गर्न कठिन छ।

प्रत्येक कामको साइत गर्ने दमाईहरु सामाजिक सचेतनाको कमीले गर्दा ठगिएका छन्। पन्चेबाजा बजाउन पोख्त दक्षिण ललितपुरबासी दमाई-कामीहरु आफै विष्टका घरमा पस्न नहुने धारणा व्यक्त गर्छन्। नाम बताउन नचाहने भट्टेडाँडाका ५४ वर्षीय एक दमाई विष्टको सेवा गर्नु आफ्नो कर्तव्य हो भन्दै विष्टको घरमा पसे पाप लाग्ने बताउँछन्।

रिलेक-नेपालका सल्लाहकार अधिवक्ता विष्णुबहादुर खत्री बालीप्रथालाई श्रमशोषणको संज्ञा दिन्छन्। उनको तर्क छ, "परम्परादेखि ठगिँदै आएका भूमिहीन दमाई-कामीहरु आफ्नो जिविकोपार्जनका लागि बालीप्रथामा काम गर्न वाध्य छन्।"

बालीप्रथामै काम गर्नाले उनीहरुले भूमि किन्न नसक्नु र आर्थिक दुरावस्था भोग्नु परेको अड्कल सहजै गर्न सकिन्छ। जातीय विभेद र यसका आधारमा हुने शोषण अन्त्य गर्न सरकारी तथा गैरसरकारी क्षेत्रबाट पहल हुनु टड्कारो आवश्यकता बनेको छ।

*रमेशप्रसाद तिमल्सिना*

# खाद्यान्न ढुवानीमा प्रतिबन्ध

म्याग्दी। मानवअधिकारको विश्वव्यापी मान्यतालाई उल्लंघन गर्दै म्याग्दीको पश्चिमी क्षेत्रका ग्रामीण इलाकामा सुरक्षाको कारण देखाएर जिल्ला सुरक्षा समितिले खाद्यान्न ढुवानीमा प्रतिबन्ध लगाएको छ।

संयुक्त राष्ट्रसंघको महासभाद्वारा १६ डिसेम्बर १९६६ मा अनुमोदन गरिएको आर्थिक, सामाजिक र साँस्कृतिक अधिकारसम्बन्धी अन्तर्राष्ट्रिय अनुबन्धको धारा ११ को उपधारा एकमा पर्याप्त भोजनको अधिकारअन्तर्गत खाद्यान्न आपुर्ति र खाद्यान्नमा जनताको पहुँचको ग्यारेन्टी गरिएको छ। जुन अनुबन्धलाई श्री ५ को सरकारले १४ मे १९९१ मा हस्ताक्षर गरेको छ।

सुरक्षा निकायले जिल्लाको पश्चिमी क्षेत्रमा चामल, दाल, चिउरा, मैदा, चाउचाउ र बिस्कुटलगायत्का खाद्य सामग्री लैजान प्रतिबन्ध लगाएको हो। माओवादीलाई खाद्यान्न असुविधा पुऱ्याउन यसो गरिएको बताइएको छ। जिल्लामा नियमित आयोजना गरिने सार्वजनिक सुनुवाई कार्यक्रममा समेत मानवअधिकारकर्मीलगायत् व्यापारीहरुले सुरक्षा निकायको यस निर्णयले सर्वसाधारणलाई मात्र असर गरेको भनी असन्तुष्टी व्यक्त गरेका छन्।

प्रमुख जिल्ला अधिकारी ज्ञानप्रसाद भट्टराई भने सुरक्षाका कारण निश्चित समयका लागि खाद्यान्न ढुवानीमा नियन्त्रण गरिएको स्वीकार गर्दै व्यापारीहरुले नियन्त्रण गरिएको समयमा पनि लुकिचोरी खाद्यान्न ढुवानी गर्ने गरेकाले शंका लागेको बताउँछन्। अहिले खाद्यान्न ढुवानीमा औपचारिकरुपमा रोक लगाइएको भएपनि जिल्लाका सबै गाउँमा जाने खाद्यान्नमा भने पहिल्यैदेखि नियन्त्रण रहेको थियो। खाद्यान्न बोकेर गएका खच्चडहरुलाई सेनाको चेकपोष्टले फर्काई रोक लगाएको जानकारी दिएका थिए।

त्यसैगरी जिल्ला प्रशासन कार्यालयले एक सूचना जारी गरी जिल्लाका विभिन्न इलाकालाई बढीमा दुई महिनाका लागि निषेधित क्षेत्र घोषणा गरेको छ। माओवादी गतिविधि बढेको कारण देखाएर स्थानीय प्रशासन ऐनअनुसार बढीमा दुई महिनाका लागी भनी बरंजा, अर्मन र निस्कोट गाविसमा पर्ने सोले, घुम्टीडाँडा, देउराली र फेराको जंगली इलाकाको अन्दाजी १७ वर्ग किमी, रुम र ओखरबोट गाविसको डेढे लेक र सोले लेकको २२ वर्ग किमी जंगल क्षेत्र, मुना र देवीस्थान गाविसको जुग्जा पहाड, भेंडाखोर, गाइखर्क र मालिकाको धुरीवरपरको २२ वर्ग किमी जंगल क्षेत्र, लुलाङ र गुर्जा गाविसमा पर्ने ढोरपाटन शिकार आरक्ष क्षेत्रमा पर्ने ९८ वर्ग किमी जंगली क्षेत्र, मराङ, दरवाङ, कुहुँ, पाखापानी र कुइने गाविसको बीचमा पर्ने तोराबोरा पहाडको ५१ वर्ग किमी जंगल क्षेत्र र चिमखोला, दोवा, भू-तातोपानी र दाना गाविसको पश्चिमपट्टीको अन्दाजी १ सय २० वर्ग किमीलगायत् विभिन्न इलाकामा गरि कूल ३ सय २९ वर्ग किमी जंगली क्षेत्रमा बसोबास गर्न, खाद्यान्न भण्डारण गर्न, घाँस दाउरा लिन जान, पशु चराउन, आवत-जावत गर्न र भेला हुन निषेध गरिएको छ।

निषेध गरिएका यी इलाकालाई जिल्ला प्रशासन कार्यालयले माओवादी चलखेल गर्ने क्षेत्र माने पनि निषेधित क्षेत्रमा पर्ने जंगली क्षेत्र जिल्लाका चरन क्षेत्र हुन्।

● *घनश्याम खड्का*

# किताब बोक्ने हातमा पार्टीको झण्डा

वाग्लुङ। माटो र ढुंगाले बनेको पुरानो स्कुल। भत्किनै लागेको काठको बार्दली। कलेजी रङको सर्ट, कालो पाइन्ट, फ्रक र हातमा रातो झण्डा। लाइनमा सजिएर नारा लगाउँदै विद्यालय परिसरबाट बाहिर आउँदै गरेको सय जना विद्यार्थीको एक समूह।

दमेक गाविस-५ स्थित सुन्तलाचौर माविका विद्यार्थीलाई ०६१ मंसिर २० गते स्थानीय जनमोर्चा, नेपालका कार्यकर्ताले माओवादीविरुद्धको भण्डाफोर तथा विरोध जुलुसमा सहभागी गराउन लिएर गएपछि पढाई नै रोकिएको थियो। १७ शिक्षक र ५ सय ९३ विद्यार्थी रहेको सुन्तलाचौर मावि त्यो क्षेत्रको एक मात्र माध्यमिक विद्यालय हो। सोही विद्यालयमा कक्षा १० मा अध्ययनरत प्रकाश सापकोटा भन्छन्, "के गर्ने, जानै पऱ्यो, एक घण्टाभन्दा बढि समय लगाएर



जुलुसमा सहभागी बालबालिका

आउनुपर्छ, पढाई नहुँदा दिक्क लाग्छ।" यसबाहेक राजनीतिक पार्टीहरुले पटक-पटक यस्ता कार्यक्रम गरेर पढाईमा बाधा पुऱ्याउँदै आएको स्थानीय पुष्पा आचार्य बताउँछिन्।

"राजनीतिक पार्टीले आफ्नो सभा, जुलुसमा विद्यार्थीलाई लिएर गएपछि हामी घाम तापेर बस्नुबाहेक अरु के नै गर्न सक्छौं र ?" शिक्षक नन्दलाल सापकोटा भन्छन्- "शिक्षण संस्थालाई दुरुपयोग नगर्न राजनीतिक पार्टीलाई पटक-पटक भनेका छौं" तर अभिभावक नै राजनीतिक पार्टीमा संलग्न भएका कारण आफ्नो आग्रहलाई नटेरेको हुनसक्ने उनको दु:खेसो छ।

जिल्लाको दक्षिणी भेगमा जनमोर्चा, नेपालको बाहुल्यता भएकोले त्यो क्षेत्रमा उसैको बढी कार्यक्रम हुने गरेको छ। सभा सम्मेलनमा संलग्न हुने जनमोर्चाको आग्रहलाई केही विद्यार्थीले भने मानेका छैनन्। "टेष्ट परीक्षा आउन थालेको छ, पढ्नुपर्छ भनेर म उनीहरुको विरोध कार्यक्रममा नगएको हुँ। उनीहरुले धेरै पटक कर गरेका थिए" सुन्तलाचौर माविका कक्षा १० मा अध्ययनरत तेजेन्द्र सापकोटा भन्छन्।

अनेरास्ववियु (एकीकृत), जिल्ला तदर्थ समितिका सदस्य कृष्ण थापा भने आफूहरुले शिक्षक, विद्यार्थीलाई दबाव नदिई आग्रह मात्र गरेको बताउँछन्। माओवादीले ०६१ मंसिर १४ गते राति दमेक गाविसमा जनमोर्चाका कार्यकर्ताका खुट्टामा काठ छेड्ने बर्मा रोपेर घाइते बनाएको विरोधस्वरुप कुश्मिसेरा बजारमा भएको कार्यक्रममा सुन्तलाचौर मावि, विनामारे र कुश्मिसेराका विभिन्न विद्यालयका गरी १५ सयभन्दा बढी विद्यार्थी प्रभावित भएका छन्।

● *जीवन्त वाग्ले*

# उत्तरी गोरखा : खाद्यान्न संकट यथावत

गोरखा। मंसिरको महिना, सबै वर्षझैं तराईका फाँटहरु र पहाडी भेकका किसानहरु आफ्नो मेहनतबाट उब्जनी गरेका धान भित्र्याएर हर्षविभोर भइरहेका बेला नेपालको पुरानो राजधानीको रुपमा परिचित गोरखा जिल्लाका उत्तरी क्षेत्रमा भने खाद्य संकट व्याप्त हुन्छ। प्रत्येक वर्षको खाद्यान्न संकट सो क्षेत्रका जनताको दिनचर्या बनेको छ।

जिल्ला सदरमुकामदेखि ३० कोस टाढा सिर्दिबास र उपल्लो भेग सामागाउँ ५२ कोससम्म फैलिएको सो क्षेत्रमा हिमाली निकटताका कारण बाह्रै महिना हिमपात हुने हुँदा धान उत्पादन नहुने र अन्य बालीहरुको पनि राम्रो उत्पादन हुँदैन। भौगोलिक विकटताले सो क्षेत्रमा छोटो अवधि खाद्यान्न ढुवानी हुन नसक्नाले प्रत्येक वर्षको १-२ महिनाबाहेक अधिकांश समय खाद्यान्न संकट हुने गरेको सो क्षेत्रका बासिन्दाहरु बताउँछन्।

३६१० वर्ग किमी क्षेत्रफल र समुद्री सतहदेखि २२८ मिटरदेखि ८१६३ मिटरको उचाइमा अवस्थित यस जिल्लामा उष्ण, समशितोष्ण, शितोष्ण र हिमाली सबै प्रकारको हावापानी पाइन्छ। जिल्लाको लगभग आधाजसो भूभाग ओगटेको उत्तरी भेगका अति दुर्गम - सिर्दिबास, चुम्चेत, ल्हो, बिही, प्रोक, सामागाउँ र छेकम्पार गरी सात गाविसहरु छन्।



हिउँले ढाकिएको छेकम्पार गाविसको एक भाग

छेकम्पार गाविसका पूर्व अध्यक्ष निमा लामाका अनुसार, स्वास्थ्य, शिक्षा र यातयातजस्ता विकासको दृष्टिकोणले अत्यन्त पिछडिएको सो क्षेत्रमा हरेक वर्ष खाद्यान्न संकटको सामना गर्दै आएका बासिन्दाहरु गोरखा सदरमुकाम आउनुभन्दा तिब्बततिरबाट चामल ल्याएर गुजारा चलाउनु उत्तम ठान्दछन्। भौगोलिक कठिनाई र वर्तमान असुरक्षित परिस्थितिले गर्दा खाद्यान्न ढुवानीको प्रकृयामा भएको अनावश्यक झन्झटले पनि मानिसहरु गाविसको नजिकै पर्ने छिमेकी देश चीनको स्वशासित क्षेत्र तिब्बत जान बाध्य छन्।

खेतियोग्य जमीन कूल ५५६९९६ हेक्टर रहेको गोरखा जिल्लामा प्रतिव्यक्ति प्रतिवर्ष २ सय १ किलोग्राम खाद्यान्न आवश्यकता रहेको जिल्ला कृषि विकास कार्यालयको तथ्यांकमा उल्लेख छ। करिब ९ हजार जनसंख्या रहेको उत्तरी गोरखाका लागि प्रतिवर्ष ११ सय क्वीन्टल चामलको कोटा ढुवानीको निम्ति निर्धारण गरेको नेपाल खाद्य संस्थान, गोरखाले जनाएको छ।

वि.सं. ०३९ सालदेखि नै गोरखाको उत्तरी क्षेत्रमा खाद्यान्न (चामल) ढुवानी गरेपश्चात् सिर्दिबास र माछीखोलामा खाद्य डिपो स्थापना गरि वितरण गरेको तर वर्तमान अवस्थामा असुरक्षाका कारण ढुवानी प्रक्रिया नियमित हुन नसक्दा संकट उत्पन्न भएको खाद्य संस्थानका जिल्ला शाखा प्रबन्धक कुलबहादुर गुरुङ बताउँछन्। गुरुङका अनुसार, यस वर्ष खाद्यान्न ढुवानीका निम्ति संस्थानले तेस्रो पटक बोलपत्र आव्हान गरिसकेको छ तर मूल्यमा सहमति हुन नसक्दा प्रक्रियामा अवरोध सृजना भएको छ।

सो क्षेत्रका बासिन्दाहरु अहिले साम्दो लार्केपासबाट नाङ्जार निङ हुँदै ठाक्दाङ र छिलेमिलेबाट इङ हुँदै तिब्बत पुगी सात दिनभन्दा बढी समय लगाएर महंगो चामल ल्याउन बाध्य भइरहेको सो क्षेत्रबाट सदरमुकाम आइपुगेका शिक्षक प्रकाश घिमिरे बताउँछन्। उनका अनुसार, त्यसरी ढुवानी गरिएको सामान्य चामल पनि प्रतिकिलो ४५ रुपैयाँ पर्दछ। उत्तरी गोरखाका जनताले हालका दिनहरुमा मकै, कोदो र सिस्नुको खोले खाएर गुजारा गर्दैछन्।

उत्तरी गोरखाबासी माग छ- "सरकारले विकासको कुरा गरिरहेको छ। तर हामीलाई विकास होइन वर्षौंदेखि झेल्नु परेको खाद्यान्न संकटको निकास चाहिएको छ।"

● *भीमलाल श्रेष्ठ*

# खेती

## सुधीर यादव

फिचर एडिटरले उसलाई सोध्यो, "तपाईंको लेख कहाँ पुग्यो ? यसो छलफल गरौं कि। यतै मकहाँ आउनुस् न।"

अरु कामबाहेक, परिशिष्टांकका लागि हप्तामा एउटा फिचर लेख्नु उसको थप काम हो। विषय दिइएको छ- "सुन्दरता"। त्यस दिनदेखि उसभित्र सुन्दरता छाएको छ। पहिलो दिन घर जाने बेलामा उसले ठूलो विज्ञापन देख्यो- नियोन साइनमा चम्किरहेकी सुन्दरी। विज्ञापनले भन्दैथियो- "सफलता पाउन सुन्दर हुनैपर्छ। सुन्दर हुन यही क्रिम लगाउनुपर्छ।"

भोलीपल्ट अफिस आउँदा उसले देख्यो- कलेज जान लागेका दुई छात्रा त्यही बोर्ड हेर्दै थिए। विज्ञापनकी सुन्दरीको तुलनामा उनीहरु असुन्दर थिए। विज्ञापन हेरेर उनीहरु के सोच्दा हुन्? शारीरिक सौन्दर्यभन्दा योग्यता महत्वपूर्ण हुन्छ। त्यसैले यस्ता चक्करमा पर्नुहुन्न।

यो पनि सम्भव छ, उनीहरुमा हीन भावना उत्पन्न होओस्। र, योग्यतालाई गौण ठान्न थालून्। यसबाट निक्लने परिणाम त घातक हुनसक्ने रहेछ। तत्कालै उसले लेखको शीर्षक निर्धारण गऱ्यो- "सुन्दरताको खेती।"

सामग्री संकलनको क्रममा उसले के थाहा पायो भने, युरोपको एक सौन्दर्य प्रशाधन कम्पनीको वार्षिक कारोबार नेपालको बजेट जत्तिकै रहेछ। यस्ता कम्पनीका मालिकहरु असी प्रतिशत पुरुष रहेछन्। अनुहार आकर्षक बनाउने क्रिममा गर्भनालको प्रयोग गरिने थाहा पाएपछि ऊ झन् द्रवित भयो।

महिलालाई साधन बनाएर कमाई गर्ने कत्रो बुद्धि ? महिलाअधिकारकर्मीहरु यसबारे किन सोच्दैनन् ? विभिन्न विचार राख्ने महिला आन्दोलनकारीमा एउटा समानता छ, त्यो के भने- लिपिस्टिकप्रति सबैको धारणा एकैनासे छ। एक दिन उसको साथीले यसो भनेकोमा ऊ मरी-मरी हाँसेको थियो।

सबै कुरा सुनेर, फिचर एडिटर सधैंझैं करायो, "ग्रेट यार, ग्रेट। म तिम्रो आर्टिकल पढ्न हतारिरहेको छु। एक घण्टाभित्र फाइनल कपी पठाऊ। अनि चिफलाई देखाउँला।"

चिफ अर्थात् मालिक एवम् प्रबन्ध निर्देशक। यसबाहेक गार्मेन्ट र साबुन कारखानाका मालिक पनि।

भोलीपल्ट पत्रिका हेर्न ऊ आतुर भयो। उसको लेख नियमित छापिने पृष्ठ पल्टाउँदा देख्यो- विज्ञापनकी सुन्दरी सिंगो पृष्ठमा हाँस्दै भनिरहेकी थिई- यो क्रिम लगाऊ र मजस्तै सुन्दरी बन।

उसले पत्रिका कच्याक-कुचुक्क पारेर नालीमा फ्याँकिदियो।

●





# मलाई जति तिम्लाई दुख्नुपर्छ



*नवराज बस्नेत*

मलाई जति भित्र दुख्छ, तिम्लाई दुख्नुपर्छ
तिमीलाई दुख्दाखेरी मलाई दुख्नुपर्छ।

मेचीलाई दुख्दाखेरी काली दुख्नुपर्छ
कालीलाई दुख्दाखेरी मेची दुख्नुपर्छ
मधेशको फाँट दुख्दा हिमाल दुख्नुपर्छ
हिमालको शीर दुख्दा मधेश दुख्नुपर्छ।

मलाई .........
तिमीलाई .........

तिम्रो पीडा व्यथाभित्र मलाई दुख्नुपर्छ
मेरो पेट भोको हुँदा तिम्लाई दुख्नुपर्छ
मेरा भाई-बैनी मर्दा तिम्लाई दुख्नुपर्छ
तिम्रा दाजु-दिदी मर्दा मलाई दुख्नुपर्छ।

मलाई .........
तिमीलाई .........

# सूचनाको हक : समष्टि अध्ययन




**पुस्तकः** राइट टु इन्फरमेसन : फिलोसफी, ल एन्ड प्याक्टिस
**लेखकः** डा. रामकृष्ण तिमल्सेना
**प्रकाशकः** विज्ञा तिमल्सेना, काठमाडौं
**पृष्ठ** : ३६६
**मूल्य** : रु. ४९९।-

सर्वोच्च अदालतका प्रवक्ता एवम् सहसचिव डा. रामकृष्ण तिमल्सेनाद्वारा लिखित यो पुस्तक उहाँको विद्यावारिधीको शोधपत्र हो। सम्बन्धित विषयको गहन अध्ययन र विश्लेषण शोधपत्रको स्वभाव हो। पुस्तक आफैले पनि यो बोलिरहेको छ।

सूचनाको हक प्रजातन्त्रको जीवन हो। यो विना प्रजातन्त्र मरेतुल्य हुन्छ। सूचना दिगो विकास र सुशासनको साधन पनि हो। यिनै कुरालाई केन्द्रविन्दूमा राखी पुस्तकमा सैद्धान्तिक, कानुनी एवम् व्यवहारको मिमांसा गरिएको छ।

नेपाल अधिराज्यको संविधान २०४७ ले सूचनाको हकलाई मौलिक हकको रुपमा स्थान दिएको छ। साधारण कानुनबाट यसमा परिवर्तन सम्भव छैन। विश्वका पचासेक मुलुकमा मात्र यस्तो प्रावधान छ। यो जानकारीले त्यस्ता कैयौं पाठकलाई चकित पार्नसक्छ, जसले सूचनासम्बन्धी कानुनी प्रावधानको तुलनात्मक अध्ययन गर्न पाएका छैनन्।

पुस्तकको पहिलो परिच्छेदमा सूचनाको हकलाई विश्व परिवेशमा कसरी हेरिन्छ, त्यसको विस्तृत व्याखा भएको छ। दोश्रो परिच्छेद पहिलोकै निरन्तरता लागे पनि यसमा सूचनाको हकको प्रकृतिलाई विधिशास्त्रीय दृष्टिकोणले व्याख्या गरिएको छ।

तेश्रो परिच्छेदमा अन्य पाँच मुलुकका सूचनाको हकको स्थिति चर्चा गरिएको छ। ती पाँच मुलुकलाई स्थान दिनुको औचित्य पनि लेखकले प्रष्ट्याउनु भएको छ। स्वीडेन, अस्ट्रेलिया र संयुक्त राज्य अमेरिकामा सूचनाको हक अत्यन्त विकसित मानिन्छ भने भारत र बेलायतमा सूचनाको हकले महत्वपूर्ण स्थान ओगटेको छ। नेपालमा सूचनाको हकलाई संवैधानिक परिप्रेक्ष्यमा हेर्ने क्रममा सर्वोच्च अदालतबाट प्रतिपादित सिद्धन्तहरुलाई चौथो परिच्छेदमा उदाहरणको रुपमा प्रस्तुत गरिएको छ।

लेखकले संसदलाई सूचनाको केन्द्र, लघु जनमत एवम् सूचना प्रसारण गर्ने अंग मान्नु भएको छ। हुन पनि सुव्यवस्थित संसदले सरकारका सबै निर्णय बुझेको हुन्छ। संसद पहिले आफू सुसूचित हुन्छ त्यसपछि जनतासमक्ष सूचना प्रवाह गर्दछ। सूचनाको हकलाई संरक्षण गर्ने दायित्व न्यायपालिकाको हो। सरकारका तीन अंगमध्ये यी दुवैको भूमिका नेपालमा कस्तो रहेको छ, त्यसको विस्तृत छलफल पाँचौ परिच्छेदमा गरिएको छ।

जनतासमक्ष सूचना पुऱ्याउने प्रत्यक्ष एवम् सोझो सम्पर्क साधन भनेको सञ्चार माध्यम हो। त्यस्तै, कर्मचारी वर्ग सरकार र सञ्चार माध्यमबीचको सेतु पनि हो। छैठौं र सातौं परिच्छेद यिनै विषयमा केन्द्रित छन्।

आठौं परिच्छेदमा नेपालमा सूचनाको हक र व्यवस्थापकीय नीति तथा सुझावबारे उल्लेख गरिएको छ। नवौं परिच्छेदमा निष्कर्ष र सुझाव समेटिएको छ, जसमा लेखकले मन्त्रीदेखि लिएर सर्वसाधारण जनताको भूमिका कस्तो हुनुपर्छ भन्ने विषयमा आफ्नो राय दिनु भएको छ। अर्कोतिर गैरसरकारी संस्था र सरकारी संयन्त्रको दायित्व पनि निर्क्योल गर्नु भएको छ। यो परिच्छेद पढ्दा, विषयप्रति लेखकको रुची र तत्सम्बन्धी समस्या समाधानतर्फ उहाँको चिन्तन पक्ष झल्किएको छ।

प्रस्तुत पुस्तक सूचनाको हकसम्बन्धी जानकारी राख्न चाहने सबैलाई उत्तिकै उपयोगी सावित हुनेछ। ६० प्रतिशत नेपाली अशिक्षित भएको स्वीकार्नुहुने लेखकद्वारा वाणीविहीन नेपाली जनतामा समर्पित यो पुस्तक नेपाली भाषामा प्रकाशन गरिएको भए, धेरै पाठक लाभान्वित हुने थिए। शोधपत्रको आफ्नो सीमा हुनु स्वभाविकै हो। पुस्तकको नेपाली संस्करण प्रतिक्षित छ।

● *आभास शर्मा*

**मानवअधिकार सामान्य ज्ञानको उत्तर**

१. ग २. क ३. ग ४. ख ५. क ६. ख ७. घ ८. क ९. ख १०. क ११. ख १२. ग
१३. क १४. ख १५. ग १६. क १७. ख १८. घ १९. घ २०. क

# मुकुण्डो, मरनीदेवी र हाम्रा माध्यमहरु

केही वर्षअघि नेपाली चलचित्र जगत्ले एउटा राम्रो फिल्म पाएको थियो- "मुकुण्डो"। एउटा वृत्तका चलचित्रकर्मी र पारखीमाझ उक्त चलचित्रले राम्रै चर्चा र स्याबासी पाए पनि मूलधारको चलचित्र बन्न नसकेका कारण "मुकुण्डो" ले आशातित दर्शक पाउन सकेन। पृथक् धारको मार खेप्नु परेको थियो त्यो चलचित्रले। तर त्यस्तो चलचित्र बन्नु प्रशंसनीय कार्य ठानिएको थियो।

"मुकुण्डो" नेपाली समाजको



मुकुण्डो चलचित्रमा अभिनेत्री मिथिला शर्मा

तस्वीर थियो। जहाँ सामाजिक अन्यायको पराकाष्टा सहजै देख्न सकिन्थ्यो। काठमाडौं उपत्यकाभित्रको मुटु मैतिदेवीमा बोक्सीको आरोपमा एउटी महिलामाथि भएको पाशविक र पुरातनवादी अत्याचारको फिल्मीकरण थियो- "मुकुण्डो"। सरस्वती अधिकारीलाई बोक्सीको आरोपमा केही कथित धामीहरुले मृत्युवरण गर्न बाध्य तुल्याएको कहानी बुनिएको थियो सो चलचित्रमा। निकै नै मार्मिक थियो चलचित्र। जसमा नेपाली समाजमा गरिब, पिछडिएको र निम्नस्तरकी महिलामाथि गरिने सामाजिक भेदभाव र बर्बरताको सग्लो फेहरिस्त पस्किएको थियो।

हाम्रो समाज धेरै पुरातन मान्यताहरुले ग्रसित छ। सीमान्त तहका जनजीवनमा त अझै पनि परिवर्तनको झिल्को पर्न सकेको छैन। अन्धविश्वास, रुढिवादका जालोहरु सर्वत्र फैलिएका छन्। जसको प्रतिफल निम्न आयस्तर भएका महिलाहरुमाथि बोक्सीको आरोप लगाउने प्रचलन नै भएको छ।

नेपाली समाज बोक्सी लगाउने, बोक्सी बकाउने र त्यही आधारमा कसैको जीवन नै समाप्त पार्ने तहसम्म बेलाबखत ओर्लिने गरेको पाइएको छ। सामाजिक चेतना र विवेकको कमीका कारण यस्ता घटनाहरु भइरहेका छन् र कतिपय सामाजिक संरचनामा त व्यक्तिगत रिस र आवेगलाई मत्थर पार्ने हतियारको रुपमा पनि कसैमाथि बोक्सी लगाइने गरिएको पाइएको छ।

तर नेपाली समाज बोक्सीको पीडा भोग्न वाध्य भए पनि सृजनाको संसारमा रमाउनेहरुले यो ज्वलन्त विषयलाई, सामाजिक पीडालाई आफ्नो सृजनामा कमै सजाउने गरेका छन्। बोक्सीसम्बन्धी केही वृत्तचित्रहरु बने पनि आम दर्शकलाई अपिल गर्ने श्रव्यदृश्य माध्यमहरुमा "बोक्सी" ले स्थान पाउने गरेको देखिँदैन। नेपाल टेलिभिजनजस्तो राष्ट्रिय र सरकारी स्वामित्व रहेको प्रशारण संस्थाले पनि यो विषयलाई सकारात्मक ढंगले उजागर गर्न चासो प्रकट गरिरहेको पाइदैन। "मुकुण्डो" एउटा अपवाद बन्नपुग्यो, नेपाली सृजन धरातलमा। तर महोत्तरीकी मरनीदेवी आफ्नै आँगनमा कुटिँदा र कैयौं मरनीदेवीहरु आफ्नै दलानमा पोलिँदाका दर्दनाक दृश्य-बिम्बहरुलाई नेपाली कलामाध्यमले आफ्नो सृजन-परिधिमा भित्र्याउन सकिरहेको छैन। यो बिडम्बनाको पाटो हो।

साहित्यमा त झनै ओझेलमा परेको छ- बोक्सीसम्बन्धी घटना। मोटामोटा कुरा गरेर नथाक्ने नेपाली साहित्यले नेपाली समाजको एक ज्वलन्त र सामाजिक अन्यायको विशिष्ट रुप "बोक्सी" को विषयलाई सृजनको माध्यम बनाउन खोजेको देखिएको छैन। सामाजिक सरोकारका मुद्दाहरुमा कलम चलाउने सर्जकहरुले पनि बोक्सीको भयावहलाई आफ्नो लेखनीको विषय बनाउन नचाहिरहेको देखिन्छ।

कुनै महिलामाथि बोक्सीको आरोप लगाएर उसको सामाजिक प्रतिष्ठा र निजी



घाइते अवस्थामा मरनीदेवी

जीवनमा कुनै व्यक्ति वा समाजले धावा बोल्छ भने त्यो जति ठूलो मानवअधिकार हनन अरु केही हुन सक्दैन। एउटी महिलालाई बोक्सीको आरोप लगाउनु भनेको उसका सम्पूर्ण सामाजिक मूल्य, मान्यता र प्रतिष्ठाहरु ध्वस्त पार्नु हो। यो कुनै पनि सभ्य समाजका व्यक्तिहरुले गर्ने कुरा होइन। तर पनि हाम्रो समाजमा बेलाबखत मरनीदेवीहरुले यस्तै यातना भोग्नु परिरहेको छ। यसलाई मानवअधिकार उल्लंघनको विशिष्ट रुप ठानी सृजन कर्ममा लागेकाहरुले आफ्नो सृजनामा बोक्सीका नाममा महिलाहरुमाथि हुने पशुवत् अत्याचारका प्रसंगहरुलाई किन समेट्न नसकेका हुन् ? स्वभाविक देखिन्छ, यस्तो प्रश्न उठ्नु।

● *विवश वस्ती*

१. महिलाहरुको समान अधिकारको कुरा उठाउने पहिलो महिला को थिइन् ?
(क) बेलायतकी एग्लेण्टाइन जेव (ख) फ्रान्सकी ओलम्वेद गोउस (ग) बेलायतकी मेरी उल्सन्टोन क्राफ्ट
(घ) अमेरिकाकी सोजोमोर टुथ

२. आठ मार्चलाई अन्तर्राष्ट्रिय श्रमिक महिला दिवसको रुपमा कहिलेदेखि मनाउँदै आइएको हो ?
(क) सन् १९११ (ख) सन् १९१० (ग) सन् १९१३ (घ) सन् १९१७

३. कुन देशका महिलाहरुले हिटलर र मुसोलिनीको "महिलाहरु चुपचाप भान्सामा फर्क" भन्ने आदेशको विरुद्धमा विरोध प्रदर्शन गरेका थिए ?
(क) फ्रान्स (ख) टर्की (ग) इटाली (घ) बेलायत

४. नेपालमा कहिलेदेखि आठ-मार्च मनाउन शुरु गरिएको हो ?
(क) २०२७ साल (ख) २०३६ साल (ग) २०४५ साल (घ) २०४७ साल

५. पहिलो महिला विश्व सम्मेलन कहिले र कहाँ भएको थियो ?
(क) सन् १९७५ मेक्सिकोसिटी (ख) सन् १९७५ फ्रान्स (ग) सन् १९७५ इटाली (घ) सन् १९७५ नर्वे

६. महिलाहरुको चौथो विश्व सम्मेलन कहिले र कहाँ भएको थियो ?
(क) सन् १९९४ जेनेभा (ख) सन् १९९५ बेइजिङ (ग) सन् १९९४ कोपेनहेगेन (घ) सन् १९९४ इटाली

७. नेपालको इतिहासमा पहिलो महिला मन्त्री को हुन् ?
(क) पुण्यप्रभादेवी ढुंगाना (ख) मंगलादेवी सिंह (ग) साहना प्रधान (घ) द्वारिकादेवी ठकुरानी

८. सतिप्रथाको अन्त्य कहिले भएको थियो ?
(क) वि.सं. १९७७ (ख) वि.सं. १९८० (ग) वि.सं. १९९० (घ) वि.सं. १९९४

९. नावालिका तथा अन्य महिलालाई जवर्जस्ती करणी गर्नेलाई कस्तो सजाय हुन्छ ?
(क) १ वर्षदेखि ५ वर्षसम्म कैद (ख) ३ वर्षदेखि १० वर्षसम्म कैद (ग) २ वर्षदेखि ६ वर्षसम्म कैद (घ) ४ वर्षदेखि ५ र्षसम्म कैद

१०. मुलुकी ऐन एघारौं संशोधनले बाल विवाह गराउनेलाई कस्तो सजायको व्यवस्था छ ?
(क) ३ वर्ष कैद र १० हजार रुपैयाँ जरिवाना (ख) १ वर्ष कैद र ३ हजार रुपैयाँ जरिवाना (ग) ५ वर्ष कैद र ३ हजार रुपैयाँ जरिवाना (घ) १० वर्ष कैद र ५ हजार रुपैयाँ जरिवाना

११. नारीको राजनीतिक अधिकारसम्बन्धी महासन्धिलाई संयुक्त राष्ट्रसंघले कहिले पारित गरेको हो ?
(क) सन् १९४९ डिसेम्वर २० (ख) सन् १९५२ डिसेम्वर २० (ग) सन् १९५५ डिसेम्वर २० (ङ) सन् १९६६ डिसेम्वर २०

१२. नारीको राजनीतिक अधिकारसम्बन्धी महासन्धिलाई नेपालले कहिले हस्ताक्षर गरेको हो ?
(क) २० अप्रिल १९६७ (ख) २० अप्रिल १९६८ (ग) २० अप्रिल १९६६ (घ) २० अप्रिल १९६५

१३. नेपालमा महिला आयोगको स्थापना कहिले भएको हो ?
(क) वि.सं. ०५८ फागुन २४ (ख) वि.सं. ०५७ फागुन १४ (ग) ०५६ फागुन २४ (घ) वि.सं. ०५५ फागुन २४

१४. महिलाले स्वेच्छाले कति हप्तासम्म गर्भपतन गराउन पाउँछन् ?
(क) १४ हप्ता (ख) १२ हप्ता (ग) १६ हप्ता (घ) १० हप्ता

१५. मुलुकी ऐन २०२० एघारौं संशोधन कहिले भएको हो ?
(क) वि.सं. ०५६ (ख) वि.सं. ०५७ (ग) वि.सं. ०५८ (घ) वि.सं. ०५९

१६. महिलाविरुद्ध हुने सबै प्रकारका भेदभाव उन्मूलनसम्बन्धी अभिसन्धिमा नेपालले कहिले हस्ताक्षर गरेको हो ?
(क) २२ अप्रिल १९९१ (ख) २२ अप्रिल १९८८ (ग) २२ अप्रिल १९७८ (घ) २२ अप्रिल १९७७

१७. महिलाविरुद्ध हुने सबै प्रकारका भेदभाव उन्मूलनसम्बन्धी अभिसन्धिलाई संयुक्त राष्ट्रसंघले कहिले पारित गरेको हो ?
(क) २० डिसेम्वर १९६९ (ख) १८ डिसेम्वर १९७९ (ग) १८ डिसेम्वर १९८० (घ) १८ डिसेम्वर १९८८

१८. सयुक्त राष्ट्रसंघले महिला वर्षको रुपमा मनाउने घोषणा कहिले गरेको हो ?
(क) सन् १९६५ (ख) सन् १९६६ (ग) सन् १९७७ (घ) सन् १९७५

१९. नेपाल अधिराज्यको संविधान २०४७ को धारा ११४ मा प्रत्येक राजनीतिक दलहरुले प्रतिनिधिसभाको निर्वाचनमा कति प्रतिशत महिला उम्मेदवारी दिनुपर्ने व्यवस्था गरिएको छ ?
(क) ७ (ख) ८ (ग) ३ (घ) ५

२०. महिलाहरुको तेश्रो विश्व सम्मेलन कहिले र कहाँ भएको थियो ?
(क) सन् १९८५ मा केन्याको राजधानी नैरोवीमा (ख) सन् १९८५ मा डेनमार्कको राजधानी कोपेनहेगनमा
(ग) सन् १९८६ मा चीनको राजधानी वेइजिङमा (घ) सन् १९९० मा फ्रान्सको राजधानी पेरिसमा

उत्तर ४८ पेजमा

*प्रस्तुती : शिव खकुरेल*

# निष्पक्ष, तथ्यपरक र सन्तुलित हुने कुरामा ध्यान दिनु जरुरी छ



**बिनोद भट्टराई** खोज पत्रकारिता केन्द्रका निर्देशक हुनुहुन्छ। नेपाली टाइम्स साप्ताहिकका सम्पादक, नेपाल प्रेस इन्स्टिच्युटका निर्देशक र कान्तिपुर टेलिभिजनका समाचार प्रमुख रहिसक्नु भएका भट्टराई पत्रकारिता अध्यापनमा पनि संलग्न हुनुहुन्छ। नेपालमा अभिव्यक्ति स्वतन्त्रताको अवस्थाका बारेमा *प्रकाश ज्ञवाली*द्वारा गरिएको कुराकानी प्रस्तुत छ।

**अहिले नेपालमा अभिव्यक्ति स्वतन्त्रताको अवस्था कस्तो छ ?**

वर्तमान द्वन्द्व नहुने हो भने अभिव्यक्ति स्वतन्त्रताको अवस्था संसारका अन्य धेरै देशहरुभन्दा यहाँ राम्रो छ। संविधानमा नै अभिव्यक्ति स्वतन्त्रता र सूचनाको हकको व्यवस्था छ। व्यवहारिकरुपले हेर्ने हो भने, कानुन नभए पनि नेपालमा जति धेरै सूचनाहरु पाइन्छ, अन्य मुलुकमा पाउन गाह्रो हुन्छ। द्वन्द्व शुरु भइसकेपछि भने यसमा संकुचन भएको छ। तैपनि द्वन्द्वसम्बन्धी बाहेक अरु समाचारहरुमा कुनै रोकटोक छ जस्तो लाग्दैन।

**संकुचनको कारण के होला ?**

द्वन्द्वको अवस्थामा सूचना द्वन्द्वरत पक्षहरुको रणनीतिसँग गाँसिएको हुन्छ। कस्तो सूचना, कति दिने या नदिने भन्ने कुरा उनीहरुको रणनीति हो।

**आम मानिसको अभिव्यक्ति स्वतन्त्रताको अवस्था कस्तो छ ?**

बोल्नलाई अप्ठ्यारो होला तर के हदसम्म भन्ने कुरा छ। त्यसलाई पनि ठोसरुपमा भन्न मिल्दैन। के बोल्न अप्ठ्यारो ? हामीकहाँ कसले, के भनेको छैन र ? उदाहरणका लागि- राजतन्त्रकै बारेमा कुरा गर्ने हो भने पनि, भन्नेजति कुरा त भनि नै रहेका छन्। यस्ता कुरा गर्दा कुन ठाउँमा बसेर कसले गर्दैछ भन्ने हुन्छ। कतिपय व्यक्तिहरु जे मन लाग्यो त्यही बोलिरहेका छन्, केही भएको छैन। गाउँघरमा बोल्न अलिकति गाह्रो भइरहेको होला। द्वन्द्वको स्थितिमा दुवै पक्षले हतियार बोकेका छन्। हतियार बोकेपछि मान्छे अलिकति उन्मत्त हुन्छ। यसलाई समग्र सूचनाको हक र अभिव्यक्ति स्वतन्त्रतासँग गाँस्नुभन्दा पनि स्थानीय व्यक्तिहरुको संयमता कम भएको मान्नुपर्छ।

**पत्रकारहरु हत्या, गिरफ्तारी, बेपत्ता, अपहरणजस्ता घटनामा पीडित भएका छन् । यसलाई कसरी हेर्नु भएको छ ?**

एउटा त द्वन्द्वरत पक्षहरु बन्दुकका कारण उन्मत्त भएर "यही नै सबै हो" भन्ने भावनाले प्रेरित भएका कारणले हुनसक्छ। अर्कोचाहिँ पत्रकारहरुको लेखाईसँग सम्बन्धित हुनसक्छ। पत्रकारहरुले द्वन्द्वको बेलामा लेख्दा विचार गर्नुपर्ने हुन्छ। कुनै शब्दको प्रयोगले पनि कुन पक्षको हो भन्ने थाहा हुन्छ। निष्पक्ष हिसाबले र पत्रकारिताका धर्महरु निर्वाह गरेर लेख्यो भने हामी कम खतरामा पर्छौंजस्तो लाग्छ।

**स्वतन्त्रता र दायित्वबीचको सन्तुलन कसरी कायम हुनसक्ला ?**

यसलाई घटना र विषयमा आधारित हिसाबले हेर्नुपर्छ। हामीलाई स्वतन्त्रता चाहिन्छ। घटनास्थल वा समाचारको श्रोतसम्म निर्वाधरुपले जान पाउनुपर्छ किनभने त्यसो नगरिकन अरु जनताको लागि सूचनाको सम्वाहक बनेर काम गर्न सकिँदैन। द्वन्द्वरत दुवै पक्षहरुले हामीलाई त्यो हदसम्म स्वतन्त्रता दिनुपर्छ। कुनै घटना भएपछि हामी तत्काल जान सकेनौं भने पनि त्यसको भोलीपल्ट, पर्सीपल्ट गएर तथ्य बुझी सूचना दिनसक्छौं। त्यसो गर्दा

द्वन्द्वरत पक्षहरुले निर्वाधरुपले कुनै ठाउँमा जाने, अवलोकन गर्ने र त्यहाँ गएर मानिसहरुसँग कुराकानी गरेर लेख्न सक्ने अवस्थाचाहिँ कायम गरिदिनुपर्छ। त्यसपछि आफूले लेखेको कुरामा हामी पत्रकार आफैं जिम्मेवार हुनुपर्छ। लेख्दाखेरी जहिले पनि निष्पक्ष, तथ्यपरक र सन्तुलित हुने कुरामा मुख्य ध्यान दिनु जरुरी हुन्छ।

**पत्रकारहरुमाथि द्वन्द्वरत पक्षहरुको व्यवहार कस्तो छ ?**

मेरो व्यक्तिगत अनुभव त्यस्तो नभए पनि द्वन्द्वरत पक्षहरुद्वारा बेला-बेलामा निश्चित ठाउँमा जान बाधा खडा गरिएको, पत्रकारहरुलाई अपहरण गरेको र मारेकोसम्म अवस्था छ। यस्ता व्यवहारमा सुधार हुनैपर्छ। त्यसमा प्रश्न नै छैन। यस्ता व्यवहारहरु एकप्रकारले घटनाप्रधान, ठाउँप्रधान देखिन्छन्। यस्ता घटनाहरुमा पनि एकै खालको स्वरुप देखिँदैन। मेरो विचारमा दुवै पक्ष जनताको मन जित्न लागिपरेका छन्। तर, थोरै सूचना पाएका मानिसले गरेको निर्णयभन्दा पूर्ण समाचार/सूचना भएको अवस्थामा जितेको मन बलियो हुन्छ। दुवै पक्षले त्यो स्वार्थमा पत्रकारहरुलाई निर्वाध समाचार संकलन र सम्प्रेषणका लागि आवत-जावत र नडराइकन आफ्नो काम गर्न सक्ने अवस्था बनाउनुपर्छ।

**पत्रकारहरुले पालना गर्नुपर्ने कुराहरुको सन्दर्भमा, पत्रकार आचारसंहिता पनि संशोधन गर्नुपर्छ भन्ने तर्क पनि सुनिन्छ। यसलाई कसरी लिनु भएको छ ?**

गम्भीर हिसाबले निष्पक्ष, तथ्यपरक र सन्तुलित काम गर्छु भनेर लाग्ने हो भने आचारसंहिताका कुराहरु पनि समेटिन्छन्। हामीकहाँ अहिले विद्युतीय सञ्चार माध्यम नयाँ भएर आएको छ। पाठक या श्रोताहरुमा यिनीहरुको असर फरक हुन्छ। जस्तो रेडियो र २४ घण्टे टिभीमा जे पनि तुरुन्तै थाहा हुनसक्छ। अहिले आचारसंहिता बनाएर विशेष गरी टेलिभिजनमा कस्ता दृश्य देखाउने, कस्ता दृश्य नदेखाउने भन्ने छलफल पनि प्रारम्भ भएको छ। हाम्रो देशमा टेलिभिजनको लाइसेन्स दिएपछि सरकारको जिम्मेवारी सकिन्छ। टिभी, विज्ञापन आदिको 'कन्टेन्ट रेगुलेसन' छैन। यस्ता विषयहरुमा ढिलो-चाँडो आचारसंहिता बनाउने वा संशोधन गर्ने आदि गरिएन भने या सरकारले गर्छ या त भोली संसद आइसकेपछि अरु देशमा जस्तो एउटा स्वतन्त्र संस्था बन्छ। त्यस्तो संस्थाको बारेमा हामीकहाँ अहिलेसम्म कसैले कुरा गरिएको छैन। त्यस्तो संस्था संसदप्रति उत्तरदायी हुन्छ किनभने आफूले पनि रेडियो, टेलिभिजन चलाएको अवस्थामा सरकारले आफूले आफैलाई रेगुलेट गर्न सक्दैन। यी कुराहरुको बारेमा अब नयाँ बहस शुरु गर्नुपर्ने हुन्छ। संसारमा विभिन्न उदाहरणहरु छन्। हामीलाई मिल्दो, सुहाउँदो के छ, त्यसलाई हामी समेट्न सक्छौं। अहिलेलाई पत्रकार महासंघले शुरुवात गऱ्यो भने यही कुरालाई पछि गएर संस्थागत गर्नुपर्ने हुन्छ।

**कानुनी हिसाबले अरु मुलुकको तुलनामा अभिव्यक्ति स्वतन्त्रताको अवस्था कस्तो छ ?**

अहिलेसम्म अभिव्यक्ति स्वतन्त्रतालाई नै आधार बनाएर कसैलाई बन्द गराइएको छैन। आफूलाई लागेको कुरा भनेकै आधारमा कसैलाई थुनेको छ जस्तो लाग्दैन। यसो गर्नेबित्तिकै सरकारको आधार नै हुँदैन। अदालतमा जानुपऱ्यो भने आधार हुनुपर्छ। द्वन्द्वको बेलामा भने स्पष्ट आधार हुँदैन। उदाहरणका लागि आतंककारी तथा विध्वंसात्मक कार्य (नियन्त्रण तथा सजाय) जस्तो अध्यादेश बनाएर त्यसमा गोलमटोल हिसाबले परिभाषित गरिएको छ। यस्ता विधेयक या ऐन ल्याएर अरु-अरु हिसाबले समाइरहेको छ। अभिव्यक्ति स्वतन्त्रताको आधारमा नभएर फलानोको मतियार भन्ने आधार बनाइएको हुन्छ। यो गलत छ। अहिलेको संशोधन झनै गलत छ भन्ने कुरा त बाहिर आइरहेका छन्।

**अभिव्यक्ति स्वतन्त्रताका सम्बन्धमा संविधान र कानुनमा गरिएका व्यवस्थाहरुको कार्यान्वयन कस्तो देख्नु भएको छ ?**

द्वन्द्वको अवस्थामा सूचनालाई सबैले आफ्नो रणनीतिको रुपमा लिने भएकाले संविधानले दिएका हकहरुलाई संकुचन गर्न विभिन्न खालका कानुन ल्याउने गरेको पाइन्छ। उदाहरणको रुपमा हाम्रो देशमा माथि भनिएजस्तो आतंककारी तथा विध्वंसात्मक कार्य (नियन्त्रण तथा सजाय) अध्यादेश टाडो छ। यसले गरेको व्याख्याअनुसार जे कामलाई पनि आतंककारीको परिभाषाभित्र पार्न सकिने खालको छ। आतंककारीको मतियार भन्ने कुरालाई कसरी परिभाषित गर्ने ? मसित आतंककारी दस्तावेज छ र मसँग भेटियो रे। त्यसकै आधारमा म मतियार भएँ त ? मैले त्यो पक्षका कुराहरु बुझ्न, उनीहरुका काम, नीति के रहेछन् भनेर विश्लेषण गर्न राखेको हुँ कि ? यस्ता पक्षलाई पूरै बेवास्ता गरेर त्यस्ता दस्तावेज भेटिएकै आधारमा मान्छेलाई गिरफ्तार गर्नु गलत हो। पहिलो पटक यो विधेयक आउँदा संसद थियो। त्यतिबेला सांसदहरुले उक्त विधेयक पास गर्दा यस्ता कुराहरुलाई स्पष्ट पार्नुपर्थ्यो। त्यसपछि संशोधन गर्दा पनि यी कुराहरु स्पष्ट पारिनुपर्थ्यो। कानुनमा यस्ता खालका शब्दहरु राखेपछि लागू गर्नेहरुको हात बलियो हुनजान्छ। टाडोमा शुरुको पटक जुन शब्दहरु थिए, अहिले पनि तिनै छन्। थुन्न सक्ने म्याद बढाईदिएको छ।

●

# राष्ट्रिय दादुरा खोप अभियान २०६१/६२

## ९ महीनादेखि १५ वर्ष मुनिका सबै बाल-बालिकाहरूलाई दादुरा खोप लगाऔं





**दादुरा खोप पहिले लगाएकाहरूले पनि लगाऔं**
**नलगाएकाहरूले त झनै नछुटाऔं**





unicef

का. जि. का. द. नं. २१/४९/५०

# नेपालमा पहिलो

# मानवअधिकार समाचार अनलाइन




## नेपाली र अंग्रेजी भाषामा

## www.inseconline.org

मानवअधिकारसम्बन्धी विविध
समाचारहरु समेटिएको
यस वेबसाइटमार्फत्
देशको मानवअधिकार स्थितिको ताजा
जानकारी लिनुहोस् ।

BY AIRMAIL